प्रकाशक : साझा प्रकाशन
संस्करण : पहिलो, २०६० (११०० प्रति)
आवरणकला : टेकवीर मुखिया
मूल्य : रु. १०७–
मुद्रक : साझा प्रकाशनको छापाखाना, पुलचोक, ललितपुर
फोन : ५५२१०२३, फ्याक्स : ५५४४२३६
ISBN: 99933-2-343-8

# प्रकाशकीय

गोरखा भाषा प्रकाशिनी समितिबाट रूपान्तरित नेपाली भाषा प्रकाशिनी समितिको उत्तराधिकारीको रूपमा भाषा-साहित्यको विकासमा महती सेवा पुऱ्याउने उद्देश्य लिएर स्थापित साझा प्रकाशनले आफ्नो स्थापनाकालदेखि नै देशभरिका अनेक लेखक-साहित्यकारहरूका उत्कृष्ट ग्रन्थहरूको प्रकाशन गर्दै आइरहेको कुरा सर्वविदित छ । विभिन्न पक्ष, आयाम र दृष्टिकोणहरूबाट प्रकाशन गर्न योग्य ठहर भएका र नेपाली साहित्यको श्रीवृद्धिमा टेवा पुऱ्याउन सक्ने नयाँ र पुराना लेखक-साहित्यकारहरूका कृतिहरूको प्रकाशन गरेर राष्ट्रको सबभन्दा ठूलो प्रकाशन साझा प्रकाशनले आफ्नो ठाउँमा गरेको योगदान उल्लेख्य छ नै । नेपाली भाषा प्रकाशिनी समितिको उद्देश्य बोकेर हिँडिरहेको साझा प्रकाशन प्रकाशनको माध्यमबाट बौद्धिक विकासमा सक्रिय रही योगदान गर्दै आएको संस्था भएकाले यसले भाषा र साहित्यका विभिन्न विधामा अनेकौं महत्त्वपूर्ण पुस्तकहरूको प्रकाशन गरी प्रकाशनको इतिहासमा नयाँ प्रतिमान स्थापित गरिसकेको छ ।

देशभरि रहेका प्रतिभाहरूको भाव, भाषा र अनुभूतिलाई लिपिमा राखी सुरक्षित गर्ने र नेपाली साहित्यको संरक्षण गर्दै लाने ध्येयका साथ अगाडि बढिरहेको साझा प्रकाशन साहित्य, सङ्गीत, कलाको विकास गर्ने लक्ष्यमा पुग्न आफ्नो क्षमताले भ्याएसम्म पुस्तक प्रकाशन गर्ने आफ्नो उत्तरदायित्व वहन गर्दै आइरहेछ । साझा प्रकाशन देशभरिका लेखकहरूको साझा भएकाले यसको ध्येय बहुआयामिक र उद्देश्यमूलक हुनु सर्वथा महत्त्वपूर्ण पक्ष हो ।

साहित्य समाजको प्रतिबिम्ब हो । स्रष्टाहरू साहित्यका मार्फत मानवीय संवेदना तथा भावानुभूतिहरूलाई समाजअगाडि राख्दछन् । साहित्यको शाश्वत पक्ष यही हो । देशको बदलिँदो परिस्थितिमा स्वतन्त्रताको उपयोग र अभ्यास गरिरहेका जनताका अनेकन् आकाङ्क्षा र रुचिलाई ध्यानमा राखी देशमा सांस्कृतिक, साहित्यिक र शैक्षिक जागरण अभिवृद्धि गर्दै अनेक आयामबाट योगदान पुऱ्याउने काममा अहम् भूमिका निर्वाह गर्न सक्ने साझा प्रकाशन वाङ्मयका अनेक क्षेत्रमा क्रियाशील छ र यसले नयाँनयाँ ग्रन्थहरूको प्रकाशन गर्दै आइरहेछ ।

यस सन्दर्भमा यस पटक हामीले डा. वीणा पौडयालको संस्कृतिसम्बन्धी अनुसन्धानात्मक ग्रन्थ **काठमाडौँ उपत्यकाका प्रमुख उमामहेश्वर र भैरव मूर्तिहरू** पाठकमाऊ राखेका छौँ । प्रस्तुत ग्रन्थ खास गरेर नेपाली संस्कृति र मूर्तिकलामा रुचि राख्ने जिज्ञासुका साथै विद्वान् अनुसन्धातासम्म सबैका लागि तथा सम्बन्धित विषयका सबै तहका विद्यार्थीहरूका लागि सान्दर्भिक पाठयसामग्रीका रूपमा सहयोगी र उपयोगी हुनेछ भन्ने आशा एवं विश्वासका साथ प्रस्तुत ग्रन्थप्रकाशनको अवसर हामीलाई दिनुभएकोमा हामी विदुषी लेखिकाप्रति कृतज्ञता व्यक्त गर्दछौँ ।

चैत, २०६०

**साझा प्रकाशन**

# समर्पण

नेपाली पत्रकारिताको इतिहासका विशिष्ट प्रतिभात्रय पूजनीय जिजुहजुरबुबा चिरञ्जीवी शर्मा पौड्याल, हजुरबुबा प्रेमराज शर्मा पौड्याल तथा बुबा रामराज पौड्यालप्रति प्रस्तुत ग्रन्थ सादर समर्पण गर्दछु ।

वीणा पौड्याल

# भूमिका

नेपाल प्राचीन संस्कृतिको समृद्ध थलो हो । विशेष गरी हिमवत्खण्डको संस्कृतिको सूक्ष्म थलो हो । नेपालमा प्राचीन समयदेखि अग्निपूजा र लिङ्गपूजा प्रचलनमा छ । वैदिक र तान्त्रिकले समानरूपले मानिआएका देवता शिव नै हुन् । मन्दिरैमन्दिर र मूर्ति नै मूर्तिको देशमा सर्वत्र मन्दिरभित्र र बाहिर पनि मूर्ति र प्रतीकात्मक लिङ्गका रूपमा पूजाअर्चना र दर्शन गरिने देवता पनि शिव नै हुन् । आध्यात्मिक दर्शन र योगसाधनाका प्रवर्तक पनि शिव नै हुन् । भैरवका साथै शिव कालका पनि काल महाकाल हुन् र समस्त सृष्टि पनि उनैमा विलीन हुन्छ । उनै शिव अर्धनारीश्वरस्वरूपमा पनि विराजमान छन् ।

चेतभन्दा पनि परको चेतले सिर्जिने मूर्तिहरू स्वप्नका बिम्बजस्तै हुन्छन् र सङ्केतको आदिम भाषामा हृदयको शाश्वत सन्देश बोल्छन् । हामीले हस्तपूजा गरेर, शुद्ध भएर कुँदेको मूर्ति वा चित्रमा अन्तरसौन्दर्य, मानवीय मूल्य र उच्च आध्यात्मिक दृष्टि पनि पाउँछौँ । यसैले गर्दा नै आज विज्ञानको दृष्टि हाम्रो देशको संस्कृतितिर आकृष्ट भएको छ ।

युनेस्कोले कयौँ सांस्कृतिक र पुरातात्त्विक सम्पदालाई विश्वसम्पदासूचीमा समावेश गरेको छ । कयौँ विदेशी विद्वान्हरूले भयङ्कर दुर्गममा पुगेर पनि नेपाली संस्कृतिको अध्ययन-अनुसन्धान गरिरहेछन् ।

**काठमाडौँ उपत्यकाका प्रमुख उमामहेश्वर र भैरवमूर्तिहरू** शीर्षक पुस्तककी लेखिका हुन् सह-प्राध्यापक डा. वीणा पौडेल । उनले वनारस हिन्दू विश्वविद्यालयबाट मूर्तिकला विषयमा विद्यावारिधि गरेकी छन् । उनले यसभन्दा पहिले **नेपाली मूर्तिकला र चित्रकला, सर्वेश्वर महादेव** र **हिन्दू डेथ राइटस्** नामक तीनवटा पुस्तक प्रकाशित गरिसकेकी छन् । विदुषी वीणाले व्यापक खोजी र गहन अध्ययनसाथ प्रस्तुत पुस्तक तयार पारेकी छन् । जतिजति अध्ययन गर्‍यो त्यतित्यति गम्भीर बन्दै जाने विषय पनि सरल भाषाशैलीका साथै रेखाचित्र र चित्रहरूद्वारा सुबोध बनाउन सकेकी छन् । यस पुस्तकले विज्ञहरूबाट उचित मूल्याङ्कन पाउनेछ भन्नेमा पूर्ण आशा लिएको छु । यति उपयोगी पुस्तककी लेखिका डा. वीणा पौडेलप्रति हार्दिक धन्यवादसहित शुभाशिष प्रदान गर्न चाहन्छु ।

**—माधव घिमिरे**

# आमुख

मूर्तिकला नेपाली संस्कृतिको महत्त्वपूर्ण विधा हो । धर्मशास्त्र र प्रतिमाविज्ञानद्वारा निर्देशित नेपाली मूर्तिकलाले नेपालका सिपालु कलाकारको सीप र भावना मूर्तिका माध्यमबाट सुन्दर ढङ्गले व्यक्त गरेको छ ।

नेपाली मूर्तिकलाले नेपाल र नेपालीलाई विदेशमा चिनाउन महत्त्वपूर्ण भूमिका खेलेको छ । मानवअभिव्यक्तिका विविध माध्यममध्ये कला एउटा सशक्त माध्यम हो । प्रस्तरयुगका मानिसले पनि आफ्नो अभिव्यक्ति कलाको सिर्जनाद्वारा गरेका प्रमाण थुप्रै छन् । स्पेनको अल्टामिरा र दक्षिण फ्रान्सको लास्को गुफाहरूमा सोह्र-सत्र हजार वर्षअघिका मानिसले बनाएका चित्रहरू सुरक्षित छन् ।

हामीकहाँ देवमूर्ति वा अन्य मूर्ति बनाउँदा स्त्री वा पुरुष मोडेल प्रयोग गर्ने चलन छैन, तर यसको ठीक विपरीत प्राचीन ग्रिक कलाकारहरूले भने देवमूर्ति बनाउँदा मनुष्यको मूर्ति स्त्री वा पुरुष मोडेल (नमुना) को प्रयोग गरेको देखिन्छ ।

पूर्वीय कलाकारको मुख्य उद्देश्य आफ्नो कलामा अन्तरात्माको प्रस्तुति हो, शारीरिक सौन्दर्य प्रस्तुति यसको उद्देश्य होइन । त्यसैले पूर्वका कलाकारहरूले कुनै मानिसको मूर्ति बनाउँदा उसको शरीरका विभिन्न भागहरू जस्ताको तस्तै बनाउनभन्दा बढी मिहिनेत उसको अन्तस्करणको मूल भाव व्यक्त गर्न बिताउँछन् ।

**चित्रसूत्र**मा प्रस्टसँग भनिएको छ– जुन कलाकारले सुतेको र मरेको मान्छेको फरक देखाउन सक्तैन, त्यो कलाकार होइन ।

परम्पराप्रधान पूर्वीय कला (नेपाली, भारतीय र तिब्बती) बाह्यरूपमा सधैं उस्तै देखिन्छ । यसको विशेष सम्बन्ध शैलीसँग हुन्छ । मूर्तिको बाह्यस्वरूप नै शैली हो । उपयोगितावादी दृष्टिकोण नभएकाले मूर्ति आफ्नो सम्पूर्ण रूपमा परिवर्तनशील छैन । धार्मिक विषयवस्तु र परम्परालाई पछ्याउने बानीले गर्दा हाम्रो कलाकृतिमा सारै ठूलो हलचल ल्याउने परिवर्तन भने भएको देखिँदैन । एउटा महत्त्वपूर्ण कुरा के छ भने विभिन्न नियममा बाँधिएको भए पनि कलाकारले आफ्नो स्वतन्त्र विचारको प्रयोग चित्रकला, मूर्तिकला र वास्तुकलामा गरेको देखिन्छ । नेपालमा लौकिक जीवनसँग सरोकार राख्ने, पारिवारिक वातावरण झल्काउने मूर्तिहरू/चित्रहरू पनि विभिन्न प्रयोजनका लागि बनेका देखिन्छन् । पूर्वीय कलाको दार्शनिक पक्ष र निर्माणविधानबारे विस्तृत ढङ्गले वर्णन गरिएका पुस्तक सारै थोरै छन् । छरपस्ट रहेका स्रोतबाट हामीले यी कुरा जम्मा पार्नुपर्दछ ।

छैटौं शताब्दीमा वराहमिहिराचार्यले रचना गरेको **बृहत्संहिता** पुस्तक मूलत: ज्योतिषशास्त्रसम्बन्धी ग्रन्थ भए पनि यसमा प्रतिमा स्थापना र लक्षणबारे निर्देशन दिइएको छ । त्यस्तै नवौं शताब्दीको **मयमत ग्रन्थ**, **मयदीपिका**, **मयमत प्रतिष्ठातन्त्र**, **मयमतशिल्पशास्त्र विधान**, **मयसङ्ग्रह** आदि पुस्तकमा वास्तुशास्त्र र मूर्तिकला दुवैको उल्लेख छ । छैटौं-सातौं शताब्दीताकाको **विष्णुधर्मोत्तरपुराणमा** मूलत: सृष्टि, विविध व्रतहरू, शङ्करगीता, हंसगीताका साथै तृतीय खण्डमा प्रतिमा र चित्र स्थापनाविधानबारे विस्तृत वर्णन छ । एघारौं शताब्दीमा भोजद्वारा रचित **समराङ्गणासूत्रधार**, बाह्रौं शताब्दीको भुवनदेवले रचना गरेको **अपराजितपृच्छा**, पन्ध्रौं शताब्दीमा रचना गरिएको सूत्रधारमण्डनको **रूपमण्डन**मा पनि वास्तु र मूर्तिसम्बन्धी निर्देशन सङ्कलित छन् ।

यस पुस्तकको लेखन, प्रकाशनमा धेरैको शुभेच्छा र प्रेरणा प्राप्त भएका छन् । मलाई लेखन, पढ्न मार्गनिर्देशन गर्ने र हौसला प्रदान गर्ने सबै अग्रजहरूलाई यो आमुखमार्फत नै कृतज्ञता ज्ञापन गर्दछु ।

यस पुस्तकको भूमिका लेखेर पुस्तककै गरिमा बढाइदिएकोमा राष्ट्रकवि श्री माधव घिमिरेज्यूप्रति आभार व्यक्त गर्दछु । उमामहेश्वर र भैरवसम्बन्धी अध्ययन-अनुसन्धान गर्न मद्दत गर्ने मा.सा.अ.सं. डीनको कार्यालय र अनुसन्धान महाशाखाप्रति म हृदयदेखि नै कृतज्ञ छु । ने.इ.सं. तथा पुरातत्त्व केन्द्रीय विभाग, त्रि.वि.का मेरा पूज्य गुरुहरू र मेरा सहपाठीहरू सबैले अध्ययन-अनुसन्धान र लेखनकार्यमा हौसला दिएकोमा धन्यवाद व्यक्त गर्दछु ।

पाण्डुलिपिको रूपमा रहेको यस पुस्तकलाई प्रकाशन गर्ने जिम्मा लिने साझा प्रकाशनप्रति हृदयदेखि आभारी छु । पुस्तकको आकर्षक आवरणका लागि टेकवीर मुखियाज्यूलाई धन्यवाद टक्र्याउँछु । विभिन्न पुस्तक र अन्य पाठ्यसामग्री उपलब्ध गराइदिने जोशी रिसर्च सेन्टर, केशर पुस्तकालय, मदन पुरस्कार पुस्तकालय र त्रि.वि. केन्द्रीय पुस्तकालय परिवारप्रति कृतज्ञता ज्ञापन गर्दछु ।

पुस्तकमा समाविष्ट रेखाचित्र कोर्ने त्रि.वि. संस्कृति केन्द्रीय विभागकी उपप्राध्यापक पुनम राणा, चित्रहरूका लागि पुरातत्त्व विभाग, वसन्त महर्जन र वर्षा घिमिरेलाई धेरैधेरै साधुवाद दिन्छु । अध्ययन गरिएका पुस्तकहरू पादटिप्पणी र सन्दर्भग्रन्थमा उल्लेख गरिएका छन् , तापनि कुनै छुटफुट हुन गएका पुस्तकका लेखक, सम्पादकप्रति यसै आमुखमार्फत धन्यवाद टक्र्याउँछु ।

अन्त्यमा व्यावहारिक चाँजोपाँजो मिलाई मलाई लेखन, पढ्नमा हौसलासाथ सहयोग प्रदान गर्ने मेरा श्रीमान् विनोद घिमिरे, छोरी वर्षा र छोरा विशाललाई साधुवाद दिन्छु ।

**डा. वीणा पौड्याल**

# विषयसूची

# अध्याय : एक
# परिचय

नेपाली इतिहास/संस्कृति, पुरातत्त्व, कला र वास्तुकलाका विभिन्न पक्षहरूको खोजखबर, अनुसन्धान, उत्खनन र प्रकाशन अत्यावश्यक कार्य हो । काठमाडौँ उपत्यकाभित्र विभिन्न यस्ता मन्दिर, मठ, विहार, स्तूपहरू छन्, जसको अध्ययन एउटा खुला सङ्ग्रहालयको रूपमा गर्न सकिन्छ ।

नेपालको प्राचीन लोकप्रिय धर्मको रूपमा शैव धर्म रहेको छ । यो धर्म विश्वकै प्राचीनतम धर्म हो । शैव धर्मको विस्तारसँग अध्ययन गर्दा एउटा कुरो प्रस्ट देखिन्छ, त्यो हो शैव धर्म एउटा मात्रै सम्प्रदाय नभएर विभिन्न सम्प्रदायहरूको एउटा पिण्ड नै हो । विभिन्न ग्रन्थहरूको अध्ययन र विद्वान्हरूको भनाइबाट एउटा निष्कर्ष यस्तो निकाल्न सकिन्छ, आर्य र अनार्य दुवैले मानेका देवता शिव थिए । देवगण र राक्षसगण दुवैले पुज्ने देवता शिव थिए । रामायणमा पुरुषोत्तम राम र दशानन रावण दुवैले शिवको आराधना, पूजा गरेको प्रसङ्ग छ । पौराणिक ग्रन्थहरूमा शिवलाई योगीराजको रूपमा वर्णन गरिएको छ । सम्पूर्ण देवताहरूको भलाइका लागि शिवले गृहस्थाश्रममा प्रवेश गर्ने निर्णय गरे । चार आश्रममध्ये महत्त्वपूर्ण आश्रम गृहस्थाश्रमको महत्त्व बुझेर शिवले पर्वतपुत्री पार्वतीसँग विवाह गरे । शिवलाई परिवारसँगै दर्साउने मूर्ति नै उमामहेश्वर मूर्ति हो । यस्तो मूर्तिमा शिवलाई पत्नी पार्वती, छोरा गणेश र कुमार एवं गणहरूसँगै पारिवारिक वातावरणमा देखाइन्छ ।

नेपालमा कलाकारले मन पराएका विषयवस्तुमा उमामहेश्वर र भैरवको मूर्तिफलक कुँद्ने परम्परा पर्दछ । काठमाडौँ उपत्यकामा जताततै उमामहेश्वर र भैरवका मूर्तिहरू छन् । प्रस्तुत अनुसन्धान 'काठमाडौँ उपत्यकाका प्रमुख उमामहेश्वर र भैरव मूर्तिहरू' नेपालमा उमामहेश्वर र भैरवका मूर्तिको उपासनापरम्पराको विस्तृत अध्ययन गर्ने योजनाको प्रथम भागको रूपमा तयार गरिएको हो । प्रस्तर, काठ, माटोबाहेक धातु र हस्तलिखित ग्रन्थ, पौबाचित्रमा पनि उमामहेश्वर र भैरव मूर्ति एवं चित्र बनाउने परम्परा छ । प्राचीन राम्रा, बहुमूल्य उमामहेश्वर र भैरव मूर्तिहरू टुटफुट भएर, हराएर जाँदै छन् । त्यसैले जनचेतना जगाउन पनि भैरव र उमामहेश्वरका बारेमा अनुसन्धान गर्न वाञ्छनीय देखेर यो अनुसन्धान गरिएको हो ।

शैव धर्म प्राचीन नेपालमा प्रचलित धर्महरूमध्ये एउटा लोकप्रिय धर्म मानिन्छ । लामो समयको क्रममा यो धर्मका विभिन्न हाँगाहरू फैलिए ।

**स्थिरः स्थाणुः प्रभुर्भीमः प्रवरो वरदो वर**

**सर्वात्मा सर्वविख्यात : सर्वः सर्वकरो भवः ॥**

यसरी चञ्चलतारहित, समस्त जगत्का आधारस्तम्भ, समर्थ ईश्वर, भयङ्कर, सर्वश्रेष्ठ, वर दिने, वरण गर्न योग्य, सबैको आत्मा, सर्वत्र प्रसिद्ध, सर्वस्वरूप सम्पूर्ण जगत्को स्रष्टा, सबैको उत्पत्तिको स्थान आदि नामद्वारा शिव पुकारिन्छन् ।

नेपालको प्रामाणिक इतिहास इ.स. ४६४ देखि प्रारम्भ हुन्छ । लिच्छविकालको नामले प्रसिद्ध यो युगभन्दा पहिले पनि किरातवंशको शासन काठमाडौं उपत्यकामा थियो । किरातहरू शिवभक्त भएको प्रसङ्ग धार्मिक ग्रन्थहरूमा यत्रतत्र भेटिन्छ ।

वेदमा भयावह रुद्रको नामबाट स्तुति गरिएका शिव बिस्तारै कल्याणकारी देवताको रूपमा स्थापित हुन गए । पशुका मालिक पशुपति र कालका पनि काल महाकाल भनेर पुकारिन थाले । धार्मिक ग्रन्थमा वर्णन गरिएका रूपअनुरूप नै शिवका चित्र र मूर्तिहरू बन्न थाले । शिवका संहार मूर्ति र सौम्य मूर्तिका विभेदमा भैरव मूर्ति संहारकारी मूर्तिमा र उमामहेश्वर सौम्य मूर्तिमा पर्दछन् ।

नेपाली संस्कृतिका विविध पक्षबारे स्वदेशी र विदेशी विद्वान्हरूले थुप्रै ग्रन्थहरू रचेका छन् । संस्कृतिका विभिन्न क्षेत्र ओगट्ने पुस्तकहरूका माऊमा सधैं नै कला, चित्रकलाबारे विस्तृत वर्णन भएको पुस्तकको अभाव महसुस भइराखेकै छ । तैपनि शैव कलापक्ष समेटेका केही प्रमुख पुस्तकहरू यस प्रकार छन् ।

१. 'प्रतिष्ठालक्षणसार समुच्चयः' (बुद्धिसागर पराजुली सं.) नामक पुस्तक २०२३ सालमा नेपाल राजकीय पुस्तकालयबाट प्रकाशित भएको छ । संस्कृत भाषामा निस्किएको यो पुस्तकमा विभिन्न प्रतिमा स्थापना गर्ने नियम, लक्षण बताइएको छ । प्रथम भाग र द्वितीय भाग गरेर दुईवटा खण्डमा प्रकाशित यो पुस्तकमा शिवलिङ्ग स्थापनासम्बन्धी वर्णन प्राप्त भए पनि उमामहेश्वर र भैरवका बारेमा बेग्लै उल्लेख छैन ।
२. 'रूपमण्डन' २०२१ सालमा बलराम श्रीवास्तवद्वारा सम्पादित भएर प्रकाशित भएको पुस्तक हो । मेवाडका राणा कुम्भाको प्रधान सूत्रधारमण्डनद्वारा सङ्कलित ग्रन्थ 'रूपमण्डन' मा अधिकांश भाग 'अपराजितपृच्छा' र 'मत्स्यपुराण' बाट लिइएको छ । प्रतिमा स्थापना गर्ने विधान र मूर्तिहरूको लक्षण विचार गर्न यो पुस्तक सारै नै उपयोगी छ । शैव मूर्तिहरूको यसमा उल्लेख भए तापनि काठमाडौं उपत्यकाका उमामहेश्वर र भैरव मूर्तिको चर्चा भने छैन ।
३. गोविन्दप्रसाद भट्टराईद्वारा लेखिएको 'मूर्तिकला' नामक पुस्तक सानो भए पनि सारै नै उपयोगी पुस्तक हो । २०४१ सालमा प्रकाशित यो पुस्तकमा नेपाली मूर्तिकलाबारे धेरै नै नयाँ तथ्यहरू समावेश छन् । यो पुस्तकको विशेषताको रूपमा मूर्तिको लक्षण शास्त्रीय लक्षणसँग भिडाएर मूर्ति चिनाउने प्रयत्नलाई मान्नुपर्दछ । पुराण र तन्त्र दुवैका आधारमा बनेका उमामहेश्वर र भैरव मूर्तिका

नाम पनि भट्टराईले उल्लेख गरेकाले अनुसन्धानका लागि सजिलो भएको छ ।

४. Image of Nepal नामक पुस्तक भारतीय विद्वान् कृष्णदेवले १९८४ मा प्रकाशित गरेका हुन् । यो पुस्तकमा नेपालका मूर्तिहरूबारे सारै राम्रो विवेचना दिइएको छ । सर्वसाधारणलाई प्रवेश निषेध भएको स्थानका दुर्लभ चित्रहरूसमेत समावेश भएकाले पनि अनुसन्धानका क्रममा यो पुस्तकको महत्त्व बढ्न गएको छ । भक्तपुरस्थित भैरवचोकको भैरवबारे वर्णन र चित्र पनि भएकाले यो अनुसन्धानका लागि निकै नै उपयोगी भयो ।

५. The Art of Nepal नामक पुस्तक श्रीमती स्टेलाले १९६४ मा प्रकाशित गरेकी थिइन् । एसियाकै कला, वास्तुकलाबारे सारै राम्रो जानकारी राख्ने स्टेलाको यो पुस्तक उमामहेश्वर, भैरवसम्बन्धी जानकारी राख्न पनि उपयोगी छ । शैव सम्प्रदायसम्बन्धी प्राचीन प्रस्तर मूर्तिहरूको चित्र समावेश भएको The Art of Nepal अनुसन्धानको क्रममा उपयोगी सामग्री सिद्ध भएको छ ।

६. पी. पालले १९७४ मा The Art of Nepal Vol. I, II प्रकाशित गरेका छन् । यी दुवै पुस्तकमा नेपाली मूर्तिकला र चित्रकलाबारे सारै उपयोगी तथ्य कुराहरू प्रकाशित छन् । उमामहेश्वर र भैरवका मूर्ति अध्ययनक्रममा यी पुस्तकहरू पनि उपयोगी साबित भएका छन् । पालकै Nepal where the Gods are young नामक पुस्तक पनि The Asia Society बाट प्रकाशित भएपछि विदेशको व्यक्तिगत सङ्ग्रहमा भएका उमामहेश्वर र भैरव मूर्तिबारे जानकारी प्राप्त गर्न सजिलो भएको छ ।

७. विदुषी Mary Shepherd Slusser को Nepal Mandala नामक पुस्तक दुई खण्डमा १९८२ मा दोस्रोपल्ट प्रकाशित भएको छ । यो पुस्तकमा नेपाली संस्कृति, मूर्तिकला र चित्रकलाबारे सारै राम्रोसँग वर्णन गरिएको छ । सुन्दर छपाइ, छानिएका फोटाहरू र अनुसन्धानात्मक लेखाइले गर्दा Nepal Mandala सारै नै स्तरीय र उपयोगी पुस्तक हुन पुगेको छ । शैव मूर्तिहरूको क्रममा उमामहेश्वर र भैरवका मूर्तिहरूको थोरै भए पनि उल्लेख भएकाले यो पुस्तक पनि उपयोगी नै छ ।

८. लैनसिंह बाङ्देलका कलासम्बन्धी चार-पाँचवटा पुस्तकहरू प्रकाशित छन् । (क) प्राचीन नेपाली मूर्तिकलाको इतिहास (ख) The Early Sculptures of Nepal (ग) Stolen Images of Nepal (घ) Inventory of Stone Sculptures of the Kathmandu Valley आदि । यी सबै पुस्तकहरू नेपाली कला अध्ययनका क्रममा निकै नै उपयोगी छन् । उपत्यकामा स्थापना भएका, तर सुरक्षाको अभावलेँ चोरिएका मूर्तिहरूका चित्रको सहायताले पनि मोटामोटी अध्ययन गर्न सकिन्छ ।

९. Elements of Hindu Iconography नामक पुस्तक १९१४ मा प्रकाशित भएपछि मूर्तिकलाका बारेमा प्रामाणिक कुराहरू धेरै थाहा पाइयो । T.A.

Gopinatha Rao ले सारै मेहनत गरेर लेखेको यो पुस्तकका विभिन्न भागमा शैव, शाक्त, वैष्णव देवदेवीको बारेमा विस्तृत वर्णन छ । Vol. II Part I मा शिवका विभिन्न रूप र भैरव मूर्तिको पनि वर्णन छ । नेपालका उमामहेश्वर र भैरव मूर्तिका बारेमा यसमा चर्चा नपरे तापनि मूर्तिकलाबारे जानकारी प्राप्त गर्न यो पुस्तक सारै उपयोगी छ ।

१०. The Development of Hindu Iconography नामक पुस्तक १९४१ मा प्रकाशित भएपछि मूर्तिकलाका क्षेत्रमा धेरै नयाँ तथ्यहरू प्रकाशित भए । जीतेन्द्रनाथ बनर्जीद्वारा लेखिएको यो पुस्तकमा मूर्तिकलाका विविध पक्षबारे प्रकाश पारिएको छ । शैव, वैष्णव, शाक्त धर्मसँग सम्बन्धित मूर्तिहरूबाहेक मिश्रित र अर्ध देवदेवीका बारेमा पनि यो पुस्तकमा थुप्रै जानकारी समावेश छन् । मूर्तिहरूको अध्ययनका क्रममा आङ्गिक नापको ठूलो भूमिका हुन्छ, त्यसको ज्ञानबिना यो विषयको जानकारी नै अपूरो हुन्छ । यो पुस्तकमा बनर्जीले सारै प्रस्टसँग विभिन्न ग्रन्थका आधारमा नापको बारेमा उल्लेख गरेका छन् । मूर्तिकलाबारे थुप्रै जानकारी भए पनि नेपालको मूर्तिबारे भने यो पुस्तकमा वर्णन छैन ।

११. 'पशुपति क्षेत्रको सांस्कृतिक अध्ययन' नामक ग्रन्थ २०५३ सालमा प्रकाशित भएको हो । डा.गोविन्द टण्डनद्वारा लेखिएको यस पुस्तकमा नेपालमा शैव धर्म, पशुपति विवेचना एवं पशुपतिनाथ मन्दिर परिचय, पशुपतिक्षेत्रका मूर्तिहरू आदि विभिन्न शीर्षकमा व्याख्या गरिएको छ । यो पुस्तक शोधका लागि पृष्ठभूमिको रूपमा प्रयोग गर्न सकिन्छ ।

१२. वीणा पौडेलको 'नेपाली मूर्तिकला र चित्रकला' नामक पुस्तक २०५७ मा प्रकाशित भएको हो । यो पुस्तकमा मूर्तिकला र चित्रकलासम्बन्धी विभिन्न विषयहरू समावेश गरिएको छ । शैव मूर्ति र भैरव चित्रबारे पनि अनुसन्धानात्मक अध्यायहरू यसमा परेकाले यो अनुसन्धानका लागि उपयोगी नै छ ।

यी विभिन्न पुस्तकहरूबाहेक विभिन्न पत्रपत्रिकामा प्रकाशित उमामहेश्वर र भैरव मूर्ति एवं चित्रहरूबारेका लेखहरू पनि सारै ज्ञानवर्द्धक छन् ।

यस अनुसन्धानका क्रममा विभिन्न प्रकाशित, अप्रकाशित पुस्तक, पत्रपत्रिका-बाहेक स्थलगत अनुसन्धान र अध्ययनलाई पनि महत्त्व दिइएको छ । छाउनीको राष्ट्रिय सङ्ग्रहालय, भक्तपुरको राष्ट्रिय चित्र सङ्ग्रहालय र पाटनको सङ्ग्रहालय पटक-पटक गएर अध्ययन गर्ने र फोटो लिने काम गरियो । काठमाडौँ, पाटन र भक्तपुरका विभिन्न महत्त्वपूर्ण भैरवस्थानहरूका साथै कीर्तिपुरको बाघभैरव मन्दिरमा गएर विभिन्न प्रश्नहरू सोधेर जानकारी पनि प्राप्त गरियो । यसबाहेक बनेपा, चण्डेश्वरीको भैरव चित्र र भक्तपुरको भैरव चोकको पनि पटकपटक गरेर अध्ययन गरियो ।

प्रस्तुत अध्ययनका मुख्य स्रोत साहित्यिक कृतिका अध्ययन र स्थलगत अध्ययनबाट प्राप्त सूचना नै हुन् । विभिन्न मूर्ति र चित्रसँग सम्बन्धित व्यक्तिहरूसँग बेग्लाबेग्लै अन्तर्वार्ता लिएर सङ्कलन गरिएका तथ्य यो शोधग्रन्थमा समावेश छन् ।

# अध्याय : दुई
# शैव धर्मको उत्पत्ति र विकास

## परिचय

विश्वमा भय र त्यसपछि श्रद्धाबाट प्रारम्भ भएको धर्मले समयसँगसँगै विभिन्न नाम र रूप लियो, जसमध्ये संसारकै सबभन्दा पुरानो धर्ममा शैव धर्म (हिन्दू धर्म) पर्दछ । आजभन्दा छ-सात हजार वर्षअगाडिदेखि नै चल्दै आएको सनातन धर्मको पनि समयसँगसँगै विभिन्न हाँगाहरू फाटे, जसमध्ये एउटा हाँगाको रूपमा विकसित भएको धर्म हो शैव । शैव धर्म र कलाको आफ्नै छुट्टै महत्त्वपूर्ण इतिहास छ ।

## शैव धर्मको उत्पत्ति र विकास

संसारका सबै धर्मको चुरो खोज्दा एउटा कुरा प्रस्ट देखिन्छ, त्यो हो– विश्वको चराचर सृष्टिलाई अदृश्य शक्तिले चलाएको कुरा स्वीकार गर्नु । त्यही अदृश्य शक्तिलाई ईश्वरतत्त्व वा प्रकृतिको नियम भनिन्छ । त्यसैलाई विभिन्न ढङ्गले विश्वका विभिन्न समुदायले आ-आफ्नो धर्ममा व्याख्या गरेका छन् । विश्वकै प्राचीन धर्मको रूपमा शैव धर्म परिचित छ । शैव धर्मको विस्तारसँग अध्ययन गर्दा एउटा कुरा प्रस्ट देखिन्छ, त्यो हो– शैव धर्म एउटा मात्रै सम्प्रदाय नभएर विभिन्न सम्प्रदायहरूको एउटा पिण्ड नै हो । ईश्वरचन्द्र त्यागीले पनि यो कुरा स्वीकार गरेका छन् (Tyagi, 1982 : P.2.)।

शिवको पूजा र शैव धर्मसम्बन्धमा विद्वान्हरूका विभिन्न मत छन् । धेरैले आर्यभन्दा पहिले द्रविडहरूद्वारा शिवको पूजा गरिने कुरा स्वीकार गरेका छन् । अनार्यहरूको देवताको रूपमा शिवले मान्यता पाएका थिए । शैव धर्मको सम्बन्धमा सिन्धुघाटीको सभ्यताले धेरै कुरा प्रस्ट पारेको छ । धेरै विद्वान्हरूले सिन्धुघाटीको सभ्यता आर्यभन्दा पहिलेका वा द्रविडियनहरूको भनेर स्वीकार गरेका छन् । के. आर्. सुब्रह्मण्यम्ले द्रविडहरूमध्ये नागजातिको उल्लेख गरेका छन् जुन नागजाति शिवका भक्त थिए (Subramaniam, 1929 : P.5) । यसै गरेर मार्सलले पनि मोहनजोदारोको उत्खननमा नागजातिको अस्तित्व रहेको कुरा एउटा भक्तको शिरमा नागको फणा भएबाट पनि अड्कल गरेका छन् (Marshall : P.68.) । तिनै

नागजातिको सम्बन्ध शिवसँग देखिन्छ । नागजाति, नागपूजाले प्रारम्भको प्रकृतिपूजाको सङ्केत दिन्छन् ।

हिन्दूहरूको सबभन्दा प्राचीन ग्रन्थ वेदमा आर्यहरू र दस्युहरूको वैमनस्यबारे उल्लेख छ । यी दस्युहरू सर्पसँग सम्बन्धित थिए । त्यसैले नागसम्प्रदाय, शैव धर्मको सम्बन्ध आर्यभन्दा पहिले नै रहेको तथ्य केही विद्वान्हरू स्वीकार गर्दछन् । तर केही विद्वान्हरू शिवको प्राचीन रूप रुद्रको वेदमा भएको चर्चा गर्दै वैदिक धर्मसरह नै शैव धर्मको प्राचीनता स्वीकार गर्दछन् । विद्वान् सी.भी.एन्. आयरको विचारअनुसार शैव धर्मको विकास नै वैदिक देवता रुद्रको पूजाबाट भएको हो (Aiyyar, cvn, 1936 : P.9)। स्वामी विवेकानन्दले शिवलिङ्ग पूजाको प्रसङ्ग अथर्ववेदसम्म जोडेका छन् । विवेकानन्दका अनुसार शिवका लिङ्गको पूजापद्धतिको उत्पत्ति अथर्ववेदको यूप स्तम्भ ऋचाअनुसार भएको देखिन्छ ।

शिवलाई उपहारस्वरूप अनार्यहरूले आर्यलाई सुम्पेको कुरा केही विद्वान्हरूले स्वीकार गरेका छन् । प्राचीन धर्म र सभ्यताहरूको अध्ययन गर्दा मातृपूजा र पितृपूजाका धेरै पक्षहरू प्रस्ट हुन्छन् । विश्वमा मातृसम्प्रदायको धारणा भएजस्तै पितृसम्प्रदायको अस्तित्व रहेको कुरो ध्रुवसत्य हो । प्रकृति र पुरुष दुवैको अस्तित्व स्वीकार गरेर अगाडि बढ्न प्रेरणा प्रदान गर्ने शक्तितत्त्व नै शैव सम्प्रदायको पनि उद्गम स्थल हो ।

उपनिषद्मा एउटा परमपुरुष र प्रकृतिको सङ्गमले सृष्टि चलेको तथ्य बताइएको छ । त्यही पुरुषशक्तिको शिवसँग र प्रकृतिको देवी पार्वतीसँग तादात्म्य गरेर शिव र शक्तिको सहोपासनाको दार्शनिक आधारको जग बस्यो । वेदको राम्रोसँग अध्ययन गर्ने विद्वान् आई. एन्.डण्डेकरले वैदिक रुद्रको क्रमिक रूपमा विकास हुँदै महाकाव्यका शिवसँग सम्बन्ध दर्साउनुभएको छ । सिन्धुघाटीको सभ्यता, वैदिक समयदेखि आधुनिक समयसम्म यति लामो क्रमिक विकास शिवबाहेक अरू देवताको देखिँदैन ।

जर्मन विद्वान् म्याक्स मुलर आफ्नो Anthropological Religion नामक ग्रन्थमा यस्तो लेख्दछन्– "दुर्गा र शिवको कल्पनामा एक अवैदिक भावना स्पष्ट रूपबाट पाइन्छ ।" उनको विश्वासअनुसार दुर्गा र शिव वैदिक देवता हैनन्, उनीहरूको विकास कुनै अवैदिक देवताको कल्पनाबाट भएको छ ।

पुराणहरूमा शिवलाई योगीराजको रूपमा उल्लेख गरिएको छ । हिन्दू धर्मका चार आश्रममध्ये महत्त्वपूर्ण आश्रम गृहस्थाश्रमको महत्त्व बुझेर शिवको शुभविवाह सतीदेवी (पार्वती) सँग भयो । शिव र पार्वतीलाई अर्धनारीश्वर स्वरूपमा एउटै मूर्तिमा र उमामहेश्वर रूपमा पूजा गर्ने परम्परा चल्यो । शिवको क्रमिक विकासबारेमा चूडानाथ भट्टरायको विचार पनि उल्लेखनीय छ– "पछि आएर पशुपति शिव हुन्छन्, रुद्र शङ्कर बन्छन् । अर्थात् समाजले अति उग्र रुद्रलाई समयको मागअनुसार करुणावतार शङ्कर बनाएर आराधना गरेको छ । रुद्रलाई

शिवको स्वरूपमा परिणत गर्दा पनि त्यसभित्र रहेको कुरो मूल तत्त्व हटाउन भने सकिएन र शिव संहारकारक देवताको रूपमै रहे। पछि शैव दर्शन पनि अध्यात्मवादको पराकाष्ठामा दुर्गाप्रत्यभिज्ञाको रूप लिँदा चिन्तनपरक हुन पुग्छ" भट्टराय, २०३५, पृ. ४३। नेपालमा प्राचीन कालदेखि अविच्छिन्न रूपमा प्रतिष्ठित लोकप्रिय धर्ममध्ये शैव धर्मको प्रमुख स्थान रहेको छ। यसो हुनाले श्रद्धालु राजा र प्रजाले स्थापना गरेका शैव धर्मसम्बन्धी थुप्रै मूर्ति र शिवलिङ्गहरू हाम्रो यहाँ यत्रतत्र छरिएर रहेका पाइन्छन्।

नेपाली कलाकारले धेरै नै रुचाएर बनाएका मूर्तिहरूमध्ये उमामहेश्वर र भैरवफलक पर्दछन्। काठमाडौँ उपत्यकामा गल्लीगल्ली, ढुङ्गे धारा, पाटीपौवा, विभिन्न मन्दिरहरूमा जताततै उमामहेश्वर र भैरव मूर्ति भेटिन्छन्। यो पुस्तकमा काठमाडौँ उपत्यकाका प्रस्तरका केही महत्त्वपूर्ण उमामहेश्वर र भैरवका मूर्तिहरूको वर्णन गरिनेछ।

प्रतिमाविज्ञानको पुस्तकमा उमामहेश्वरको र भैरवको मूर्ति बनाउने नियम तोकिएको छ। रूपमण्डन, मत्स्यपुराण, विष्णुधर्मोत्तर, अपराजितपृच्छा, अग्निपुराण, देवतामूर्ति प्रकरण आदि पुस्तकमा प्रतिमानिर्माणका नियम तोकिएका छन्। जसमध्ये रूपमण्डनले उमामहेश्वर मूर्तिको वर्णन यसरी गरेको छ– उमामहेश्वरको वर्णन गर्छु। उमासँग शङ्कर छन्। शङ्करको दाहिने हातमा मातुलुङ्ग र त्रिशूल छन्। एउटा बायाँ हातले उमालाई आलिङ्गन गरेको र अर्को बायाँ हातमा सर्प समातेका छन्। उमाको एक हात शिवको काँधमा छ, दोस्रोमा ऐना छ। फलकको सबभन्दा तल वृष, कुमार, गणेशका साथै शरीरमा मासु नभएका भृङ्गी पनि बनाउनुपर्छ, जसलाई नाच्दै गरेको देखाउनुपर्छ। मत्स्यपुराणमा पनि उमामहेश्वरको मूर्ति निर्माण गर्ने विधान तोकिएको छ। दुई अथवा चार हात कुँदिएका शिवको दायाँ हातमा कमल र त्रिशूल, देब्रे हातमध्ये एउटाले उमाको स्तन स्पर्श गरेको र अर्को काँधमा अडचाइएको हुनुपर्दछ। विष्णुधर्मोत्तरमा पनि उमामहेश्वरको मूर्ति बनाउने नियम बताइएको छ। पार्वतीसँगै शिव बसेको देखाइन्छ। शिवको शरीर जटा र अर्धचन्द्रद्वारा शोभित हुन्छ। शिवका दुई हातमध्ये बायाँ हात उमाको काँधमा राखिएको हुन्छ र दाहिने हातमा उत्पल हुन्छ। पार्वतीको दायाँ हात शिवको काँधमा राखिएको हुन्छ र बायाँमा ऐना हुन्छ। शिव र उमाको मूर्ति धेरै नै राम्रोसँग बनाइएको हुनुपर्दछ। माथि वर्णन गरिएका नियमभित्र बसेर नै नेपाली कलाकारले उमामहेश्वरका मूर्ति निर्माण गरेका छन्। तर पनि कुनैकुनै फलकमा कलाकारले आफ्नो स्वतन्त्र विचार पनि प्रयोग गरेको देखिन्छ।

## अध्याय : तीन
# कलामा धर्मको प्रभाव

सभ्यताको प्रारम्भिक अवस्थादेखि नै कलाको सुरुआत भएको पाइन्छ । ओडारमा नाङ्गै बस्दा, काँचो मासु खाएर पनि मानिसले कलाको सृजना गरेको थियो । त्यसैले एम्.सी.बर्किटले आफ्नो पुस्तक 'The Old Stone Age' मा मानिसलाई कलातर्फ अग्रसर गराउने मूल तत्त्वका रूपमा सजावट, आफूलाई व्यक्त गर्न, तन्त्रमन्त्रमा विश्वास, मनोरञ्जन आदिको चर्चा गरेका छन् (बर्किट,१९७७ :१७३-१८७) । यसरी जङ्गली अवस्थाको मानिसको कलासृजनामा रहेका विभिन्न तत्त्वहरूमध्ये तन्त्रमन्त्र अर्थात् धर्म मूल रूपमा देखिन्छ । यही परम्परा कायम रहेर एसियाका अधिकांश देशहरूमा कलाको मूल कारण नै धर्म देखिएको छ । भारत र नेपालमा भने सम्पूर्ण कलाको मूल पृष्ठभूमि नै धर्म रहेको प्रस्ट देखिन्छ ।

भर्तृहरिले उनको नीतिमा कलाका बारेमा आफ्नो अभिव्यक्ति यसरी व्यक्त गरेका छन्– 'साहित्यसङ्गीतकलाविहीन, साक्षात् पशुपुच्छविषाणहीन:' अर्थात् साहित्य, संगीत र कलाले विहीन मनुष्य सिङ र पुच्छर नभएको साक्षात् पशु हो ।

मानवभावनाको अभिव्यक्ति नै कला हो । मानव अनुग्रहणशील छ । ऊ आफूले अनुग्रहण गरेका कुरा आफूसँग मात्र सीमित राख्न चाहँदैन, अभिव्यक्त गर्न खोज्दछ । अभिव्यक्त गर्ने साधन मुख्यत: भाषा, विभिन्न कला, चित्रकारिता, शिल्प, गीत र नाच हुन् । सभ्यताको प्रारम्भिक अवस्थादेखि नै कलाको सुरुआत भएका प्रमाण थुप्रै प्राप्त छन् । युरोपका गुफाहरूमा प्राचीन मानवले प्राकृतिक वस्तुबाटै बनाएका विभिन्न रङहरूको प्रयोग चित्रमा गरेको देखिन्छ । दक्षिणी फ्रान्स र स्पेनका धेरै गुफाहरूमा अति नै पुराना चित्रहरू प्राप्त भएका छन् । गुफाको भित्री भागसम्म पनि चित्रहरू बनाएको देख्दा त्यस बेलाका मानिसले उज्यालोका लागि जनावरको बोसो प्रयोग गरेको अनुमान सजिलै गर्न सकिन्छ ।

इतिहासको गर्भमा रहेका विभिन्न महत्त्वपूर्ण वस्तुहरूको खोज, अध्ययन, अनुसन्धानको क्रममा वैज्ञानिक पद्धतिसँगसँगै मौकाले अपर्झट कहिलेकाहीँ बहुमूल्य वस्तु फेला पर्दछन् । त्यस्तै रुचिकर घटना स्पेनको अल्टामिरा गुफाको छ । स्पेनका एक जना मानिस र उनको पाँचवर्षे छोराद्वारा यो पत्ता लागेको थियो । यो गुफाको

चित्रकलाको प्रशंसा विश्वले नै गरेको छ ।

मिश्रको पिरामिडमा कोरिएका प्राचीन चित्रहरूमा धार्मिक भावनाको अभिव्यक्ति प्रशस्त छ । प्राचीन सभ्यता सुरक्षित भएका देशहरूमध्ये भारतमा अवस्थित अजन्ताको अवर्णनीय मूर्तिकला र चित्रकलाको उल्लेख गर्दा, अवलोकन गर्दा हर्षले गद्गद नहुने, जिब्रो नटोक्ने व्यक्ति कोही हुँदैन । इसापूर्व प्रथम शताब्दीदेखि आरम्भ भएका कला र चित्रकलाले भरिपूर्ण अजन्ता गुफा हिन्दू र बौद्ध धर्मावलम्बीहरूको विद्या आर्जन गर्ने मुख्य केन्द्रको रूपमा थियो ।

प्राचीन मानवले कोरेका चित्रहरू हेर्दा विशेष तालिम लिएर सृजना गरिएका कलाकृतिजस्तो लाग्दछ । दक्षिणी फ्रान्सका गुफा र उत्तरी स्पेनको अल्टामिराका भित्तिचित्रहरू हेर्दा एउटा सिपालु कलाकारको सृजना हो भन्ने देखिन्छ ।

युरोप र भारतका प्राचीन चित्रहरूमा धेरै कुरामा समानता पनि पाइन्छ । बँदेल, मृग, भैँसी, हात्ती, नीलगाई आदिको चित्रण नै मुख्य विषय देखिन्छ । विभिन्न जनावरका शरीरका भित्री भाग पनि देखाउने X-ray गरिएका जस्ता चित्रहरू पनि युरोप र भारत दुवैतिरका गुफामा भेट्टिएका छन् ।

विश्वका विभिन्न कलामा धर्मको प्रभाव परेजस्तै नेपालका विविध विधाका कलामा पनि धर्मको प्रभाव टड्कारो रूपमा देख्न सकिन्छ । नेपालमा त लिच्छविकालमा निर्मित मूर्तिहरूको अध्ययन गर्दा देवदेवीका मूर्तिबाहेक राजारानी र भाइभारदारका मूर्तिहरू बनेकै छैनन् । त्यस बेलाका इतिहास, धर्म, संस्कृतिको अध्ययन गर्दा प्रस्ट हुन्छ कि पूजनीय, वन्दनीय, ईश्वर, परमात्मा, प्रभुको निराकार स्वरूपलाई आकार दिएर एकाग्र मनले जप, ध्यान, भजन गर्न मानिसले उचित ठह्र्यायो । त्यसैले ईश्वरकै विभिन्न रूपका मूर्तिहरू कुँद्न ऊ तल्लीन भयो । उसले आँखाले प्रस्ट रूपमा देख्न सकिने, स्पर्श गर्न सकिने मानवजातिको मूर्ति बनाउन त्यति उत्सुकता, अग्रसरता, आवश्यकता महसुस गरेन । त्यसैले नेपालका प्राचीन मूर्तिहरू औंल्याउँदा त्यहाँ सर्वदा मानवमूर्तिको अभाव भेटिन्छ । अपवादका रूपमा लिच्छविकालमा निर्मित निरपेक्षले स्थापना गरेको उनका बाबुआमाको मूर्तिलाई औंल्याउन सकिन्छ । दुर्भाग्यवश ती सालिक प्राप्त हुन सकेका छैनन् तर त्यसको पादपीठको अभिलेखको बेहोरा भने यस्तो छ (वज्राचार्य, २०३६:७९-८१) :

'संवत् ४२७ कार्तिके शुक्ल दिवा १३ ।

**दातर्य्यतीव विदुषी प्रथितप्रभावे**

**श्रीमानदेवोनृपतौ जगतीं भुनक्ति**

दानी, ज्यादा विद्वान्, प्रभाव फैलिएका राजा श्री मानदेवले

पृथ्वीको रक्षा गरिरहनुभएको बेलामा सफा कीर्ति भएका उहाँ (मानदेव) को पाउको निगाहले निरपेक्ष भन्नेले बाबुआमाको यो सालिक बनाए ।

यसरी मूर्तिको पादपीठमा भएको यो अभिलेखको आधारमा आफ्ना मृत बाबुआमाको अर्को जन्ममा पनि पक्का भेटघाट होस् भनीकन निरपेक्ष (दरबारका

कर्मचारी?) ले विधिबमोजिम सालिक स्थापना गरेका थिए । यसरी लिच्छविकालमा देवप्रतिमाबाहेक व्यक्तिविशेषको मूर्ति निर्माण गरिएको उल्लेख भएको प्रमाण यो नै हो । तर मूर्ति प्राप्त नभएकाले यसबारे धेरै कुरा भन्न हामी असमर्थ छौं । अनुमान मात्र गर्न सक्तछौं ।

विभिन्न प्रमाणका आधारमा नेपाली कलामा धर्मको पूर्ण रूपले प्रभाव परेको मात्रै हैन सम्पूर्ण कला नै धार्मिक मात्रै रहेका छन् भनेर प्रस्ट रूपमा भन्न सकिन्छ । चित्रकला, मूर्तिकला र वास्तुकला तीनवटै विधामा यो तथ्य प्रस्ट रूपमा देखिन्छ ।

मल्लकालमा निर्मित काठमाडौं, पाटन र भक्तपुरदरबारक्षेत्र हेर्दा राजपरिवार बस्ने घरभन्दा बढी देवदेवीकै मन्दिर देखिन्छ । त्यहाँका वास्तुशैलीको सम्पूर्ण आधार नै धार्मिक छ । धर्मभन्दा बाहिर गएर मल्लराजाहरूले सुन्दरताको कल्पनै गरेका छैनन् । तीनवटै दरबारमा मल्लराजाहरू (प्रताप मल्ल, भूपतीन्द्र मल्ल र योगनरेन्द्र मल्ल) ले आफ्नो सालिक राख्दा पनि एउटा भक्तको रूपमा राखेका छन् । त्यसैले ठूलो प्रस्तरमाथि देववाहनको जस्तो ढाँचाले देगुतले र तलेजु भवानीको मन्दिरअगाडि राखिएको छ । पशुपति मन्दिर, चाँगुनारायण र हनुमान्ढोकाभित्र पनि मल्लराजा र रानीहरूका प्रतिमा भक्तकै रूपमा राखिएका छन् ।

•

# अध्याय : चार
# शैव मूर्तिहरूको वर्गीकरण

आशुतोष (छिट्टै खुसी हुने) भगवान् शिवका विभिन्न नाम भएजस्तै विभिन्न गुण झल्काउने मूर्तिहरू छन् ।

सामान्यत : शिवका मूर्तिहरूको निम्न तरिकाले वर्गीकरण गर्न सकिन्छ : १. लिङ्ग २. लिङ्गोद्भव ३. नृत्य मूर्ति ४. उमामहेश्वर मूर्ति ५. संहार मूर्ति ६. दक्षिण मूर्ति ७. कङ्काल मूर्ति र भिक्षाटन मूर्ति । शिवका अन्य महत्त्वपूर्ण मूर्तिहरू (क) गङ्गाधर (ख) अर्धनारीश्वर (ग) हरिहर (घ) कल्याणसुन्दर मूर्ति (ङ) वृषवाहन मूर्ति (च) वृषपहरण मूर्ति (छ) मिश्रित मूर्ति (ज) सदाशिव मूर्ति (झ) एकादश रुद्र पर्दछन् ।

पुराणमा गरिएको शिवको वर्णनअनुरूप नै यी विभिन्न मूर्तिहरू कुँदिएका छन् । वर्गीकरण गरिएका सबै मूर्तिहरू भने नेपालमा छैनन् । संहार मूर्तिअन्तर्गत पर्ने भैरव र शक्तिको वर्गीकरण यसरी गर्न सकिन्छ :

१ असिताङ्गभैरव, मातृका ब्रह्मायणी २. रुरुभैरव, मातृका माहेश्वरी ३. चण्डभैरव, मातृका कौमारी ४ क्रोधभैरव, मातृका भद्रकाली (वैष्णवी) ५.उन्मत्तभैरव, मातृका वाराही ६. कपालभैरव, मातृका इन्द्रायणी ७. भीषणभैरव, मातृका महाकाली (चामुण्डा) ८. संहारभैरव, मातृका महालक्ष्मी । आठवटा मुख्य भैरव र ती आठ भैरवका अरू आठआठ भैरव गरी ६४ भैरवको वर्णन पुराण र प्रतिमाविज्ञानका पुस्तकमा छन् ।

**शिवलिङ्ग**

लिङ्गलाई सामान्यत: पीठ वा पिण्डिकामा स्थापना गरिन्छ । यो चारकुने, आठकुने, सोह्रकुने, गोलो, त्रिकोण आकारको पनि हुन्छ । मानसारमा यसको उल्लेख गरिएको छ ।

**कुर्यात्तु नागरे लिङ्गं पीठ नागरमेव च ।**
**द्राविडे द्राविडं प्रोक्तं वेसरे वेसरं तथा ॥**
**धारालिङ्गं तु सर्वेषां धारापीठं प्रकल्पयेत् ।**
**नागरं चतुरश्रं स्यादष्टाश्रं द्राविडं तथा ।**
**वृत्तं च·वेसरं प्रोक्तमेतत्पीठाकृतिस्तथा ॥**

(T.A.Rao, Elements of Hindu Iconography, Vo II, P.I, Delhi. H.B., 1985:99)

पौराणिक कालमा हिन्दू धर्ममा त्रिदेवको मान्यता बढ्दै आयो र ब्रह्मा सृष्टिकर्ता, विष्णु पालनकर्ता र शिव संहारकर्ताको रूपमा छुट्टयाइए। शिवलाई संहारकर्ताको रूपमा लिए पनि सृष्टि र अन्त्य एउटै मुद्राका दुई पाटा भएको कुरा स्वीकार गर्दै सृष्टिमा सोझै संलग्न अङ्ग नै पूजाआराधना गर्ने प्रचलन रहेको देखिन्छ। लिङ्ग शब्दको साधारण अर्थ चिह्न या लक्षण हो। प्रतीक अथवा चिह्नको रूपमा पनि लिङ्ग शब्दको प्रयोग गरिन्छ।

देवचिह्नको अर्थमा लिङ्ग शब्द शिवजीको लिङ्गका लागि नै प्रयोग भएको देखिन्छ। हिन्दूहरूको सबैभन्दा प्राचीन ग्रन्थ वेदमा लिङ्गपूजा र प्रार्थनाको सोझै उल्लेख छैन। तर पछिका ग्रन्थहरूमा भने लिङ्गको प्रस्टसँग उल्लेख छ। महाभारतको शान्तिपर्वको पाशुपत परिच्छेदमा शिवलिङ्गप्रति अति श्रद्धाभक्ति प्रदर्शन गरिएको छ। त्यसैले भारत र नेपालका विभिन्न स्थानमा जति पनि प्रसिद्ध तीर्थस्थलहरू छन्, ती सबैको गर्भगृहमा शिवलिङ्गको स्थापना भएबाट त्यसको महत्त्व सारै राम्रोसँग प्रस्ट छ। सूतजीद्वारा ऋषिहरूलाई एकमात्र भगवान् शिव ब्रह्मरूप भएकाले निष्कल-निराकार भनिएको छ र रूपवान् भएको कारणले 'सकल' पनि भनिएको छ। उहाँले शिव निष्कल-निराकार भएका कारणले नै उनको पूजाको आधारभूत लिङ्ग पनि निराकार नै छ, अर्थात् शिवलिङ्ग शिवको निराकारस्वरूपको प्रतीक हो भनेर बुझाउनुभएको छ (संक्षिप्त शिवपुराण, २०५२ : १९)।

लिङ्गको पूजा गर्दा त्रिदेवसँगै देवीको पनि पूजा हुने भएका ॐ ले यसको महत्त्व अझ बढ्न गएको हो। शिवलिङ्गको सबैभन्दा माथिल्लो भाग ॐ रूप शिव, बीचको विष्णु र सबभन्दा तल्लो भाग ब्रह्माको स्वरूप मानिएजस्तै वेदी महादेवीको स्वरूप मानिन्छ।

गरुडपुराणमा विभिन्न द्रव्यबाट निर्माण गर्न सकिने लिङ्गहरूको उल्लेख र पूजापछि प्राप्त फलको पनि वर्णन छ।

१. गन्धलिङ्ग
२. पुष्पलिङ्ग
३. गोशकृलिङ्ग
४. रजोमयलिङ्ग
५. यवगोधूमशालिजलिङ्ग
६. सिताखण्डमयलिङ्ग
७. लवणजलिङ्ग
८. तिलपिष्टोत्थलिङ्ग
९. तुषोत्थलिङ्ग
१०. भस्मयलिङ्ग
११. गुडोत्थलिङ्ग
१२. शर्करामयलिङ्ग
१३. वंशाकुरमयलिङ्ग
१४. केशास्थिलिङ्ग
१५. द्रुमोद्भूतलिङ्ग
१६. पिष्टमयलिङ्ग
१७. दधिदुग्धोद्भवलिङ्ग
१८. धान्यजलिङ्ग
१९. फलोत्थलिङ्ग
२०. धात्रीफलजातलिङ्ग
२१. नवनीतजलिङ्ग
२२. दूर्वाकांडजलिङ्ग
२३. कर्पुरजलिङ्ग
२४. अयस्कान्त मणिजलिङ्ग

२५. मौक्तिकलिङ्ग
२६. स्वर्णनिर्मितलिङ्ग
२७. रजतलिङ्ग
२८. पित्तलजलिङ्ग
२९. अष्टधातु
३०. अष्टलौहजात
३१. वैदुयज
३२. स्फटिकलिङ्ग

यी विभिन्न द्रव्यबाट बनाइएका लिङ्गहरू पूजा गर्नाले ऐश्वर्य, पुत्र र आरोग्यलाभ, सुखप्राप्ति, शत्रुनाश, सौभाग्यका साथै सबै काम सिद्ध हुन्छ भन्ने वर्णन गरुडपुराणमा गरिएको छ ।

तामा, रक्तचन्दन, शङ्ख, कास, फलाम आदि पदार्थबाट बनेको लिङ्गको पूजा कलियुगमा वर्जित छ, तर शिवलिङ्गपूजाको ठूलो महिमा छ । लिङ्गपूजा मिस्र, युनान, इटली, फ्रान्स र अमेरिकामा पनि हुन्थ्यो । नेपाल, भारतमा त शिव र लिङ्गपूजा अनादिकालदेखि नै परम्परागत रूपमा चलिरहेको छ ।

**बाणलिङ्ग**

बाणासुर राक्षसले तपस्या गरेर पर्वतमा लिङ्गरूपमा प्रकट हुने वरदान शिवबाट पाएका थिए । त्यसैले नदीकिनारमा पाइने लिङ्गलाई बाणलिङ्ग भनिन्छ । बाणासुरले शिवको तपस्या गरेको र शिवबाट वरदानस्वरूप हजार हात प्राप्त गरेको प्रसङ्ग पुराणमा छ । बाणासुरले शिवसँग आफूलाई पार्वतीको छोराको रूपमा स्वीकार गर्न अनुरोध गरेपछि पार्वतीले सुब्रह्मण्यम्‌को कान्छो भाइका रूपमा मान्यता दिएको प्रसङ्ग पनि रोचक छ (Vettam Muni, Puranic Encyclopaedia M.B.P. Delhi, 1993 : 107)।

नर्मदा आदि नदीमा प्राप्त ढुङ्गाको लिङ्गलाई बाणलिङ्ग भनिन्छ । नर्मदा नदीमा प्राप्त बाणलिङ्गले भुक्तिमुक्ति दुवै प्रदान गर्दछ । बाणलिङ्गको पूजा इन्द्र आदि देवताले पनि गरेका थिए । वेदिका बनाएर त्यसमाथि लिङ्ग स्थापना गरेर पूजा गर्ने विधान पनि बताइएको छ । वेदी तामा, स्फटिक, सुन, पत्थर, चाँदी वा रुवाको पनि बनाइन्छ । नदीबाट निकालेर पहिला बाणलिङ्गको परीक्षा हुन्छ र फेरि संस्कार । बाणलिङ्गको परीक्षाविधि पनि रमाइलो छ । लिङ्गको तौल चामलले गर्ने र बराबर भएपछि फेरि दोस्रोपल्ट तौल गर्ने, लिङ्ग हल्का भएमा त्यस्तो लिङ्ग जलमा नै फ्याँकिदिनू । त्यही चामल राखेर तौल गर्दा लिङ्ग गह्रौं भएमा उदासीनहरूले त्यस्तो बाणलिङ्ग पूजा गर्नू भन्ने नियम सूतसंहितामा बताइएको छ । संस्कारपछि बाणलिङ्गको पूजा प्रारम्भ गरिन्छ । सुरुमा सामान्य विधिबाट गणेशको पूजा गरेपछि बाणलिङ्गको पूजा गरिन्छ । स्नान गराएर यस्तो ध्यान मन्त्र पढिन्छ :

**ॐ प्रमतं शक्तिसंयुक्तं बाणाख्यं च महाप्रभम् ।**
**काम बाणान्वितं देवं संसारदहनक्षमम् ।**
**शृंगारादिरसोल्लासं बाणाख्यं परमेश्वरम् ॥**

लिङ्गव्रतको बारेमा पनि धार्मिक ग्रन्थमा उल्लेख छ । कार्तिक शुक्ल चतुर्दशीबाट प्रारम्भ हुने यस व्रतका लागि शिवलिङ्ग बनाउन नर्मदा नदीको बालुवा

उत्तम मानिन्छ, तैपनि चामलको पीठो, गोबरबाट पनि बनाउन सकिन्छ (राजवली पाण्डेय, हिन्दू धर्मकोश, लखनऊ, उ.प्रे.स.हि : पृ.५६८) ।

## लिङ्गोद्भव मूर्ति

दक्षिण भारतमा सारै नै प्रसिद्ध मूर्तिमा लिङ्गोद्भव मूर्ति पर्दछ । आगमग्रन्थअनुसार मूल मन्दिरको पश्चिम पर्खालमा शिवको लिङ्गमूर्ति स्थापना गर्नुपर्दछ । लिङ्गपुराण, कूर्मपुराण, वायुपुराण, शिवपुराणमा वर्णन गरिएका कथाकै आधारमा लिङ्गबाट शिव उत्पन्न भएको र ब्रह्मा एवं विष्णुले शिवको व्यापकता स्वीकार गरेको प्रसङ्ग छ । एकपल्ट ब्रह्मा र विष्णुमा सृष्टिकर्ताको सम्बन्धमा विवाद उठ्यो । त्यसै बेलामा शिव अग्निस्तम्भको रूपमा उपस्थित भए र त्यो लिङ्गको माथिल्लो र तल्लो भाग पत्ता लगाउने बाजीमा ब्रह्मा र विष्णु सामेल भए, तर दुवै सफल हुन सकेनन् । यही पौराणिक कथाका आधारमा लिङ्गोद्भव मूर्तिको निर्माण भएको देखिन्छ (संक्षिप्त शिवपुराण, सम्पा. हनुमान प्रसाद, वि.सं.२०५२ : २०) ।

टी.ए.गोपीनाथ रावले भारतको कान्जीबरम, एलोरा, अंबर, मागालका मन्दिरहरूमा भएका लिङ्गोद्भव मूर्तिको चित्र र रेखालिङ्ग आफ्नो पुस्तकमा प्रकाशित गरेका छन् । अंशुमदभेदागम, शिवपुराण र कारनागममा लिङ्गोद्भव मूर्ति बनाउने नियम वर्णन गरिएको छ, जसअनुसार लिङ्गमा उत्पन्न भएका शिवको मूर्तिको दायाँ ब्रह्मा हाँसको रूपमा र दोस्रोमा विष्णु वराहको रूपमा अथवा चार हातमा आफ्ना आयुधसहित कुँद्ने प्रचलन छ । शिव रातो, विष्णु कालो र ब्रह्मा सुनौलो रङ्गमा देखाउने प्रावधानको पनि उल्लेख छ (Rao, The Element of Hindu Iconography, P 105-108) ।

## उमामहेश्वर मूर्ति

शिवका मूर्तिहरूमध्ये काठमाडौं उपत्यकामा सङ्ख्यामा सबैभन्दा बढी र उत्कृष्ट कला झल्काउने मूर्ति नै उमामहेश्वर मूर्ति हो । वैदिक ग्रन्थमा डरलाग्दो, संहारकारी रुद्रको रूपमा चर्चित शिव बिस्तारै कल्याणकारी, पशुहरूका पालक र रक्षकको रूपमा देखा पर्दै गए । ऋग्वेदमा रुद्रको उच्च स्थान छ । तीनवटा ऋचामा पूर्ण एउटामा आधा रूपमा मात्रै उनलाई आह्वान गरिएको छ (ऋग्. I, II4, II, 33/VII, 40) । भारतीय विद्वान् आई.सी. त्यागीले शैव धर्मको अध्ययनको क्रममा रुद्रको डरलाग्दो रूपमा परिवर्तन आएर मुख्य त्रिदेवमा मान्यता प्राप्त गरेको कुरा सारै राम्ररी व्याख्या गरेका छन् (Tyagi, Shaivism in Ancient India, Meerut, Meenakshi Prakashan, 1982 : 165) ।

यसरी रुद्रको डरलाग्दो रूपमा परिवर्तन भएर बिस्तारै पशुपालक, पशुरक्षक, मायारूपमा बाँधिएका पाशबद्ध पशु (जीव) लाई तत्त्वज्ञानद्वारा मुक्त गरेर यथार्थ रूपमा त्यसको पालन गर्ने पशुपति भनेर उल्लेख भएको देखिन्छ । त्यही मान्यतामा शिवको परिवारका सदस्यहरूको पूजा गर्ने पद्धतिको विकास भएको देखिन्छ । शिवलाई परिवारसहित पूजा गर्ने मूर्तिफलकको नाम नै उमामहेश्वर मूर्ति, सुखासन मूर्ति,

उमाहित मूर्ति, सोमस्कन्द मूर्ति आदि हुन् । विष्णुधर्मोत्तर, रूपमण्डनमा वर्णन गरिएका उमामहेश्वर मूर्तिको चर्चा रावले पनि गरेका छन् (राव, १८८५ : १३२-३३) ।

बाङ्देलले उमामहेश्वरको मूर्तिका बारेमा यस्तो उद्‌गार व्यक्त गरेका छन्– 'नेपाली मूर्तिकारहरूले प्राचीन कालदेखि सिर्जना गरेका मूर्तिहरूमा सबैभन्दा उत्कृष्ट तथा कलात्मक सिर्जनामा उमामहेश्वरको मूर्ति देखिन्छ' (बाङ्देल, २०३९ : पृ. ९७) । भारतीय विद्वान् कृष्णदेवले पनि उमामहेश्वरफलकका बारेमा आफ्नो उद्‌गार आश्चर्यचकित हुँदै यसरी व्यक्त गरेका छन्– 'उमामहेश्वरफलकको मुख्य विषयवस्तु एउटै भए पनि विविधता देखाउन सक्नु नेपाली कलाकारको विशेषता हो' (कृष्णदेव, १९८४ : ३५) ।

विद्वान् आर्. एन्. डण्डेकरले वैदिक रुद्रको क्रमिक रूपमा विकास हुँदै महाकाव्यका शिवसँग सम्बन्ध दर्साएका छन् । सिन्धुघाटीको सभ्यता र वैदिक समयदेखि आधुनिक समयसम्म यति लामो क्रमिक विकास रुद्र (शिव) बाहेक अरू देवताको देखिँदैन । उपनिषद्‌मा परमपुरुष र प्रकृतिको देवतासँग तादात्म्य गरेर शिव र शक्तिको संयुक्त उपासनाको दार्शनिक आधारको जग बस्यो । यही विचारको मूर्तरूप उमामहेश्वरफलकमा भेटिन्छ (पौडचाल, २०५७ : ७३) ।

काठमाडौँ उपत्यकामा पनि गल्लीगल्ली, चोक, मन्दिरका कुनाकाप्चामा समेत उमामहेश्वर मूर्तिफलक थुप्रै छन् । शान्त शिवको परिवारका सम्पूर्ण सदस्यको एउटै मूर्तिफलकमा दर्शन गर्न र पूजाआराधना गर्न सकिने भएकाले पनि उमामहेश्वर मूर्तिफलकको महत्त्व बढ्न गएको हो । प्रारम्भका उमामहेश्वरफलकमा नन्दीको पृष्ठभूमिमा उमा र महेश्वर मात्र कुँदिएका छन् । उदाहरणका लागि पाटनको सिकुबही चामुण्डा र चाँगुको छिन्नमस्ताको मूर्ति देखाउन सकिन्छ । समयको विकासक्रमसँगै गणको रूपमा गणेश फुच्चे बालकको स्वरूपमा, कार्तिकेय र गङ्गालाई आकाशबाट पृथ्वीमा झर्न लागेको देखाइने परम्पराको विकास भयो र त्यहीअनुरूप मूर्तिफलकमा कुँदिन थाल्यो । शिवको युगलस्वरूपका बारेमा विद्वान् गोविन्द भट्टराईको विचार यस्तो छ– 'यो युगलस्वरूपको वर्ण श्रुतिमा पाइँदैन, पुराणमा भने यस स्वरूपको प्रशस्त वर्णन छ । यसमा सिङ्गो स्वरूप टपक्क टाँसिएर रहेको हुन्छ' (भट्टराई, २०४१ : ८३) । काठमाडौँ उपत्यकामा भएका महत्त्वपूर्ण उमामहेश्वरफलकहरू यस प्रकार छन् - १) पाटन, सिकुबहीको उमामहेश्वर, २) पाटन, चामुण्डा मन्दिरको उमामहेश्वर, ३) चाँगुनारायण, छिन्नमस्ताभित्रको उमामहेश्वर, ४) पशुपति, रामचन्द्र मन्दिरपछाडि पूर्वपट्टि मन्दिरको प्राङ्गणमा रहेको उमामहेश्वर ५) पशुपति, गोरखनाथक्षेत्रमा रहेको उमामहेश्वर, ६) पशुपतिस्थित अरुणधारा, नवालीटोल र अमरकान्तेश्वर मन्दिरमा रहेका दुईवटा उमामहेश्वर, ७) पाटन, बगलामुखी मन्दिरको बगैँचामा रहेका दुईवटा उमामहेश्वर मूर्तिफलक (एउटा चोरी भइसकेको), ८) पाटन, कुम्भेश्वर मन्दिरको ढुङ्गे धारामा रहेको उमामहेश्वर, ९) पाटन, घैँबुको अभिलेख मिति भएको उमामहेश्वर (ने.सं. १०७, इ. स. ९८६), १०)

राष्ट्रिय सङ्ग्रहालय छाउनीमा प्रदर्शित नवौँ शताब्दी, सत्रौँ शताब्दी र अठारौँ शताब्दीको शिवपरिवारको मूर्ति, ११) पाटन, सुन्दरीचोकको मूर्ति, १२) पाटन, गहिटीको उमामहेश्वर १३) पशुपति, भस्मेश्वरको उमामहेश्वर, १४) हाँडीगाउँ, सत्यनारायण मन्दिरको उमामहेश्वर (इ. १४१४), १५) भक्तपुर, नसमान टोलको उमामहेश्वर, १६) भक्तपुर, भगवती मन्दिरको उमामहेश्वर, १७) भक्तपुर, चुपिङ्घाटको उमामहेश्वर १८) राष्ट्रिय सङ्ग्रहालयमा विशेष प्रदर्शनीमा प्रदर्शित उमामहेश्वर, १९) नन्दीकेशरबहाल, नारायणचौरको उमामहेश्वर, २०) भक्तपुर, दीपङ्कर महाविहारको उमामहेश्वर, २१) भक्तपुर, राष्ट्रिय कलासङ्ग्रहालयको उमामहेश्वर ।

## शिवको अनुग्रह मूर्ति

शैव दर्शन विचित्रको छ । प्रा. चूडानाथ भट्टरायले आफ्नो पुस्तक पशुपति प्रत्यभिज्ञामा सारै प्रस्टसँग यो कुराको उल्लेख गरेका छन् । वैदिक कालमा पशुपति वास्तवमा पशुका मालिक थिए । अब अग्निको अधिनायकत्वको धर्म र पशुका पारतन्त्रलाई लिएर पशुलाई परतन्त्र जीवमा परिणत गरी पतिमा कारण निरपेक्ष सर्वतन्त्रता कायम गर्न पुग्यो पाशुपत-दर्शनले ।.... महेश्वरको विग्रशनुग्रह शक्ति यति ठूलो भयो, यो अवश्यम्भावी मृत्यु पनि जीवनको हटाउन सक्ने भएर मृत्युञ्जय कहलिए । पछि आएर पशुपति शिव हुन्छन्, रुद्र शङ्कर बन्छन् । अर्थात् समाजले अति उग्र रुद्रलाई समयको मागअनुसार करुणावतार शङ्कर बनाएर आराधना गरेको छ (भट्टराय, २०३५ : ४३) ।

शिवले विभिन्न समयमा गरेका उद्धार र अनुग्रहलाई शैव मूर्तिमा दर्साइएको छ । त्यस्ता मूर्तिलाई अनुग्रह मूर्ति भनिन्छ । जसअन्तर्गत (क) चण्डेशानुग्रह मूर्ति (ख) चक्रदान मूर्ति (ग) नन्दीशानुग्रह मूर्ति (घ) विघ्नेश्वरानुग्रह मूर्ति (ङ) किरातार्जुनीय मूर्ति (च) रावणानुग्रह मूर्ति । यी विभिन्न अनुग्रह मूर्तिहरूमा भगवान् शिवले विभिन्न परिस्थितिमा आफ्ना भक्तको उद्धार गरेको स्थिति दर्साइएको छ ।

भारतका विभिन्न ठाउँमा शिवका अनुग्रह मूर्ति भेट्टिएका छन्, तर आजसम्म नेपालमा भने प्राप्त हुन सकेको छैन ।

## संहार मूर्ति

शिवले विभिन्न परिस्थितिमा विभिन्न व्यक्तिलाई संहार गरेको उल्लेख विभिन्न पुराण र शिवपुराणमा पाइन्छ । जसमध्ये (१) कामान्तक मूर्ति (२) गजासुरसंहार मूर्ति (३) कालारि मूर्ति (४) त्रिपुरान्तक मूर्ति (५) सर्भेष मूर्ति (६) काल्लारी शिव (७) अन्धकासुरवध मूर्ति (८) जालन्धरहार मूर्ति (९) वीरभद्र मूर्ति (१०) ब्रह्मशिरच्छेद मूर्ति मुख्य हुन् ।

राव महोदयले दसवटा उपशीर्षक दिएर शिवका संहार मूर्तिको वर्णन गरेका छन् । त्यस्तै जीतेन्द्रनाथ बनर्जीले पनि घोर वा उग्र रूपअन्तर्गत शिवका विभिन्न नामको चर्चा गरेका छन्, जस्तै- भैरव, अघोर, रौद्र, पाशुपत, वीरभद्र, विरूपाक्ष, कङ्काल आदि ।

### कामान्तक मूर्ति

शिवले तेस्रो आँखाको ज्वालाले कामदेवलाई भस्म गरेको वर्णन लिङ्गपुराण र शिवपुराणमा छ । त्यही घटनालाई आधार मानेर कुँदिएको मूर्ति नै कामान्तक मूर्ति हो । ब्रह्माजीको दाहिने स्तनबाट मनुष्यका रूपमा भगवान् धर्म प्रकट भएको, धर्मका तीन श्रेष्ठ छोराहरू शाम्, काम र हर्ष जन्मिएको उल्लेख महाभारतमा छ (महाभारत, आदिपर्व, अध्याय ६६, श्लोक ३१-३२०) । ब्रह्माण्डपुराणमा कामदेवलाई शिवले भस्म गर्नुपरेको वृत्तान्त छ । ब्रह्माकी मानसपुत्रीको रूपमा सुन्दर कन्या सरस्वतीको जन्म भयो । ब्रह्माको मनमा कुविचार आएर उनले सरस्वतीलाई पत्नीको रूपमा स्वीकार गरेको र त्यस घटनाको सम्पूर्ण जिम्मेवारी कामदेवलाई दिँदै महादेवको तेस्रो आँखाबाट भस्म हुने सरापको उल्लेख शैव पुराणहरूमा छ । वाल्मीकि रामायणको बालकाण्डमा कामदेवको अङ्ग नामको उल्लेख छ । तारकासुरले शिवको छोराबाट मात्रै मर्ने वरदान पाएपछि घमन्डी भएर अन्याय, अत्याचार गर्न थाले । ऋषिगण र देवगण तारकासुरको अत्याचारबाट सारै दुःखी भएपछि भोलेबाबा शिवको मन परिवर्तन गर्न प्रयत्नशील भए । यसै सन्दर्भमा सौन्दर्यका देव कामले कामबाण प्रहार गरेर शिवको तपस्या भङ्ग गर्ने प्रयत्न गर्दा क्रोधित शिवको तेस्रो आँखाको ज्वालाले कामदेव भस्म भए । इन्द्रद्वारा काममा खटाइएका कामदेव भस्म भएपछि उनकी पत्नी रतिले महादेवसमक्ष विलाप गर्दै जीवनदान मागिन् । शिवले रतिलाई कामदेव श्रीकृष्ण र रुक्मिणीको छोराको रूपमा जन्मने बताइदिए । यसरी कामदेवको पुनर्जन्म र कामदेव भस्म भएको पौराणिक आख्यान नै कामान्तक मूर्तिमा दर्साइन्छ । उत्तर कामीकागम, सुप्रभेदागम र पूर्व कारनागममा कामान्तक मूर्तिको वर्णन छ । नेपालमा भने यस्तो बनोटको मूर्ति प्राप्त भएको छैन ।

### गजासुरसंहार मूर्ति

हात्तीको रूपमा आएका असुरलाई शिवले मारेर त्यसको छाला ओढेको प्रसङ्ग वराहपुराण, कूर्मपुराण र सुप्रभेदागममा उल्लेख छ । मूल कथावस्तु एउटै भए पनि परिस्थितिवश उपकथा भने फरकफरक छ । कूर्मपुराणमा उल्लेख भएअनुसार वाराणसीमा लिङ्गको ध्यान, पूजा, आराधना गर्न लागेका ऋषिहरूलाई हात्तीको रूपधारी राक्षसले दुःख दिन थालेपछि शिव प्रकट भएर राक्षसलाई मारेर त्यसको छाला वस्त्रको रूपमा प्रयोग गरे । शिवपुराणमा महिषासुरको छोरो गजासुरको प्रार्थनाबाट प्रसन्न भएर शिवले उसको छाला ओढेको र गजासुरको शरीर मुक्तिसाधक क्षेत्र काशीमा कृतिवासेश्वर नामले प्रसिद्ध लिङ्गको रूपमा रहने वृत्तान्त छ । (संक्षिप्त शिवपुराण, २०५२ : ३६२-३६३०) । काठमाडौं उपत्यकामा हात्तीको छाला ओढेको उमामहेश्वर मूर्ति र भैरवका मूर्तिमा देखिन्छ, तर शिवको बेग्लै गजासुरसंहार मूर्ति भने भेट्टिएको छैन ।

### कालारि मूर्ति

कालसँग रिसाएर शिवले छातीमा लातले हानेको शिवपुराणको प्रसङ्ग

मूर्तिमा देखाइन्छ । जसलाई कालारि मूर्ति भनिन्छ । ऋषि मृकण्ड लामो समयसम्म सन्तानहीन थिए । पछि ईश्वरको कृपाले पराक्रमी, तर अल्पायुका मार्कण्डेयलाई छोराको रूपमा प्राप्त गर्न सफल भए । ऋषि मार्कण्डेयलाई पनि आफ्नो छोटो आयुबारे थाहा भयो र विभिन्न तीर्थस्थलमा तीर्थपूजा गर्दै हिँड्न थाले । यही क्रममा तिरुक्कढव्युरमा पुगेर शिवलिङ्ग पुज्न थाले । मार्कण्डेयको सोह्र वर्षको आयु पूर्ण भयो र यमराजका दूतहरू लिन आए । यमराजका दूतहरूले मार्कण्डेयको प्राण हरण गर्न नसकेपछि कालको रूपमा यमराज स्वयं उपस्थित भएर मार्कण्डेयलाई मृत्युपाशमा बाँध्न खोज्दा शिवलिङ्गबाट शिव प्रकट भएर यमको छातीमा लात हाने । पुराणमा वर्णन गरिएको यही घटनालाई आधार मानेर कुँदिएको मूर्तिलाई कालारि मूर्ति भनिन्छ । शिवको संहार मूर्तिअन्तर्गत कालारि मूर्ति पनि पर्दछ । भारतका विभिन्न स्थानमा प्राप्त कालारि मूर्तिहरूको रेखाचित्र र चित्र रावले आफ्नो पुस्तकमा प्रकाशित गरेका छन् । जसमध्ये एलोरा, पट्टीसवरम, तिरुछन्न गुटमगुडी र एम स्टानको व्यक्तिगत सङ्ग्रहमा प्रदर्शित कालारि मूर्तिहरू चर्चायोग्य छन् । नेपालमा भने शिवका कालारि मूर्तिहरू भेटिएका छैनन् (राव, १९८५ : १५६-१६२) ।

## त्रिपुरान्तक मूर्ति

तारकासुरका तीन जना छोराहरू विद्युन्माली, तारकाक्ष, कमलाक्षले कठोर तपस्यापछि ब्रह्माबाट विभिन्न वरदान प्राप्त गरे । हावामा निर्माण गरिएका सुन, चाँदी र फलामका तीनवटा पुरहरू हजार वर्षपछि एकै पलका लागि जोडिने र त्यही क्षणमा एउटै बाणबाट मात्रै त्यसलाई भस्म गर्न सकिने वरदान प्राप्त ती तीन जना राक्षसको अन्याय र अत्याचार बढ्दै गयो । मयदानवले बनाएका ती पुरहरूमा आफूलाई सुरक्षित पाएर ती दानवहरूले कुकर्महरू गर्न थाले । देवताहरूका राजा इन्द्रले आफ्नो वज्रको प्रयोगले त्रिपुर नष्ट गर्ने प्रयत्न गरे, तर असफल भए । देवताहरू आत्तिएर ब्रह्माकहाँ गुहार माग्न गए । ब्रह्माले शिवतर्फ इसारा गरे र शिवले विभिन्न देवताहरूको शक्तिसमेत आफ्नो शरीरमा प्रवेश गराए । प्रहार गर्ने बाणमा विष्णु प्रवेश गराए, ब्रह्माद्वारा हाँकिएको रथमा आरूढ भएर त्रिपुरमा आक्रमण गरे । शिवको शक्तिशाली आक्रमणबाट त्रिपुर नष्ट भयो । पौराणिक कथामा आधारित यो घटनालाई दर्साइएको शिवको मूर्तिलाई त्रिपुरान्तक मूर्ति भनिन्छ । भारतका विभिन्न स्थानमा प्राप्त यस्ता मूर्तिहरूको चर्चा विद्वान् रावले आफ्नो पुस्तकमा गरेका छन् (राव, इ.१९८५ : १६४-१७१) ।

## सर्भेष मूर्ति

विष्णुका विभिन्न अवतारहरूमध्ये नरसिंह प्रमुख अवतार हो । हिरण्यकशिपुलाई मारेपछि नरसिंहको रिस शान्त भएन । उनको अघोर रूप देखेर तीनै लोकका बासिन्दा त्राहित्राहि भए । श्रीमद्भागवतमा त्यस घटनाको वर्णन यसरी गरिएको छ– क्रोधको आवेशमा बस्नुभएका दुर्धर्ष (सजिलोसँग दर्शन नपाइने)

नृसिंह भगवान्‌लाई शान्त गर्ने उपाय कसैले विचार गर्न सकेनन् । ब्रह्मा, शङ्करलगायत समस्त देवता एवं ऋषिमुनिहरूसमेत भयभीत भएकाले उहाँको नजिक जान सकेनन् (भट्टराई, २०५२:७२३) । यसरी विष्णुको अवतार नरसिंहलाई शान्त पार्न भगवान् शिवले लिएको डरलाग्दो रूप नै सर्भेष हो । जनावरका दुईवटा टाउका, सिंहका आठवटा खुट्टा, लामो पुच्छर र दुईवटा पखेटा भएको आकृतिमा सर्भेष मूर्ति कुँदिन्छ । शिवको सर्भेष रूपले नरसिंहलाई मारेर छाला च्यातेर ओढेको र टाउको मुकुटमा वा छातीमा लगाएको उल्लेख पुराणमा छ । विद्वान् गोपीनाथ रावले भारतमा प्राप्त विभिन्न सर्भेष मूर्तिको उल्लेख गरेका छन् ।

## मल्लारी शिव

मल्लारी माहात्म्यमा मल्लारीको रङ, पूजा गर्ने विधान, वाहन आदिको उल्लेख छ । जसअनुसार सुनौलो रङ, जटामुकुट, अर्धचन्द्र शिरमा, कानमा चम्किला कुण्डल, घाँटीमा मोती, रुबी र फूलका माला, पाखुरामा सर्पको बाजु, पहेँलो सिल्कको कपडामा मल्लारीलाई देखाउनुपर्दछ । हातमा डमरु र खड्‌गका साथसाथै वाहनको रूपमा सेतो घोडा र सातवटा कुकुर दर्साउनुपर्दछ भन्ने वर्णन छ ।

अनन्तानन्द गिरीले आफ्नो पुस्तक शंकरविजयमा मल्लारी शिवको बारेमा उल्लेख गरेका छन् । उज्जयिनीमा यस्तो सम्प्रदायका मानिसहरू बस्दथे । कुकुरको जस्तै आवाज निकालेर कुकुरकै जस्तो बाहिरी पहिरनमा भक्तहरू यताउता हिँड्थे । शिवलाई मल्लारीको रूपमा पूजा गर्ने भक्तहरूको विश्वासमा विश्वब्रह्माण्डको रचयिता नै मल्लारी शिव हुन् । पुस्तकमा वर्णन भएको मल्लारी शिवको मूर्ति वा चित्र भने नेपालमा प्राप्त भएको थाहा छैन ।

## अन्धकासुरवध मूर्ति

शिवपुराणमा शिवका भक्त, गणहरूको प्रसङ्गका थुप्रै आख्यानहरू छन् । जसमध्ये अन्धकको तपस्या, अन्धकको शिवगण भृङ्गीको रूपमा जन्म आदि पनि पर्दछन् । शिव र पार्वतीलाई खुसी पारेर अन्धकले बाबुआमा भन्दै गरेको प्रार्थनालाई वामनपुराणमा उल्लेख भएका घटनाको वर्णन विदुषी स्टेलाले पनि गरेकी छिन् (Stela, The presence of Shiva, 1981: 379) । असुर अन्धकको अत्याचार बढेपछि शिवले आफ्नो त्रिशूलमा उनेर मारेको दृश्य नै अन्धकासुरवध मूर्तिमा दर्साइन्छ । शिवपुराणमा यो घटना विस्तृतसँग वर्णन गरिएको छ । एकपल्ट शिव मन्दराचल पर्वतमा गएर पार्वती र आफ्ना गणसँग विभिन्न क्रीडाहरू गर्दै थिए । पार्वतीले शिवको आँखा जिस्किएर छोपिदिइन् । शिवको आँखा छोपिनेबित्तिकै अन्धकार भयो । शिवको निधारमा पसिना आयो र त्यो पसिनाको थोपाथोपाबाट गर्भको रूप लिएर एउटा भयङ्कर क्रोधी, कुरूप, जटाधारी, अन्धो बालक उत्पन्न भयो । शिवले पार्वतीलाई त्यो बच्चाको देखभाल पुत्रसरह गर्ने जिम्मा दिए । पार्वतीले पनि सहर्ष स्वीकार गरिन् । हिरण्याक्ष राक्षसले पुत्रप्राप्तिका लागि शिवको कठोर तपस्या गरेपछि शिवले त्यही अन्धकलाई पुत्रको रूपमा उपहार दिए । यसरी शिवपुराणमा

अन्धकको जन्मबारे विस्तृत वर्णन गरिएको छ। त्यही अन्धकको कठोर तपस्या, ब्रह्माको वरदान र ब्रह्माद्वारा नै अन्धकको मरणको विस्तृत उल्लेख पनि शिवपुराणमा छ। अन्धक राक्षस आफ्ना मन्त्रीहरू दुर्योधन, वैधस र हस्तीसँग वनविहार गर्दै कैलासनजिकै पुगेपछि पार्वतीको रूपको बयान सुनेर कुभावनाले त्यहाँ प्रवेश गर्न खोज्यो। शिवले अन्धकलाई आफ्नो त्रिशूलमा उनेर मारे (संक्षिप्त शिवपुराण सं. २०५२ :३३५-३४५)।

विद्वान् राव महोदयले यसै प्रसङ्गमा अन्धकासुरको रगतबाट हजारौं अन्धकासुर उत्पन्न भएको र एकै क्षण युद्ध गर्न शिवलाई कठिन भएको चर्चा गरेका छन्। विष्णुले आफ्नो सुदर्शनचक्रद्वारा नयाँ उत्पन्न अन्धकासुरहरू नष्ट गरेको, शिवले मुख्य अन्धकासुरलाई त्रिशूलमा उनेको र यही कामका लागि योगेश्वरी देवी, ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, वाराही, इन्द्रायणी र चामुण्डा आगोको ज्वाला उत्पन्न गर्दै त्यही काममा जुटेको उल्लेख गरेका छन्। यसरी सप्तमातृकागणको उत्पत्ति पनि अन्धकासुरको वधसँग सम्बन्धित छ (राव, १९८५ : ३७९-३८१)। गोपीनाथ रावले इलफेन्टा र एलोरामा भएका अन्धकासुरवध मूर्तिका चित्रहरू प्रकाशित गरेका छन्। नेपालमा भने शिवको यो रौद्र रूपको मूर्ति प्राप्त छैन।

### वीरभद्र मूर्ति

दक्षको यज्ञ विध्वंस गर्न शिवले उत्पन्न गरेर पठाएका शिवका गण नै वीरभद्र हुन्। कूर्मपुराणमा दक्षप्रजापति कैलास जाँदा अपमानित भएको महसुस गरेर त्यसैको बदलामा शिव र सतीको अपमान गरेको उल्लेख छ। बाबु दक्षले गरेको यज्ञमा हामफालेर सतीले प्राण त्यागेको, अग्निले शिवको क्रोधको डरले शरीर भस्म नगरेको र शिवको आज्ञाले वीरभद्रले दक्षको शिर काटेर होमेको वर्णन शिवपुराणमा छ। वीरभद्रको मूर्ति बनाउँदा पालन गर्नुपर्ने नियमको उल्लेख 'श्रीतत्त्वनिधि' मा यस्तो छ– चारवटा हात, तीनवटा आँखा, दाह्रा निस्केको मुख वीरभद्रको बनाउनुपर्ने र हातमा गदा, धनु, खड्ग र बाण पनि देखाउनुपर्दछ। वीरभद्रको गलामा नरमुण्डमाला र खुट्टामा खराउ हुनुपर्दछ। दायाँतर्फ बोकाको टाउको भएको, नमस्कार गर्दै गरेको दक्षको मूर्ति पनि बनाउनुपर्दछ। वीरभद्रसँगै भद्रकालीको मूर्ति पनि हुनुपर्दछ (राव, १९८५ : १८२-१८६)। नेपालमा भने वीरभद्रको मूर्ति देखिएको छैन।

### ब्रह्मशिरच्छेद मूर्ति

यस मूर्तिको नामबाटै ब्रह्माको शिर छिनाएको भन्ने बुझिन्छ। वराहपुराणमा उल्लेख भएअनुसार भगवान् शिवले ब्रह्माको पाँचौं शिर छेदन गरेका थिए। पुराणमा परमपिता ब्रह्माको शिर काट्नुपर्ने परिस्थितिको पनि सविस्तार उल्लेख छ। ब्रह्माले रुद्र उत्पन्न गराएपछि 'कपाली' भनेर सम्बोधन गर्दै विश्वब्रह्माण्डको रक्षा गर्ने जिम्मा दिए। उग्र स्वभावका रुद्रलाई कपाली भनेको मन परेन र आफ्नो

देब्रे हातको बूढी औंलाको नङले ब्रह्माको पाँचौं शिर छेदन गरे । शिवको हातमा ब्रह्माको शिर टाँसियो । रुद्रले आफ्नो हातबाट ब्रह्माको शिर झार्ने उपाय ब्रह्मालाई नै सोधे । ब्रह्माले बाह्र वर्षसम्म कापालिकले जस्तो जीवनयापन गरेपछि शिर खस्ने उपाय रुद्रलाई बताए । ब्रह्माको सल्लाहअनुसार रुद्रले रौंद्वारा बनाइएको जनै, हड्डीका माला, जटामा मनुष्यखप्पर र हातमा रगत भरिएको कपाल लिएर पृथ्वीको विभिन्न भाग घुम्न थाले । बाह्र वर्ष पूरा भएपछि वाराणसीमा पुगेपछि त्यहाँ ब्रह्माको शिर खस्दा 'कपालमोचन' नामले प्रख्यात भयो । रुद्रले गङ्गामा नुहाएर विश्वेश्वर महादेवको दर्शन गरेर कैलास फर्किए (राव, १९८५ : १७४–७५) । शिवपुराणमा ब्रह्माजीले आठवटा नामद्वारा शिवको स्तुति गरेको वर्णन छ । ब्रह्माजीले गरेको स्तुति- भगवान् रुद्र ! तपाईंको तेज असङ्ख्य सूर्यको समान अनन्त छ, यस्ता तपाईंलाई नमस्कार छ । रसस्वरूप र जलमय विग्रहवाला तपाईं भवदेवतालाई नमस्कार छ । नन्दी र सुरभि (कामधेनु) यी दुवै तपाईंका स्वरूप हुन् । तपाईं पृथ्वीरूपधारी शर्वलाई नमस्कार छ । स्पर्शमय वायुरूप भएका तपाईंलाई नमस्कार छ । तपाईं नै वसुरूपधारी ईश हुनुहुन्छ, तपाईंलाई नमस्कार छ (संक्षिप्त शिवपुराण, २०५२ : ५७८–७९) ।

**नमस्ते भगवान् रुद्र भास्करामिततेजसे ।**
**नमो भवाय देवाय रसायाम्बुमयात्मने ॥**
**शर्वाय क्षितिरूपाय नन्दी सुरभये नमः ।**
**ईशाय वसवे तुभ्यं नमः स्पर्शमयात्मने ॥**

(शिवपुराण, वा.सं. पू. ख. १२। ४१–४४) ।

कूर्मपुराणमा ब्रह्मशिरच्छेदनको बेग्लै कथा छ । त्यहाँ वर्णन भएअनुसार ऋषिगणले एकपल्ट विश्वको सृष्टिकर्ता को हो ? भनेर सोधे । ब्रह्मा र शिव दुवैले आआफ्नो महत्ता देखाउन थाले । वेद आदि विभिन्न ग्रन्थले पनि शिव नै महान् भनेर प्रमाणहरू दिए । तर समस्याको समाधान हुनुभन्दा बल्झन थाल्यो । शिवले आफ्नो डरलाग्दो रूप भैरवलाई ब्रह्माको शिर काट्ने आदेश दिए र त्यही आदेशअनुरूप भैरवले ब्रह्माको शिर छेदन गरे । श्रीतत्त्वनिधिमा ब्रह्मशिरच्छेदन मूर्तिको वर्णन यसरी गरिएको छ– शिवको यस्तो रूपमा सेतो रङ, त्रिनेत्र, चार भुजा, शिरमा जटामुकुट, दायाँ कानमा पत्रकुण्डल र देब्रे कानमा कुण्डल, हातमा वज्र, परशु, शूल र ब्रह्माको शिर देखाउनुपर्दछ ।

**विरूपाक्ष**

भगवान् शिवका दस अवतार र एघार रुद्र अवतारको वर्णन शिवपुराणमा विस्तृत ढङ्गले गरिएको छ । दस अवतारमा महाकाल, तार, बाल भुवनेश, षोडशश्रीविधेश, भैरव, छिन्नमस्तक, धूमवान्, बगलामुख, मातङ्ग र कमल पर्दछन् । यसै गरेर एघार रुद्रका नाम पनि शिवपुराणमा बताइएको छ । जसमध्ये विरूपाक्ष पनि एउटा हो । अरू रुद्रहरू यस प्रकार छन्– काली, पिङ्गल, भीम, विरूपाक्ष,

विलोहित, शास्ता, अजपाद, अहिर्बुधन्य, शम्भु, चण्ड तथा भव (पौड्दार, सं. २०५२ : पृ. ३८७) ।

शिवपुराणमा वर्णन गरेअनुसार एकपल्ट इन्द्रसमेत समस्त देवगण दैत्यद्वारा पराजित भएपछि अमरावती छोडेर भागाभाग गरे । दुःखी देवगणले आफ्ना बिलौना ऋषि कश्यपलाई पोखे । देवताहरूका बाबु कश्यपले समस्याको समाधान गर्ने जुक्ति सोचेर काशी, विश्वनाथकहाँ गए । गङ्गामा स्नान गरेर विश्वनाथको पूजाअर्चना गरी शिवलिङ्ग स्थापना गरेर तपस्या गर्न लागे । ऋषिको लामो समयको कठिन तपस्यापछि शिव प्रसन्न भएर वरदान माग्न अनुरोध गरे । कश्यपले देवताहरूको दुःखकष्ट हर्न आफ्नो छोराको रूपमा जन्म लिन शिवलाई अनुरोध गरे । शिवले कश्यपको अनुरोध स्वीकार गरे । कश्यपपत्नी सुरभिको गर्भबाट एघारवटा विभिन्न रूपमा शिवले जन्म लिए । विरूपाक्ष पनि एघार रूपमध्ये एक रूप हुन् । यसरी शिवपुराणको आधारमा विरूपाक्षलाई शिवका एकादश रुद्रस्वरूप मान्न सकिन्छ ।

पशुपतिक्षेत्रको आर्यघाटमा स्थित प्रसिद्ध विरूपाक्षको मूर्तिबारे विभिन्न किंवदन्ती प्रचलित छन् । हिमवत्खण्डमा शिवका एक जना भक्त विरूपाक्षको जीवनी प्रस्तुत गरिएको छ । दुवैको नाम मिलेकाले पशुपति, आर्यघाटको विरूपाक्ष मूर्तिसँग हिमवत्खण्डको कथा जोडिएको हो । संस्कृतिविज्ञ हरिराम जोशीले विरूपाक्षसँग सम्बन्धित किंवदन्ती र सम्भावनाको जुन वर्णन गरेका छन्, त्यो उल्लेखनीय छ । जोशीले विरूपाक्षलाई नागकुलका नेता (प्रमुख) मानेका छन् । त्यस बेलाको समयमा यौनस्वतन्त्रता भएको र मातृसत्तात्मक समाज भएकाले स्त्रीहरू पनि यसमा विशेष अग्रसर रहेको र विरूपाक्षको आमासँगको यौनसंसर्गलाई जोशीले त्यसरी नै वर्णन गरेका छन्, जसलाई सहज रूपमा स्वीकार्न भने सकिँदैन (जोशी, २०४२ : पृ. १-३) । जोशीले स्वयम्भू डाँडामा रहेको मध्यकालीन समयको विरूपाक्षको मूर्तिबारे पनि उल्लेख गरेका छन् । डी.सी. सरकारले दक्षिण भारतमा स्थापना गरिएको विरूपाक्ष मूर्तिको उल्लेख गरेका छन् (डी.सी. सरकार, १९८३ : पृ. ५९२-६००) । यसरी प्राचीन समयदेखि मध्यकालको समयसम्मै विरूपाक्षको मूर्ति स्थापना गरेर पूजा गर्ने चलन पाइन्छ ।

आर्यघाटमा स्थापना गरिएको विरूपाक्षको मूर्तिको कम्मरभन्दा तलको भाग जमिनभन्दा तल गाडिएकाले हातमा लिएका आयुधबारे केही भन्न सकिँदैन । वि.सं. २०२२ सालमा चोरहरूले खनेर मूर्ति बाहिर निकाले, तर चोर्न असफल भए । त्यही बेलामा देब्रे हातमा शिवलिङ्ग र दाहिने हातमा अक्षमाला आयुध देखिएको कुरा जोशीले लेखेका छन् (जोशी, २०४२ : पृ. ४) ।

त्यस्तै गोविन्द टण्डनले पनि वि.सं. २०२२ सालतिर किरात समुदायका एक जना वृद्धले त्यो मूर्ति खनेर जमिनमाथि झिकेको र त्यस बेला हातमा शिवलिङ्गजस्तो देखिने वस्तु र अक्षमाला रहेको वर्णन गरेका छन् । देख्ने व्यक्तिको सन्दर्भमा टण्डनले पशुपति गोस्वाराका तात्कालिक प्रमुख वटुकृष्णले बताएको भनी स्थानीय

देउपाटननिवासी श्री पद्मप्रसाद भट्टले आफूलाई बताएको प्रसङ्ग उल्लेख गरेका छन् ।

मूर्ति चिन्नलाई केही प्रमुख आधार छन्- १ आयुध, २ वाहन, ३ वेशभूषा, ४ गरगहना र ५ स्थान । यो मूर्तिको कपालको ढाँचा जटाजस्तो छ, कानमा लगाएको कुण्डल प्रस्ट रूपमा पाँच-छमुखे रुद्राक्षजस्तो छ । त्यसको निधारमा तेस्रो आँखा र ऊर्ध्वलिङ्ग प्रस्टसँग बनाइएको छ । यी सबैका आधारमा यो मूर्ति शिवको अवतार एकादश रुद्रमध्ये एक विरूपाक्षकै हो भनेर किटान गर्न सकिन्छ । यो मूर्तिको समय लिच्छविकालभन्दा अधिको हो भन्ने कुरा धेरै विद्वान्हरूले मानेका छन् । लैनसिंह बाङ्देलले विरूपाक्षको मूर्तिलाई चारौँ शताब्दीको मानेका छन् (बाङ्देल, १९८२ : पृ. ९३) । त्यस्तै प्रतापादित्य पालले छैटौँ शताब्दीको कला मानेका छन् (पाल, १९९४ : पृ ७५) । पशुपतिक्षेत्रको अध्ययन गर्ने विद्वान् गोविन्द टण्डनले भने यस मूर्तिको समय तेस्रो-चौथो शताब्दी मानेका छन् (टण्डन, २०५३ : पृ. ४९२) । यसरी विभिन्न विद्वान्ले अनुमान गरेको समय र विरूपाक्ष मूर्तिको मुखाकृति र शारीरिक बनोटको आधारमा यो मूर्ति लिच्छविकालभन्दा अधिको नै देखिन्छ । पशुपति आर्यघाटको विरूपाक्ष पूर्वलिच्छविकालको मूर्ति हो । लिच्छविकालीन मूर्तिहरूका विशेषताभन्दा केही फरक भएको हुँदा यी मूर्तिहरूलाई पूर्वलिच्छविकालको मानिएको हो । पूर्वलिच्छविकालका मानिएका यी मूर्तिहरूमा शारीरिक बनोट पुड्को, बाटुलो, ठूलो आकारको मुखाकृति, फुकेको नाक र वस्त्रको कम प्रयोग पाइन्छ । विरूपाक्षको मूर्तिको पनि गठिलो शरीर, फुकेको नाक, चौडा अनुहारको आधारमा लिच्छविकालभन्दा अधिको कलाकृति मान्न सकिन्छ (पौडयाल, २०५७ : पृ. १०-११) ।

# अध्याय : पाँच
# काठमाडौँ उपत्यकाका उमामहेश्वरका मूर्तिहरू

## पाटन, चामुण्डा मन्दिरको आँगनको उमामहेश्वर

काठमाडौँ उपत्यकामा प्राप्त उमामहेश्वरका मूर्तिहरूमध्ये प्राचीन मूर्तिहरू पाटनमा छन् । पाटन, चामुण्डा मन्दिरको आँगनमा रहेको उमामहेश्वर उपत्यकामा प्राप्त सबैभन्दा पुराना उमामहेश्वरफलकमध्ये एक हो । नीलरत्न बनर्जीले यो उमामहेश्वर मूर्तिफलक इसाको चौथो-पाँचौँ शताब्दीको भनेर समय तोकेका छन् (बनर्जी, २०२४ : पृ.१०) । लैनसिंह बाङ्देलले अन्य प्राचीन उमामहेश्वर मूर्तिबाहेक उपत्यकाका अरू मूर्तिसँग तुलना गरेर यो चामुण्डा मन्दिरको आँगनमा भएको उमामहेश्वरको दोस्रो-तेस्रो शताब्दीको समय तोकेका छन् (बाङ्देल, २०३९ : पृ.९८) । अब मूर्तिको वर्णनतर्फ लागौँ । यो मूर्ति हेर्नेबित्तिकै प्राचीन देखिन्छ । सम्पूर्ण फलकको पृष्ठभूमिमा नन्दी प्रस्टसँग कुँदिएको छ । त्यसपछि शिवपार्वती बसेको प्रस्ट देखिन्छ । पार्वतीको दायाँ तिघ्रामा सानो मानवाकृति बसेको देखिन्छ, त्यो कुमारको मूर्ति हुनुपर्दछ । यीबाहेक यो मूर्तिमा अरूको उपस्थिति देखिँदैन । यो मूर्ति बस्ने ढाँचा पनि अस्वाभाविक छ । पार्वतीका हातगोडा अमिल्दो ढङ्गले मोटा र लामा छन् । यो फलकमा शिवका दुई हात छन् । बायाँ गोडा आसनमै मोडेर राखेका, दायाँ गोडा आसनीबाट तल झारेर बसेका शिव अन्य उमामहेश्वरफलकमा जस्तै यसमा देखिन्छन् । मूर्ति धेरै खिइएकाले आयुध प्रस्ट छैन, तर दायाँ हात छातीसम्म पुऱ्याएर केही समातेको जस्तो वा अभयमुद्रामा राखेको देखिन्छ । धोतीको बुट्टा केही देखिँदैन, तर कम्मरमा पटुका भने मिलाएर लगाएको छ । यो चौडा पटुकामा प्रस्टसँग शिवको ऊर्ध्वलिङ्ग देखिन्छ । शिवको गहना खिइएर प्रस्ट छैन, तर पनि राष्ट्रिय नाचघरमा भएको चतुर्मुखी शिवको र बलम्बुको शिवको गहनासँग मेल खाने खालको छ । पार्वतीको कपालको ढाँचा भने उपत्यकाका प्राचीन स्त्रीमूर्तिहरूको जस्तै छ । आधा शरीर ढाक्ने गरेर ठूलो जुरो बनाएको अझै पनि प्रस्ट देखिन्छ । यो सम्पूर्ण मूर्तिको सूक्ष्म अध्ययन गर्दा यो मूर्ति लिच्छविकालभन्दा अगाडिको हो भन्ने प्रस्ट हुन्छ, तर पनि निश्चित समय तोक्न गाह्रो छ ।

**पाटन, गचाननीको उमामहेश्वर** (इ.स. १०३२)

पाटनका उमामहेश्वरफलकहरूमध्ये मिति भएको यो उमामहेश्वर पनि वर्णनयोग्य छ । २५×१४ इन्च लम्बाइचौडाइ भएको यो फलकको पनि तीन खण्ड वर्गीकरण गरेर वर्णन गर्न सकिन्छ । सबैभन्दा माथिल्लो खण्डको बीचमा छत्र र दायाँबायाँ शिवगण, रक्षकहरू कुँदिएका छन् । बीचको मुख्य भागमा एउटा ठूलो आसनीमा व्याघ्रचर्ममाथि शिवपार्वती शृङ्गारिक भावमा देखाइएका छन् । प्रायः सबै उमामहेश्वरफलकमा जस्तै यसमा पनि शिवका चारवटा हात छन् । शिवको बायाँतर्फको अगाडिको हात पार्वतीको कुममा हल्का तरिकाले अडचाइएको छ । अन्य तीन हातमा त्रिशूल, अक्षमाला, मातुलिङ्ग आदि आयुध कुँदिएका छन् । शिवको दायाँतर्फ पुरुष अङ्गरक्षक र पार्वतीको देब्रेतर्फ स्त्रीसेविकाहरू अन्य उमामहेश्वर-फलकमा जस्तै गरेर कुँदिएको छ । पार्वतीको बसाइ स्वाभाविक र आकर्षक छ । पार्वतीको दायाँ हात शिवको देब्रे तिघ्रामा अडचाइएको छ र देब्रे हात मोडिएको आफ्नै घुँडामा अडचाइएको छ । आसनीबाट तल झरेको पार्वतीको पाउ पलेँटी कसेर बसेकी, सुन्दर केशसज्जा भएकी सेविकाले थामेको दृश्य आकर्षक ढङ्गले दर्साइएको छ । शिवपार्वती बसेको खुट्टा भएको पिर्काको भित्री भागमा दैनिक प्रयोगका सामानहरू राखिएका छन् । काठमाडौँ उपत्यकाका अन्य केही उमामहेश्वरफलकमा पनि यस्तै गरेर घरेलु सामानहरू आसनीको तल राखेको दृश्य स्वाभाविक ढङ्गले प्रदर्शन गरिएको छ । घैँबु, पाटनमा स्थापित (इ.स. ९८७) उमामहेश्वरफलक र हाँडीगाउँ सत्यनारायण मन्दिरमा स्थापित (इ.स. १४१४) मूर्तिफलकमा पनि आसनीमुनि दैनिक प्रयोगका सामान कुँदिएका छन् । फलकको सबैभन्दा तल सात जना गणहरू कुँदिएका छन् । तल्लो खण्डका गणहरू र शिवपार्वती बसेको आसनीको बीचको खाली भागमा अभिलेखसहित मिति लेखिएको छ । उमामहेश्वरफलकको सबैभन्दा तल्लो खण्डमा बीचमा चारवटा हात भएका गणेश नृत्यमुद्रामा र अन्य सात जना गणहरू विभिन्न वाद्यवादन गर्दै हर्षित मुद्रामा नाच्दै गरेको देखाइएको छ । शिवको दायाँतर्फ कुँदिएको नन्दीको अनुहार पूरा खण्डित छ । नन्दीको दायाँतर्फ सानो छुट्टै कोठामा कुमारको प्रस्तुति पनि वर्णनीय छ । मूर्तिफलकको माथिल्लो खण्ड र पार्वतीको मुहार खण्डित भएकाले भावभङ्गीबारे बताउन सकिँदैन । समग्रमा भन्नुपर्दा मिति र अभिलेखसहितको यो उमामहेश्वर मूर्ति उल्लेखनीय छ ।

**पाटन, क्वालखुको उमामहेश्वर**

पाटनको क्वालखुमा अलि फरक शैलीको उमामहेश्वर मूर्ति स्थापना गरिएको छ । मिति र अभिलेख नभएको, तर शैलीको आधारमा अठारौँ शताब्दीताकाको कलाशैली झल्कने यो उमामहेश्वरफलकमा थुप्रै देवीदेवताले स्थान पाएका छन् । फलकको सबैभन्दा माथि जलहरीसहितको शिवलिङ्गलाई दुई जना ऋषिले जल र पुष्प अर्पित गर्दै छन् । शिवलिङ्गको ठीक तल गङ्गाले दुई हातले समातेको लोटाले

शिवको जटामा जल चढाउँदै र अरू दुईवटा हातले हावामा उड्न लागेको ओढ्ने समात्दै गरेको देखाइएको छ । शिरमा मुकुट, कानमा कुण्डल, गलामा हार र नाडीमा मोटा चुरा लगाएकी गङ्गा नदीलाई सुन्दर स्त्रीका रूपमा प्रस्तुत गर्नु नेपाली उमामहेश्वरफलकको विशेषता हो, जुन यो क्वालखु, पाटनको उमामहेश्वरफलकमा पनि देखिन्छ । गङ्गाका दायाँ र बायाँ हातमा चमर लिएर हम्किन लागेका सेविकाहरूको कम्मरसम्मको मूर्ति देखाइएको छ । त्यसपछि चारवटा हात भएका, विविध आयुध लिएका देवता पलेँटी कसेर फलकको दायाँबायाँ बसेका छन् । ती ब्रह्मा र विष्णु हुन सक्ने सम्भावना भए पनि हातमा लिएको आयुधबाट त्यो प्रस्ट हुँदैन । फलकको बीच भागमा एउटै आसनीमा व्याघ्रचर्म ओछ्याएर शिवपार्वती अर्धपर्यङ्क आसनमा बसेका छन् । शिवका चारवटा हातमध्ये दुईवटामा त्रिशूल एवं अक्षमाला छन् भने एउटा हातले पार्वतीलाई अँगालेको र अर्को हात अभयमुद्रामा छ । पार्वतीका दुईवटा हातमध्ये दायाँ आफ्नै दायाँ खुट्टामाथि र बायाँ अभयमुद्रामा देखाइएको छ । बायाँ हातले कमलको फूलको डाँठ पनि समातेको छ । पार्वतीले दायाँ खुट्टा आधा पलेँटी कसेर शिवको बायाँ तिघ्रामाथि थपक्क राखेकी छन् । यो मूर्तिफलकको सबैभन्दा नौलो प्रस्तुति शिवको दायाँतर्फ चारवटा हात भएका गणेश मूर्तिको अङ्कन हो । यो फलकमा गणेशलाई गणपतिको रूपमा मात्र नभएर शिवपार्वतीको पुत्रको रूपमा देखाइएको छ । शिवका दायाँतर्फ नन्दी र चारवटा हात भएका शिवगण पनि कुँदिएका छन् । अन्य उमामहेश्वरफलकमा जस्तै यसमा पनि पार्वतीको पाउ सानी सेविकाले थामेकी छिन् । शिव र पार्वतीको शिरपछाडि ज्वालावलि, शिव र पार्वतीको अलङ्कृत मुकुट, शिवको कानमा सर्पकुण्डल र पार्वतीको कानमा ठूलो गोलो आकारको कुण्डल, गलामा कण्ठहार एवं लामो माला, शिवको छातीमा सर्पको जनै, पाखुरामा बाजु, नाडीमा चुरा र पाउमा पाउजु सबै नै कलाकारले मिलाएर बनाएका छन् । यो उमामहेश्वर मूर्तिफलकको सबैभन्दा तल्लो खण्डमा देखाइएका गणहरूको स्थिति सारै नै आकर्षक छ । सातवटा गणहरूमध्ये बीचमा गणपतिको स्थानमा तीनवटा पाउ, तीनवटा हात र तीनवटा शिर भएका ऋषि भृङ्गी देखाइएका छन् । उनकै दायाँतर्फ करङ मात्र देखिने दुब्ला पातला भृङ्गी नै नाच्दै गरेको भावमा देखाइएको छ । भृङ्गीको दायाँतर्फ नै नन्दीगण, सिंहमुखगण कुँदिएको छ भने देब्रेतर्फ विभिन्न जनावरका शिर र मानिसको शरीर भएका गणहरू बाजा बजाउँदै गरेको देखाइएको छ । शिवका गणहरूमध्ये नन्दी र भृङ्गीको पूर्वजन्मको कथा शैव पुराणहरूमा उल्लेख गरिएको छ । पूर्वजन्ममा अन्धक राक्षस शिवभक्तिले भृङ्गी ऋषिको रूपमा जन्मिएको वर्णन शिवपुराणमा छ । शिव र पार्वतीसँगै टाँसिएर बस्दा पनि भृङ्गीले शिवलाई मात्रै परिक्रमा गर्दथे । भृङ्गीको अन्धभक्ति देखेर पार्वतीलाई समेत ईर्ष्या हुन्थ्यो । एकपल्ट पार्वतीले सारै ईर्ष्याले भृङ्गीलाई हेर्दा उनको शरीरबाट मासु नै गलेर खस्न थाल्यो । हाडछालाको शरीर सन्तुलत गर्न गाह्रो भएपछि शिवले आफ्ना परमभक्तलाई

तेस्रो खुट्टा प्रदान गरे । त्यसैले उमामहेश्वरफलकमा दुब्ला, करङ मात्र देखिने भृङ्गी र तीन खुट्टा भएका भृङ्गी दुवैको उपस्थिति पनि दर्साइन्छ ।

शिवका वाहन र गण दुवै रूपमा नन्दीको प्रस्तुति उमामहेश्वरफलकमा पाइन्छ । सामान्यत: नन्दीबिनाको शिवको पूजा फलदायी मानिँदैन । नन्दीलाई शिवकै अवतारको रूपमा पनि पुजिन्छ । शिलाद ऋषिले सारै कठिन तपस्या गरेपछि उनका पुत्र नन्दीको रूपमा स्वयं शिवले जन्म लिएको वर्णन शिवपुराणमा छ । नन्दीको अल्पायु पनि शिवको भक्तिका कारणले हटेको र उनले शिवबाटै मृत्यु र बुढेसकालमाथिको विजय हासिल गरेको उल्लेख पनि शिवपुराणमै छ । नन्दीको मुख साँढे वा बाँदरजस्तो देखाउनुपर्ने र शरीर मानिसको बनाउनुपर्ने नियम प्रतिमाविज्ञानका पुस्तकमा वर्णन गरिएको छ । काठमाडौं उपत्यकाका थुप्रै उमामहेश्वरफलकमा सारै सुन्दर ढङ्गले गणहरू कुँदिएका छन् । पौराणिक ग्रन्थमा वर्णित आख्यानहरूलाई नेपालका सक्षम कलाकारहरूले सारै सुन्दर र सूक्ष्म ढङ्गले प्रस्तुत गर्न सकेका छन् । ती ज्ञातअज्ञात कलाकारको प्रशंसा गर्नु नै पर्दछ ।

**पाटन, गहिटीको उमामहेश्वर**

एउटा सुन्दर उमामहेश्वर मूर्तिफलक पाटन, गहिटीमा स्थापना गरिएको थियो । इ. सन् १९६० तिर त्यो मूर्ति चोरी भयो । ३० इन्च अग्लाइ भएको त्यो मूर्तिको माथिल्लो खण्डमा शिवका दुई रक्षकगणहरूलाई कम्मरसम्म देखाइएको छ । तल्लो भाग पहाडभित्र छेकिएको छ । माथिल्लो भागमा गङ्गानदी बनाउने स्थानमा फूल, पात, लहरा बनाएर कलाकारले नौलो शैली प्रयोग गरेको आभास हुन्छ । फलकको बीचमा व्याघ्रचर्ममाथि आसनीमा शिवपार्वती शृङ्गारिक भावमा कुँदिएका छन् । शिवका चारवटा हातमध्ये तीनमा अक्षमाला, त्रिशूल, मातुलुङ्ग छन् भने एक हातले पार्वतीलाई मायालु ढङ्गले अँगालो हालेको छ । शिवको शिरपछाडि अग्निज्वालाले घेरिएको प्रभावलि, शिरको जटामुकुट, घाँटीको फूलबुट्टे कण्ठहार, बाजुमा सर्पवलय र कम्मरमा पेटी सबै नै विचार पुऱ्याएर बनाइएको छ । त्यस्तै पार्वतीको कपालको ढाँचा, मुकुट, धोती अडयाउन लगाइएको बुट्टे कम्मरपेटी, कानका कुण्डल र गलाका हार, नाडीका मोटा बाला सबै नै सुहाउँदा, आकर्षक ढङ्गले कुँदिएका छन् । शिवसँगको सामीप्यमा पार्वतीको हर्ष र आनन्दविभोरको भाव मुहारमा झल्काउन कलाकार सफल भएका छन् । पार्वतीतर्फ तीन जना सेविकाहरू फलकका बचेका ठाउँमा मिलाएर कुँदिएका छन् । छाता, चमर, ढक्की लिएका र पार्वतीको पाउ बिस्तारै मिच्न लागेका सेविकाहरूका कपालका ढाँचा र गहनाहरू पनि कलात्मक छन् । पार्वतीले दाहिने हात शिवको तिघ्रामा अडयाएकी छन् र देब्रे हात आफ्नै घुँडामा अडयाएकी छन् । शिवको दायाँतर्फ बालक कुमारले एक हातले मयूर र अर्को हातले शिवको घुँडा खेलाउँदै गरेको देखाइएको छ । कुमारभन्दा अलिकति तल घुँडा मारेर एक जना सेवक नम्र भावमा बसेको देखाइएको छ । गहिटी, पाटनको उमामहेश्वरफलकको सबभन्दा तल्लो खण्डमा बनाइएका पाँच जना गणहरूको प्रस्तुति सारै नै आकर्षक

छ । पाँचै जना गणहरूलाई आसनमुद्रामा देखाइएको छ । बीचमा कुँदिएका गणेशका चार हातमा अक्षमाला, बन्चरो, लड्डुको भाँडो र पातसहितको मूला देखाइएको छ । तीनवटा शिर, तीनवटा हात र तीनवटा पाउ भएका भृङ्गी ऋषिको रूप यसमा देखाइएको छ । हातमा कमण्डलु लिएका करङ देखिने भृङ्गी ऋषि पनि फलकमा दर्साइएका छन् । गणमध्ये पेटमा आँखा, नाक, मुख भएका उदरमुख गण पनि उल्लेखनीय छन् । विशेष प्रकारको केश ढाँचा भएका यी उदरमुख गणले चारवटा हातमा विभिन्न आयुध लिएका छन्, जसमध्ये त्रिशूल र अक्षमाला प्रस्ट छन् । गणेशको दायाँतर्फ तीनवटा शिर भएका भृङ्गी र भृङ्गीको दायाँतर्फ कानमा घण्टको कुण्डल लगाएका घण्टाकर्ण देखाइएको छ । पाटन, गहिटीको यो उमामहेश्वरफलकको तल्लो खण्डमा बनाइएका शिवगणहरूलाई अन्य फलकका नाचगानमा व्यस्त गणहरूभन्दा फरक शैलीमा प्रस्तुत गरिएको छ । दसौँ-एघारौँ शताब्दीताकाको यो उमामहेश्वरफलक सुन्दर कलाकृतिका कारण सधैँ नै चर्चित छ ।

**पशुपति (अरुणधारा) को उमामहेश्वर**

पाटन, चामुण्डाकै जोडाखाले अर्को उमामहेश्वर मूर्ति पशुपतिमा छ । यो मूर्ति पनि हेर्नेबित्तिकै पुरानो हो भनेर तोक्न सकिन्छ । दुवै मूर्ति उत्तिकै खिइएका देखिन्छन् । प्रथम झलकमै यो फलकमा शिवपार्वती र नन्दी देखिन्छन् । यो फलकमा शिव पलेँटी मारेर बसेका छन् । शिवको दायाँ हात छातीसम्म उठाएर केही समातेको जस्तो लाग्दछ, तर प्रस्ट छैन । अभयमुद्रा पनि हुन सक्छ । पाटन, चामुण्डाको उमामहेश्वर मूर्तिफलकमा पनि शिवको दायाँ हात अभयमुद्रामै छ । बायाँ हात भने पार्वतीको काखीमुन्तिरबाट ल्याएर आफ्नै काखमा राखेका छन् । पार्वतीले भने ढेपिएर कम्मरमा अँगालो हालेकी र बायाँ हात भने दोबारेर आफ्नै तिघ्रामा अडचाएकी छन् । शिव र पार्वती दुवैका अनुहार खण्डित भएकाले भावभङ्गी देखिँदैन, तर पार्वतीले जसरी घाँटी मर्काएर शिवपट्टि फर्केकी छन्; त्यसबाट उनको प्रेमको भाव झल्काउने अनुहारको कल्पना सहजै गर्न सकिन्छ । लुगाको बारेमा भने त्यति प्रस्टसँग भन्न सकिँदैन । शिवको काखमुन्तिर धोतीको मुजामुजा देखिन्छ, त्यसैले शिवपार्वतीले लुगा लगाएको अनुमान गर्न सकिन्छ । शिवले घाँटीमा लगाएको कण्ठहार, कानका ठूलाठूला कुण्डल, जटामुकुट सबैको शैली राष्ट्रिय नाचघर र बलम्बुका शिवको जस्तै देखिन्छ । लैनसिंह बाङ्देलले नन्दीको घाँटीमा कुमार बसेर सिंङ खेलाएको वर्णन यो मूर्तिको प्रसङ्गमा गरेका छन्, तर नन्दीमाथि कुमार देखिँदैनन् । मूर्ति देख्नेबित्तिकै सरल र प्राचीन लाग्दछ । पार्वतीको कपाल बनाउने ढाँचा पनि प्राचीन स्त्रीमूर्तिकै जस्तो छ । मूर्तिको समय दोस्रो, तेस्रो शताब्दीताकाकै देखिन्छ । लैनसिंह बाङ्देलले इस्वी तेस्रो शताब्दी भनेर यसको मिति तोकेका छन्, जुन स्वाभाविकै देखिन्छ (बाङ्देल, २०३९ : पृ.१९८-९९) । यसै गरेर पशुपतिक्षेत्रको अध्ययन गर्ने गोविन्द टण्डनले यो मूर्तिको समय दोस्रो-तेस्रो शताब्दी तोकेका छन् (टण्डन २०५३ : पृ. ४५०) । काठमाडौँ उपत्यकाका

प्राचीन मूर्तिसँग तुलना गर्दा अरुणधारा, पशुपतिको यो मूर्ति दोस्रो-तेस्रो शताब्दीताकाकै देखिन्छ ।

प्राचीन मूर्तिको क्रममा पाटनको पुरातत्त्व बगैंचामा रहेका शिर नभएका उमामहेश्वर मूर्तिफलक र पाटनकै कुम्भेश्वरमा मुख ताछिएका उमामहेश्वर पनि पर्दछन् । पाटनमा यी दुवै मूर्तिहरू चामुण्डा मन्दिर र पशुपति, अरुणधाराका उमामहेश्वरभन्दा केही पछिका हुन् ।

**काठमाडौँ, सखोनाको उमामहेश्वर**

काठमाडौँ उपत्यकामा प्राप्त पुराना उमामहेश्वरफलकहरूमध्ये सखोनाको मूर्ति पनि पर्दछ । झट्ट हेर्दा अपरिष्कृत कलाको झलक यो फलकमा पाइन्छ । शिव, पार्वती, कुमार र नन्दी मात्रै कुँदिएको यो फलक कलाको दृष्टिकोणबाट त्यति आकर्षक छैन । मूर्तिफलकको सबैभन्दा माथिल्लो भाग र तल्लो भागमा कुनै पनि आकृति वा बुट्टा बनाइएको छैन । काठमाडौँ उपत्यकामा प्राप्त सबै उमामहेश्वरफलकको अध्ययन गर्दा प्राचीन मूर्तिहरूमा शिव र पार्वतीको मात्रै उपस्थिति छ । त्यसपछि क्रमिक रूपमा सदस्यहरूको सङ्ख्या बढ्दै गएको पाइन्छ । तल्लो भागमा बनाइने शिवका गणहरूको सङ्ख्या पनि तीन जनाबाट सुरु भएर क्रमिक रूपमा नौ जनासम्म पुगेको पाइन्छ । यो सखोनाको मूर्तिमा भने गणहरू, रक्षकहरू, परी, विद्याधर, गङ्गा, गणपति कसैको पनि उपस्थिति देखाइएको छैन ।

शिवको पृष्ठभागमा जुरोसहितको साँढे र पार्वतीतर्फ बच्चा कुमार देखाइएको छ । प्राचीन उमामहेश्वरफलकको एउटा मुख्य विशेषतामा शिवका दुईवटा मात्रै हात हुन्, जुन यो फलकमा पाइन्छ । यो मूर्ति हेर्नेबित्तिकै एउटा सिकारु कलाकारको कृतिजस्तो लाग्दछ ।

परिवारको सङ्ख्याको गणनाअनुसार यो प्राचीन मूर्ति हो, तर मेरी स्लुसरले तोकेको जस्तो तेस्रो-चौथो शताब्दीको भने हैन (स्लुसर, नेपाल मण्डल, प्ले. नं. ३५० ) । छैटौँ शताब्दीसम्मको हुन सक्तछ ।

**चाँगुस्थित छिन्नमस्ता मन्दिरभित्रको उमामहेश्वर**

चाँगु मन्दिरभित्रको ढुकुटी र बाहिर जम्मा तीनवटा उमामहेश्वर मूर्तिको उल्लेख खनालले गरेका छन् । उमामहेश्वरको प्राचीन मूर्ति छिन्नमस्ता मन्दिरभित्र रहेकाले यसमा त्यसको मात्रै वर्णन गरिनेछ । देख्नेबित्तिकै यो मूर्ति प्राचीन हो भनेर तोक्न सकिन्छ । खनालले शैली, बनोट र स्थितिको आधारमा यस मूर्तिलाई इसाको तेस्रो शताब्दीतामा राख्न सकिन्छ भनेका छन् । विद्वान् लैनसिंह बाङ्देलले पनि चामुण्डा मन्दिरको उमामहेश्वरसँग चाँगुको उमामहेश्वर दाँजेर इसाको दोस्रो-तेस्रो शताब्दीमा राख्न सकिने कुरा स्वीकारेका छन् । यो उमामहेश्वरफलकको सरल शैली, गहना र शिवको परिवारको सङ्ख्या विचार गर्दा उपत्यकाका प्राचीन मूर्तिमध्ये नै पर्दछ । त्यसमा शङ्का छैन । यो फलकमा आसनीमा बसेका शिवले

आफ्नो देब्रे खुट्टा तलतिर झुन्ड्याएर दाहिने खुट्टा आसनीमा राखी ऊर्ध्वरेतमुद्रामा बसेका छन् । उमा दुवै गोडा आसनीबाट तलतिर झारी शरीर मर्काएर अनुहार भने शिवतर्फ फर्काएर बसेकी छन् । यो मूर्तिमा शिवका दुईवटा हात मात्र छन् । ज्यादै खिइएकाले आयुध प्रस्ट छैन । अधिकांश उमामहेश्वरफलकजस्तो यसमा शिवपार्वतीले अँगालो मारेका छैनन् । दाम्पत्यजीवनमा पनि रहने सङ्कोचको भाव यो उमामहेश्वरफलकमा देखिन्छ । शिवको दाहिने बाहुतर्फ नन्दी प्रस्टसँग देखिन्छन् । नन्दीको सिङ खेलाउँदै गरेका वा पार्वतीको घुँडामाथि बसेका कुमार भने यसमा पहिल्याउन सकिँदैन । चाँगुको उमामहेश्वरफलकमा पार्वतीको कपालको ढाँचा भने उपत्यकाका प्राचीन स्त्रीमूर्तिहरूकै ढाँचाको छ । हाँडीगाउँको कोटाल टोलको मातृदेवीको जस्तै कपालको ढाँचा उमाको देखिन्छ । शिवका कानका कुण्डल र गलाको हार पनि प्राचीन मूर्तिहरूकै जस्ता छन् । सारै खिइएकाले यो मूर्तिको भावभङ्गी बताउन सकिँदैन, तर नेपाली कलाको यो अमूल्य नासोको सुरक्षा भने हामीले गर्नुपरेको छ ।

**पाटन, सिकुबहीको उमामहेश्वर**

प्राचीन उमामहेश्वरफलकमध्ये अभिलेख भएर पनि विवादमा परेको मूर्ति पाटन, सिकुबहीको उमामहेश्वर हो । मूर्ति पुरानो हो, त्यसमा पनि विवाद छैन । त्यो मूर्तिमा अभिलेख छ, त्यो पनि प्रस्ट छ । तर समस्या यो हो कि त्यो अभिलेख मूर्तिभन्दा नयाँ हो ? अर्को, त्यो मूर्तिसँग सम्बन्धित हो कि हैन ? यसमा त्यही विषयकै चर्चा गरिनेछ । पाटन, सिकुबहीको उमामहेश्वर मूर्तिमा नन्दी, कुमार, गणेश कसैको पनि उपस्थिति छैन, खालि उमा र महेश्वर दुई जना मात्रै छन् । प्राचीन उमामहेश्वर मूर्तिमा देखिने विशेषतामा सरलता, शिव र पार्वतीबाहेक अन्य सदस्यको अनुपस्थिति एवं शिवका दुईवटा हात यो मूर्तिमा पनि देखिनु पर्दछन् । शिवको बसाइको ढाँचा र पार्वतीको बसाइको ढाँचा प्रारम्भका उमामहेश्वर मूर्तिमा जस्तै छ । छैटौं शताब्दी र त्यसपछिका उमामहेश्वर मूर्तिमा शिव र पार्वतीका गणहरू, अङ्गरक्षकहरू, फलकको माथि शिवलिङ्गमा गङ्गाको उपस्थिति देखिन्छ, तर यो मूर्तिफलकमा ती सम्पूर्ण कुराको अभाव छ । त्यसैले निःसन्देह यो मूर्ति पाँचौं शताब्दीभन्दा अघिको नै हो । अब यो मूर्तिको अभिलेखको चर्चा गरौं । 'ॐ बहिर्देशबाट दक्षिणतिर राजदूत वज्ररथको..... हुनुहुन्थ्यो । उहाँकै गोतिया एक जनाले बाग्वती र महीमतीको दोभानको ठाउँमा जुन मातृकादेवी स्थापना गरिएका थिए, माटाका ती मूर्तिहरू कालक्रमले पुराना भएका हुनाले ज्यादै जीर्ण भए र तिनका हातखुट्टा भाँचिए । यसरी बिग्रेका ती मूर्ति देखेर ठूला धर्मात्मा वभ्रुवर्माले ती मातृकाहरूको जीर्णोद्धार गर्ने विचार गर्नुभएको थियो । (तर) यो काम पूरा गर्न नपाउँदैमा कालगतिले...... फल भोग्नाका लागि उहाँ स्वर्ग जानुभयो । त्यस कारण अहिले उहाँकै भतिजा, सधैं धर्ममा मन लाउने, परम भागवत देशवर्माकी आमा, पतिव्रता धर्मात्मा देशभट्टारिकाले स्वर्गवासी उहाँ वभ्रुवर्माको अनन्त कालसम्म स्वर्गमा बास होस् भनी तथा आमाबाबु, पति र आफन्तसमेतको पुण्य

बढोस् भनी फेरि अर्के किसिमले ढुङ्गे ती मातृकादेवीहरू बनाइएका छन् । संवत् ४९५'
(वज्राचार्य, २०३०, पृ. २११) ।

अभिलेखको विषयसँग यो उमामहेश्वर मूर्तिको सम्बन्ध देखिएन । यो मूर्तिमा पछि अभिलेख कुँदिएको हो भन्ने कुरा मूर्तिको वस्त्रमा समेत अक्षर कुँदिएबाट प्रस्ट हुन्छ । सिकुबहीको उमामहेश्वर मूर्ति कुँद्न लगाउने दाताले अभिलेख कुँद्ने भए मूर्तिमा ठाउँ छोड्ने थिए, त्यसैले यो अभिलेख मूर्तिभन्दा नयाँ हो । छैटौं शताब्दीको अभिलेख र मूर्ति भने चारौं वा पाँचौं शताब्दीको देखिन्छ । यो कुरा कलापारखी लैनसिंह बाङ्देलले पनि स्वीकार गरेका छन् (बाङ्देल, २०३९ : पृ.१००) । भारतीय विद्वान् नीलरत्न बनर्जीले पनि सिकुबहीको उमामहेश्वरको मूर्तिको विश्लेषण ठीक ढङ्गले गरेका छन् । यसरी सिकुबहीको उमामहेश्वर अभिलेखमा उल्लेख भएको समयभन्दा अघिको देखिन्छ ।

## पाटन, कुम्भेश्वरको उमामहेश्वर

काठमाडौं उपत्यकामा प्राप्त उमामहेश्वर मूर्तिहरूको अध्ययन गर्दा पाटन, कुम्भेश्वरको पाँचौं शताब्दीताकाको मूर्तिको एउटा बेग्लै स्थान छ । अन्य उमामहेश्वरफलकभन्दा यसको ढाँचा पनि बेग्लै छ । उमामहेश्वर मूर्तिफलकको विकासक्रममा प्रथमपल्ट यसमा शिवका चारवटा हात देखिएका छन् । शिवको आयुध त्यति प्रस्ट छैन, तैपनि त्रिशूल देखिन्छ । यो मूर्तिमा शिवले एउटा हातले नन्दीको सिङ समातेको र अर्कोमा तुम्बी लिएको जस्तो देखिन्छ । शिवको चौडा छाती र कसिएका पाखुराको बनोटबाट पनि यसको प्राचीनताको अडकल गर्न सकिन्छ । शिवले तीनवटा चुच्चा भएको मुकुट, कानमा ठूला कुण्डल, गलामा नेकलेस र पाखुरामा बाजु लगाएको प्रस्ट देखिन्छ । यो मूर्तिमा अन्य उमामहेश्वर-फलकको भन्दा फरक ढङ्गले



रेखाचित्र १ : उमामहेश्वर, कुम्भेश्वर, पाटन
(सन् १९८५ मा चोरी भएको)

उमा बसेकी छन् । यसमा शिवपार्वतीको अङ्कमाल पनि देखिँदैन । पार्वतीले प्रेमपूर्वक महेश्वरतर्फ फर्केर हेरेको दृश्य पनि यो फलकमा छैन । पुरानो समयका दुलहादुलहीजस्तै सङ्कोचमा शिवपार्वती बसेका देखिन्छन् । पार्वतीको दाहिने हातमा एउटा फूल छ । देब्रे हात आसनमा राखेकी छन् । गोडामा कल्ली, कम्मरमा पेटी, गलामा कण्ठहार, नाडीमा बाला, पाखुरामा बाजु र कानमा कुण्डल पार्वतीले लगाएकी छन् । पार्वती र शिव दुवैको शिरपछाडि गोलो साधा प्रभामण्डल कुँदिएको छ । पार्वतीसँगै एक जना सेविका बसेकी छन् । उनको एक हातमा चमर र अर्कोमा थालीमा केही खाद्यवस्तुजस्तो देखिन्छ । यो फलकमा सेविका बसेको ढाँचा पनि अन्य फलकको भन्दा फरक छ । यो फलकको सबैभन्दा माथि दायाँबायाँ शिवका अङ्गरक्षक कुँदिएका छन् । शिवको पछिल्लो कालका यस्ता फलकमा अङ्गरक्षकका चारवटा हातमा शिवकै आयुध लिएको देखाइने प्रचलन छ । तर प्रारम्भको यो मूर्तिफलकमा भने रक्षकहरूको दुई हात र छातीभन्दा माथिको भाग मात्र देखाइएको छ । पाटन, कुम्भेश्वरको यो मूर्ति आफ्नो बेग्लै शैलीले गर्दा चर्चामा छ । लैनसिंह बाङ्देलले यो मूर्तिको समय पाँचौँ शताब्दी तोकेका छन् (बाङ्देल, २०३९ : पृ.१०३) । मूर्तिको शैलीबाट यो मूर्ति पाँचौँ-छैटौँ शताब्दीताकाको नै लाग्दछ ।

**पशुपति, मृगस्थलीस्थित विष्णु मन्दिरको पूर्वको उमामहेश्वर मूर्ति**

पशुपतिक्षेत्रको यो उमामहेश्वरफलक प्राचीनता र शैलीमा आएको परिवर्तनका कारणले महत्त्वपूर्ण देखिन्छ । प्राचीन मूर्तिको क्रममा पहिलोपल्ट यो उमामहेश्वरफलकमा तल्लो खण्डमा गणहरू देखा परेका छन् । तीन जना गणहरू नृत्यमुद्रामा छन् । कैलास पर्वतको भान पार्न यो मूर्तिफलकमा कलाकारले चट्टानको बुट्टा कुँदिएको प्रस्ट देखिन्छ । शिव र पार्वती यो फलकमा प्राचीन अन्य फलककै ढाँचाले बसेका छन् । यो मूर्तिमा शिवपार्वतीले अँगालो हालेका पनि छैनन् र पार्वतीले शिवपट्टि मुन्टो बटारेर हेरेकी पनि छैनन् । शिवपार्वती र उभिएकी सेविकाको मुख ताछिएकाले भावभङ्गीबारे केही भन्न सकिँदैन । शिवका चार हातमध्ये तीनमा त्रिशूल, अक्षमाला र विभूति छन् भने एक हात आफ्नै तिघ्रामा अडचाइएको छ । नन्दीको बसाइ भने यो फलकमा केही फरक छ । शिवको पछाडि नबसेर यसमा दायाँपट्टि बसेका छन् । नन्दीको जुरो निकै मेहनत गरेर बनाइएको छ । शिव र पार्वती दुवैका हृष्टपुष्ट शरीरले शारीरिक सौन्दर्य बढाएका छन् । पार्वतीसँगै उनकी सेविका उभिएर बसेकी छन्, जसका चार हातमध्ये एउटामा चमर छ, अर्कोमा कम्मरमा भिरेको खड्ग प्रस्ट देखिन्छ । यो मूर्तिमा अभिलेख कुँदिएको छ, तर हाल त्यो भाग जमिनमुनि पुरिएकाले पढ्न सकिँदैन । धनवज्रले आफ्नो पुस्तकमा त्यो प्रकाशित गरेका छन् ।....म रा ..... (वज्राचार्य, २०३० : पृ.३०१) । खिइएको हुनाले यी दुई अक्षरबाहेक अरू नबुझिने भएको छ । तर यी दुई अक्षरका आधारमा यो मूर्ति मानदेवको समयताकाको हो भनी ठम्याउन सकिन्छ । यस कारण लिच्छविकालको मूर्तिकलाको दृष्टिले यसको महत्त्व रहेको छ । पशुपतिक्षेत्रमा तोडफोड गरिएका केही मूर्तिहरू देखिन्छन् । मूर्तिहरू यो

अवस्थामा पुग्न हावा, पानी, घाम, दैनिक पूजा आदिले बिस्तारैबिस्तारै प्रभाव पार्नुका साथै राजनीतिक र धार्मिक आक्रमणले पनि प्रभाव पार्दछ । यो उमामहेश्वरफलकका शिव, पार्वती र सेविका सबैको मुख काटिएको छ । उपत्यकामा भएको मुसलमान आक्रमणको मार यो मूर्तिमा परेको हुनुपर्दछ । गोपाल राजवंशावलीमा यो कुराको सङ्केत भेट्टिन्छ । 'त्यसपछि पूर्वतिरबाट सुल्तान शमसुद्दीन नेपाल आई श्री पशुपतिनाथलाई तीन टुक्रा गऱ्यो । सारा नेपाल भस्म भयो । दुनियाँमा हाहाकार फैलियो । ने.सं. ४६९ (वि.सं. १४०६) मार्ग शुक्ल नवमीका दिन भक्तपुरमा ज्यादैं दुःख पाए' (वज्राचार्य, मल्ल, १९८५ : पृ. ८५) । यसरी पशुपतिक्षेत्रमा आक्रमण गरेर मूर्तिहरू तोडफोड गरेको वर्णनबाट यो उमामहेश्वर मूर्ति पनि मुसलमानकै आक्रमणमा अनुहार ताछिएको तथ्य सहजै अनुमान गर्न सकिन्छ ।

**पशुपति, अमरकान्तेश्वरको उमामहेश्वर**

काठमाडौं उपत्यकाभित्रका विभिन्न मूर्तिमध्ये सबभन्दा सुन्दर, बेजोड कलाको नमुनाको रूपमा पशुपति, अमरकान्तेश्वरको उमामहेश्वर मूर्तिलाई देखाउन सकिन्छ । यो फलकमा कलाकारले आफ्नो सम्पूर्ण सीप, कल्पनाशक्तिको प्रयोग सफलतापूर्वक गरेका छन् । ठूला र साना गरेर अठारवटा मूर्ति कुँदिएको यो उमामहेश्वरफलकमा जतिपल्ट हेरे पनि नयाँनयाँ भाव र वस्तुहरू देखिन्छन् । एउटै फलकमा शिवका परिवारका सम्पूर्ण सदस्य, गणहरू, रक्षकहरू बनाउँदा पनि यो फलक साँघुरो अर्थात् गुजुमुजु एकै ठाउँमा खाँदिएको देखिँदैन । सिपालु कलाकारको हातको सीप फलकको तल्लो खण्डदेखि माथिसम्म नै प्रस्ट रूपमा झल्किन्छ (पौडचाल, १९९६ : पृ. १७१) । 'आठौं-नवौं शताब्दीमा बनेको यो मूर्तिफलककै ढाँचा पछ्याएर काठमाडौं उपत्यकामा थुप्रै



**रेखाचित्र २ : उमामहेश्वर, अमरकान्तेश्वर, पशुपति**
**(सन् १९८३ मा चोरी भएको)**

मूर्तिहरू बने । तर यसको जोडा लाग्न सक्ने अर्को मूर्ति छैन । कलापारखी लैनसिंह बाङ्देलले पनि यो मूर्तिको मुक्तकण्ठले प्रशंसा गरेका छन् । काठमाडौँ उपत्यकामा आजसम्म प्राप्त भएका उमामहेश्वर मूर्तिहरूमा सायद यो मूर्ति सबभन्दा राम्रो होला । यस किसिमको उमामहेश्वरको मूर्ति भारतमा देखिएको छैन । यो मूर्तिफलकको सबभन्दा तल्लो खण्डमा बीचमा गणनायक गणपति दायाँ खुट्टाको पैताला पूरा टेकेर र बायाँ खुट्टाको पैताला औँलाले मात्र टेकेर मग्न भएर नाच्दै गरेका छन् । सिंह र चराको मुख भएका गणले झ्याली, ढोलक, शङ्ख आदि बाजा बजाउँदै छन् । तल्लो खण्डका रमाइला पक्ष नै गायन, वादन र नृत्य हुन् । उमामहेश्वरफलकको सबभन्दा तल्लो खण्डको अर्को एउटा आकर्षण भृङ्गी ऋषिको मूर्ति हो । पौराणिक ग्रन्थहरूमा भृङ्गीको कथा वर्णन गरिएको छ । शिवपुराणअनुसार पूर्वजन्मको अन्धक राक्षस नै तपस्याको बलले भृङ्गी भएर जन्मेका थिए । मन्दारपर्वतमा शिव र पार्वती क्रीडा गरिरहेको बेलामा पार्वतीले शिवका आँखा छोपिदिइन्, आँखा छोपेपछि शिवको आँखाको तापले पार्वतीको हातबाट निस्किएको पसिनाले एउटा डरलाग्दो जीवको जन्म भयो । जन्मँदै अन्धो भएकाले त्यसलाई अन्धक भनेर सम्बोधन गरियो । शिव र पार्वतीको पसिनाबाट जन्म भएकाले अन्धकलाई शिवपार्वतीको छोरा मानियो । अन्धक सुरुमा कुमतिको भए तापनि पछि बुद्धि आएको र भृङ्गीको रूपमा जन्मेर शिवभक्त भएको प्रसङ्ग शिवपुराणमा छ । त्यसैले उमामहेश्वर मूर्तिफलकमा अन्धक भृङ्गीको रूपमा जन्मिएपछिको दृश्य देखाइन्छ । अमरकान्तेश्वरको उमामहेश्वरफलकको बीचको भागमा शिव र पार्वती छुट्टाछुट्टै आसनमा, तर टाँसिएर बसेको दृश्य आकर्षक छ । शिवको जटामा चन्द्रमा, शिरपछाडि ज्वाला भएको प्रभामण्डल, गलामा हार र पाखुरामा सर्पको बाजु सबै मिल्दो ढङ्गले कुँदिएका छन् । शिवको धोतीको मुजा र बुट्टाको पनि तारिफ नै गर्नुपर्दछ । शिवको पछाडिका दुई हातमा जपमाला र त्रिशूल एवं अगाडिका दुई हातमा विभूतिको डल्लो र कमण्डलु छन् । कमण्डलु लिएको हातले नै पार्वतीको कम्मर हल्कासँग अडयाएको छ । पार्वतीको कपाल सारै राम्रोसँग बनाइएको छ । निधारमा झरेका सानासाना घुम्रेका कपालले पार्वतीको सुन्दरता अझ बढाएका छन् । घाँटीमा मोतीका दानाको हार टपक्क बसेकाले कलाकारले स्तनको सौन्दर्य प्रस्टसँग दर्साउन पाएका छन् । पुष्ट स्तन, छिनेको कम्मर, ठिक्क फुकेको पुट्ठा बनाएर कलाकारले एउटा सुन्दर स्त्रीको मिलेको शरीरको नमुना यसमा देखाएका छन् । पार्वतीले देब्रे खुट्टा आधा भाँचेर त्यसमा आफ्नो देब्रे हात राखेकी छन् । त्यही हातमाथि सुन्दर सुगाचरी बसेको छ । पार्वतीले दाहिने खुट्टा बसेको चकटीबाट तल भुइँमा झारेकी छन् । तल झारेको खुट्टा भुइँमा पर्ला भनेर बसेकी सानी सेविकाले आफ्नो हात थापेको दृश्य पनि रोचक छ । शिव कैलास पर्वतमा बस्ने हुनाले त्यही भाव झल्काउन सम्पूर्ण फलकमा पहाडको चट्टानको दृश्य कुँदिएको छ । शिवका चारवटा हात

भएका गणहरू पनि पहाडबाट निस्कन लागेको सारै स्वाभाविक छ । यो मूर्ति-फलकको दायाँपट्टि घोडा चढेको जस्तो गरेर कुमार नन्दीको घाँटीमा चढेका छन् । कुमारको नन्दीमा चढ्दा तल झरेको पाउ पनि सेवकले दुवै हातले थामेको छ । यो फलकको सबभन्दा माथि कुँदिएको गङ्गाको मूर्ति सारै नै आकर्षक छ । गङ्गानदीलाई मानवाकृतिमा देखाउने परम्परा नेपाली कलाकारको कल्पनाको बेजोड नमुना नै मान्न सकिन्छ ।

**पशुपति, नवालीटोलको उमामहेश्वर**

जयवागीश्वरीबाट चाबहिल जाँदा बाटोमा पर्ने निर्वाणेश्वर मन्दिरको पूर्वपट्टिको प्राङ्गणमा यो उमामहेश्वरको मूर्ति थियो । हाल सडक विस्तारका क्रममा यो मूर्ति एक जना व्यक्तिकहाँ सुरक्षित राखिएको छ । लैनसिंह बाङ्देलले अनुसन्धानकै क्रममा यो मूर्ति फेला नपरेपछि हराएको मूर्ति भनेर वर्णन गरेका छन् (बाङ्देल, १९८९ : पृ. १२४-१२५) । यो फलकमा चार हात भएका शिव दायाँ खुट्टा आसनीबाट तल झरेर र बायाँ खुट्टा आसनीमै दोबारेर ललितासनमा बसेका छन् । शिवको पछाडिका दायाँ र बायाँ हातले अक्षमाला र त्रिशूल समातेका छन् । अगाडिको दायाँ हात घुँडामा छुँदै तल झरिएको छ । त्यसमा विभूतिको डल्लो देखिन्छ । बायाँ हातले पार्वतीलाई अँगालो हालेको छ । शिवको घाँटीमा हार, पाखुरामा केयूर र कानमा सुन्दर कुण्डल लगाएको देखिन्छ । पार्वती बेग्लै आसनीमा बसे पनि शिवसँग टाँसिएर दायाँ हात शिवकै तिघ्रामा अडयाएर बसेकी छन् । पार्वतीको बायाँ हातमा उर्वराशक्तिको प्रतीक सुगाचरी बसेको सुन्दर ढङ्गले देखाइएको छ । पार्वतीको पाउमा पाउजु, नाडीमा चुरी, घाँटीमा कण्ठहार, कानमा ठूलाठूला कुण्डल सारै राम्रोसँग बनाइएको छ । शिव र पार्वती दुवैको शिरपछाडि प्रभामण्डल बनाइएको छ । अरू उमामहेश्वरफलकभन्दा यसमा नन्दीको बसाइ फरक छ । फलकको सबभन्दा माथि गङ्गा र विद्याधरहरू छन् । त्यसको तलपट्टि चारवटा हात भएका गणहरू पनि अन्य उमामहेश्वरफलकमा जस्तै कुँदिएका छन् । पार्वतीनजिकै चारवटै हात भएकी स्त्रीसेविका चमर, अक्षमाला, तुम्बी र ढक्की लिएर उभिएकी छन् । मूर्तिफलकको तल्लो खण्डमा शिवका गणहरू नाच्दै-गाउँदै गरेको देखाइएको छ । गोविन्द टण्डनले यो फलकको वर्णन गर्दा शिवले पार्वतीको कम्मर समाएको, पार्वतीको दुवै खुट्टा आसनीबाट तल झरेको वर्णन गरेका छन् । उनले मूर्तिको समय पनि सातौँ-आठौँ शताब्दी तोकेका छन्, जुन ढाँचा हेरे मिल्दैन (टण्डन, २०५३ : पृ. ४५१) । उमामहेश्वर मूर्तिको विकासक्रममा यो मूर्ति तेह्रौँ-चौधौँ शताब्दीभन्दा अघिको मान्न सकिँदैन ।

**पशुपति, राजराजेश्वरीघाटको उमामहेश्वर**

दसौँ शताब्दीताकाको एउटा उमामहेश्वर मूर्ति पशुपतिको राजराजेश्वरी-घाटमा छ । यो फलकमा शिवका परिवारका सम्पूर्ण सदस्य, आठ जना गणहरू, रक्षकहरू, सेविकाहरू, परी र सूर्यचन्द्र बनाउँदासमेत कलाकारले सुहाउँदो ढङ्गले

स्थान निर्धारण गरेका छन् । त्यसैले यो फलकलाई पनि एउटा राम्रो मूर्तिको गणनामा राख्नुपर्दछ । शिव र पार्वतीको बसाइ अन्य उमामहेश्वरफलकमा जस्तै छ । मसिनो बुट्टा कुँदिएको आसनीमा शिवपार्वती बसेका छन् । शिवका चार र पार्वतीका दुई हात छन् । शिवका चार हातमध्ये माथिल्लो हातमा अक्षमाला, तल्लोमा मातुलुङ्ग तथा बायाँ माथिल्लोमा त्रिशूल छन् भने तल्लो हातले उमालाई अँगालो मारेको छ । शान्तमुद्रामा रहेका शिवले शिरमा मुकुट, कानमा कुण्डल, गलामा हार, पाखुरामा सर्पको बाजु पहिरेका छन् । शिवको कम्मरभन्दा माथिको भाग नाङ्गो छ र कम्मरभन्दा तल पारदर्शक धोती आकर्षक कम्मरबन्दले बाँधिएको छ । शिवको बायाँतर्फ शिवसँगै टाँसिएर पार्वती बसेकी छन् । पार्वतीको बसाइ निकै आकर्षक छ । पार्वतीको दायाँ हात शिवको बायाँ काखमा र बायाँ हात आफ्नै बायाँ तिघ्रामा राखेको मिल्दो ढङ्गले कुँदिएको छ । दायाँ खुट्टा घुँडा मारेर बायाँ खुट्टा अर्धपर्यङ्क आसनमा छ । पार्वतीको यो खुट्टालाई स्त्रीसेविकाले हातले समातिरहेको देखिन्छ । पार्वतीको शरीरमा स्त्रीसौन्दर्य झल्काउन कलाकार सफल भएका छन् । पार्वतीसँगै बसेकी सेविकाले पार्वतीलाई छाता ओढाइरहेकी छन् । छाता सानो भए पनि सारै कलात्मक छ । यो उमामहेश्वरफलकमा कुँदिएको कुमारको मूर्ति पनि सारै आकर्षक छ । नन्दीको दायाँतर्फ कुमार बायाँ हातमा लामो दण्ड लिएर बसेका छन् । कुमारको शिरपछाडिको प्रभावलि र उनको वाहन मयूरको पखेटा फिँजाइ सारै मिलाएर बनाइएको छ । कुमारका नजिकै दायाँतर्फ कुनामा गणेशको वाहन मुसा हात जोडेर बसेको रमाइलो दृश्य पनि यसमा देख्न सकिन्छ । फलकको सबभन्दा माथि छत्र, परी, गङ्गा र सूर्यचन्द्र पनि सारै मिल्दो ढङ्गले कुँदिएका छन् । उमामहेश्वरफलकमा गङ्गालाई आकाशबाट तलतिर झर्दै गरेको दृश्य सारै सुन्दर ढङ्गले देखाउने परम्परा छ, जुन यो फलकमा पनि देखिन्छ ।

**नःघलको उमामहेश्वर**

काठमाडौँ उपत्यकाका सुन्दर उमामहेश्वरफलकहरूमध्ये यो पनि एउटा हो । अधिकांश उमामहेश्वरफलकजस्तै यसमा पनि शिवका चारमध्ये तीन हातमा त्रिशूल, अक्षमाला, विभूतिको डल्लो छन् । बायाँतर्फको एउटा हातले पार्वतीको कम्मरमा समातेको छ । शिवको ढाडपछाडि बसेका नन्दी पनि सारै सुन्दर ढङ्गले कुँदिएका छन् । नन्दीको टाउकोको ठीक तल कुमार एक हातले मयूर र अर्को हातले दण्ड समातेर अर्धपर्यङ्क आसनमा बसेका छन् । फलकको सबभन्दा तल बीचमा गणपति गणेश र दायाँबायाँ नाच्दै-गाउँदै गरेका भृङ्गीलगायत अन्य गणहरू कुँदिएका छन् । फलकको सबभन्दा माथि चारवटा हातमा शिवकै आयुधहरू लिएका रक्षक, फूल बर्साउँदै गरेकी परी र जल अर्पण गर्दै गरेकी गङ्गाको मूर्ति स्वाभाविक ढङ्गले कुँदिएको छ । शिवको शिरपछाडिको प्रभामण्डल, अङ्गप्रत्यङ्ग मिलेको शरीर, जटामुकुट, पार्वतीको केशविन्यास र गहना सबै नै सारै सुन्दर ढङ्गले कुँदिएको छ । नवौं-दसौं शताब्दीको यो मूर्ति एउटा कलाकारको सफल कृतिको रूपमा रहेको छ ।

## पशुपति, भस्मेश्वरको उमामहेश्वर

नवौँ-दसौँ शताब्दीको अर्को एउटा सुन्दर उमामहेश्वर मूर्ति पशुपति, भस्मेश्वरमा छ । शिव, पार्वती, रक्षकगण, नन्दी सबैको अनुहार खण्डित छ । यो फलक हेर्नेबित्तिकै शिव र उनका दायाँबायाँ बस्ने दुवै गणले लिएको त्रिशूल भने सबभन्दा प्रस्ट देखिन्छ । यो उमामहेश्वरफलकमा अन्य उमामहेश्वरफलकभन्दा एक-दुई कुरा नौला देखिन्छन् । एउटै आसनमा बसेका शिवपार्वतीमध्ये शिवले पार्वतीको तिघ्रा आफ्नो बायाँ घुँडाले थिचेका छन् । पार्वतीले दाहिने खुट्टा अर्ध पलेँटी मारेर देब्रे खुट्टा आसनमुन्तिर झारेकी छन् । काठमाडौँ उपत्यकाका अन्य केही उमामहेश्वरफलकमा जस्तै यसमा पनि पार्वतीको पाउ सेविकाले हातमा थामेकी छन् । शिवको देब्रेतर्फका सेवक र पार्वतीको बीचमा देखिने खाली ठाउँमा पनि कलाकारले सूक्ष्म ढङ्गले बनाएको अनुहार र हातसम्म देखिने गरेर छत्र उठाएको ढाँचा पनि आकर्षक छ । यो फलकमा पार्वतीतर्फ उनकी सेविका चमर हल्लाउन लागेको देखाइएको छ । प्रायः अन्य उमामहेश्वरफलकमा उभिएका सेविकाहरूले चमर हल्लाउन लागेको देखाइन्छ । दसौँ शताब्दीका अन्य मूर्तिमा जस्तै शिवको कम्मरभन्दा माथिको भागमा वस्त्र छैन । कम्मरभन्दा तल पारदर्शक धोतीको बुट्टा देखाउन कलाकारले निकै नै मेहनत गरेको देखिन्छ । अर्धपर्यङ्क आसनमा बसेका शिवको पेटको मांसपेशी पनि कालाकारले सारै सुन्दर ढङ्गले देखाएका छन् । टुटेफुटेको भए पनि यो एउटा नौलो ढाँचाको पुरानो उमामहेश्वर मूर्ति हो (टण्डन, २०५३ : पृ. ५३) । गोविन्द टण्डनले यो मूर्तिको समय तेह्रौँ-चौधौँ शताब्दी तोकेका छन् । तर मूर्तिको शैली हेर्दा यो मूर्ति त्यसभन्दा अगाडि नवौँ-दसौँ शताब्दीको देखिन्छ ।

## पाटन, कुम्भेश्वर ढुङ्गे धाराको उमामहेश्वर मूर्ति

सुन्दर कला र वास्तुकलाको सम्मिश्रण भएको सहरको नाम नै ललितपुर (सुन्दर कलाकृतिको सहर) हो । ललितपुर (पाटन) मा प्रस्तर, काठ, धातु र माटोका थुप्रै सुन्दर मूर्तिहरू छन् ।

पाटनका प्रसिद्ध राजा सिद्धिनरसिंह मल्लले वि.सं. १७१० मा निर्माण गराएको एक्काइसगजुरे कृष्ण मन्दिर सुन्दर, आकर्षक वास्तुशैलीका साथसाथै उत्कृष्ट विभिन्न मूर्तिहरूका लागि पनि प्रसिद्ध छ । पाटन दरबारक्षेत्रमा वैष्णव सम्प्रदायसँग सम्बन्धित मूर्तिहरूको बाहुल्य भए पनि शैव, शाक्त र बौद्ध धर्मसँग सम्बन्धित कलाकृतिहरू पनि थुप्रै छन् ।

यल, यूपग्राम, ललितपत्तन, मनीनगल आदि प्राचीन नामले अझै पनि सम्बोधन गरिने पाटनमा पुराना कलाकृतिका साथै त्यसलाई निरन्तरता प्रदान गर्न आजकालका कलाकारले अटुट रूपमा गरेको प्रयास पनि देख्न पाइन्छ ।

विश्वमा प्रचलित पुराना धर्महरूमध्ये शैव धर्म पनि एउटा हो । वेदमा भयावह देवता रुद्रको रूपमा चर्चित शिव बिस्तारै आफ्नो काम र स्वरूपमा परिवर्तन् गरेर सबै प्राणीका मालिक, पालक, पशुपतिको रूपमा परिवर्तित भए ।

लामो समयसम्मको निरन्तरताले गर्दा शैव धर्ममा धेरै नै परिवर्तन आएको छ ।

शैव धर्म लोकप्रिय भएपछि शिवका विभिन्न मूर्तिहरू बन्न थाले । मानव आकृति (Anthropormorphic), नरपशु मिश्रित (Therianthrophic), लिङ्ग (Phallic) र पशु (Theriomorphic) जस्ता विभिन्न रूपमा शिवका लिङ्ग र मूर्ति भारत र नेपालमा प्राप्त छन् । शिवका उग्र र सौम्य दुवै प्रकारका मूर्तिहरू नेपाल र भारतमा बनेका छन् । उग्ररूप (संहार) मूर्तिअन्तर्गत (१) ब्रह्मशिरच्छेद मूर्ति (भैरव) (२) कामान्तक मूर्ति (३) गजासुरसंहार मूर्ति (४) कालारि मूर्ति (५) त्रिपुरान्तक मूर्ति (६) सर्भेष मूर्ति (७) मल्लारी मूर्ति (८) अन्धकासुरवध मूर्ति (९) जालन्धर मूर्ति (१०) वीरभद्र मूर्ति आदि पर्दछन् । यी विभिन्न उग्ररूपका मूर्तिमध्ये ब्रह्मशिरच्छेद मूर्ति (भैरव) नेपालमा प्रशस्त बनेका छन् ।

यस्तै सौम्य मूर्तिअन्तर्गत (१) गङ्गाधर मूर्ति (२) सोमस्कन्द मूर्ति (३) उमामहेश्वर मूर्ति (४) चन्द्रशेखर मूर्ति आदि पर्दछन् । जसमध्ये नेपालमा उमामहेश्वर मूर्ति प्रशस्त बनेका छन् ।

चौधौँ शताब्दीमा कुम्भेश्वर महादेव (सर्भेश्वर) को भव्य पाँचतले छाने शैलीको मन्दिर निर्माण भएको थियो । मन्दिरको गर्भगृहमा शिवको निराकार स्वरूपको लिङ्ग स्थापना गरिएको छ । बगलामुखी देवी र उन्मत्तभैरवको मूर्ति पनि मूल मन्दिरको दक्षिणतर्फ स्थापना गरिएको छ । कुम्भेश्वरको चौघेराभित्र नै बगलैमा उमामहेश्वरका दुईवटा प्राचीन मूर्तिहरू छन् ।

त्यस्तै ढुङ्गे धारामा पनि दुईवटा उमामहेश्वरका मूर्ति छन् । (क) गङ्गा नदी कुँदिएको उमामहेश्वरफलक (ख) शिवपार्वतीले हातमा कलश लिएको (मृत्युञ्जय, कुम्भेश्वर) मूर्ति ।

**गङ्गा नदी कुँदिएको उमामहेश्वरफलक**

काठमाडौँ उपत्यकामा उमामहेश्वरका थुप्रै मूर्तिहरू छन् । काठमाडौँ उपत्यकाका कलाकारले रुचाएका विषयवस्तुमा उमामहेश्वरको फलक पर्दछ । उपत्यकामा प्राचीन, मध्यकालीन, मल्लकालीन र शाहकालीन समयमा बनेका थुप्रै-थुप्रै उमामहेश्वरका मूर्तिहरू छन् (पौडयाल वीणा, नेपाली मूर्तिकला र चित्रकला, काठमाडौँ, संस्कृति केन्द्रीय विभाग, त्रि.वि. २०५७ : पृ. १९ ) । पाटन, कुम्भेश्वरस्थित ढुङ्गे धाराको उत्तरतर्फको भित्तामा एउटा सुन्दर मनमोहक उमामहेश्वरको मूर्ति छ । पुराण र प्रतिमाविज्ञानका विभिन्न पुस्तकहरू रूपमण्डन, विष्णुधर्मोत्तर, मत्स्यपुराण, अपराजितपृच्छा आदि विभिन्न पुस्तकमा उमामहेश्वरको मूर्ति निर्माण गर्ने नियम बताइएको छ । ती पुस्तकमा वर्णित अधिकांश नियमहरू नेपाली कलाकारले पछ्याएर मूर्ति बनाएको पाइन्छ । पुस्तकको निर्देशनबाहेक नेपाली कलाकारले आफ्नै मनले सामान्य हेरफेर पनि गरेको पाइन्छ ।

कुम्भेश्वर धाराको उमामहेश्वर मूर्तिलाई तीन खण्डमा विभाजन गरेर अध्ययन गर्न सकिन्छ । सबैभन्दा माथिल्लो खण्डमा आकाशको दृश्य देखाउन

बादल बनाइएको छ। फलकको बीचमा गङ्गा (स्त्री रूपमा) स्वर्गबाट तल पृथ्वीमा झर्दै गरेको दृश्य छ, जुन सारै स्वाभाविक ढङ्गले देखाइएको छ। गङ्गाका चारवटा हातमध्ये दुईवटा हात नमस्कार मुद्रामा र दुई हातले पछ्यौरा समातेको देखाइएको छ। आकाशबाट पृथ्वीमा झर्न लागेको देखाउन गङ्गाको खुट्टा माथि फर्केको, हातमा पछ्यौरी फहराएको स्वाभाविक दृश्य मूर्तिफलकमा दर्साइएको छ। गङ्गाको दायाँ-बायाँ शिवका गणहरू पहाडबाट निस्कन लागेको भावमा कम्मरसम्म देखाइएको छ। प्रतिमानिर्माण नियमअनुरूप नै शिवका प्रतिहारहरू चारवटा हातमा अक्षमाला, त्रिशूल, तुम्बी र मातुलुङ्ग कुँदिएका छन्। शिरमा जटा मिलाएर मुकुट बनाएको र कानमा कुण्डल, गलामा हार, नाडीमा चुरा पनि देखाइएको छ।

मूर्तिफलकको बीचमा चारवटा हात भएका शिव र दुईवटा हात भएकी पार्वती कुँदिएको छ। शिवको शिरपछाडि प्रभामण्डल बिन्दुयुक्त र अग्निज्वालाले घेरिएको छ। प्रभामण्डलले शिवको दैवी स्वरूप अङ्कित गरेको छ। शिवको शिरमा चन्द्रमा र जटामुकुट आकर्षक ढङ्गले कुँदिएको छ। कुममा दुई-चारवटा जटा लत्रेको, कानमा रत्नकुण्डल, गलामा कण्ठहार, नाडीमा चुरा, पटुका र त्यसको सुर्केनी गाँठो, छोटो धोती (कछाड) एवं शिवको सौम्य मुहार झल्काउन कलाकारले गरेको मेहनत सफल भएको देखिन्छ। शिव र पार्वतीको शृङ्गारिक भाव उमामहेश्वरफलकमा झल्काइन्छ। यो फलकमा पनि भद्र तालले पतिपत्नीको प्रेम दर्साइएको छ। सुखासनमा बसेका शिवले बायाँतर्फको एउटा हातमा परशुसहितको त्रिशूल आयुधको रूपमा लिएका छन् भने अर्को हात पार्वतीको कुममा अडयाएका छन्। पार्वतीले पनि आफ्नो दायाँ हात शिवको देब्रे तिघ्रामा अडयाएर प्रेम प्रदर्शन गरेकी छन्। काठमाडौँ उपत्यकामा बनाइएका धेरैवटा उमामहेश्वरफलकमा पार्वतीको बसाइ अलि अस्वाभाविक ढङ्गको हुन्छ, तर यो कुम्भेश्वर धाराकी उमाको बसाइ स्वाभाविक छ। मिलेको पुष्ट स्तन, छिनेको कम्मर, फुकेको पुट्ठा सबै नै स्वाभाविक ढङ्गको छ। पार्वतीको कम्मरबन्धको बुट्टा, धोतीको बुट्टा, कानका गोलो आकारका कुण्डल, गलाको कण्ठहार, नाडीका चुरा, पाउका पाउजु सबै नै आकर्षक ढङ्गले बनाइएका छन्। पार्वतीले ओढेको पछ्यौरीको ढाँचा, आसनीबाट तल झरिएको पार्वतीको देब्रे हात मोडी आफ्नै घुँडामा अडयाएको र हातमा बसेको सुगा सबैको योजना मिल्दो ढङ्गले कलाकारले गरेका छन्। पार्वतीका पछाडि उभिएकी सेविकाले चारवटा हातमा विविध आयुध लिएकी छिन्। अधिकांश उमामहेश्वरफलकमा देखाइएका पार्वतीका सेविकाहरूको दुईवटा मात्रै हात बनाइएको हुन्छ। मूर्तिफलकको बीचमै शिवतर्फ घुँडा मारेर बसेका नन्दीलाई जुरोसहित देखाइएको छ। नन्दीको टाउकोमै हातमा पताकासहित सुरो लिएका कुमार दुवैतिर खुट्टा झरेर बसेका छन्। बालसुलभपन कुमारको अनुहारमा झल्काउन कलाकार सफल भएको मान्नुपर्दछ। यो उमामहेश्वरफलकको बीचको खण्डमा पर्वतको भान पार्न चट्टानहरू कुँदिएका छन्। शिवका गणहरू कुँदिएको

फलकको तल्लो खण्ड सारै नै आकर्षक छ । प्राचीन उमामहेश्वरफलकमा गणहरू बनाइएको छैन । त्यसपछि क्रमिक रूपमा गणहरूको सङ्ख्या बढदै गएको पाइन्छ । पाटन सिकुबही, चामुण्डा, सखोना आदि स्थानमा प्राप्त उमामहेश्वरका मूर्तिहरूमा गणहरू बनाइएको छैन । शिवपार्वती र नन्दीको मात्रै उपस्थिति देखाइएको छ । पछि समयसँगसँगै परिवारका सदस्यहरूको सङ्ख्यामा पनि वृद्धि भयो र फलकको तल कुँदिने गणहरूको सङ्ख्यामा वृद्धि भयो । फलकको तल कुँदिने गणहरूको सङ्ख्या सातदेखि नौसम्म हुन पुग्यो । यो कुम्भेश्वर धाराको उमामहेश्वरफलकमा भने सात जना गणहरू बनाइएको छ । पाँच जना गणहरू उभिएर नाच्दै, गाउँदै र बाजा बजाउँदै छन् । दुई जना गण भने बसेर बाजा बजाउँदै छन् । सिंहको मुख भएको गणले घाँटीमा डोरीको सहायताले झुन्डयाएको मादल ठटाउँदै छ । दुब्ला, पातला, करङ मात्रै भएका भृङ्गी एउटा खुट्टा उचालेर नाच्दै छन् । कानमा घण्टा झुन्डयाएका एक जना बालक गण (घण्टाकर्ण) पनि हात शिरभन्दा माथि पुऱ्याएर नाच्दै छन् । चारवटा हात भएका गणेश पनि खुट्टा फटयाएर नृत्यमुद्रामा छन् । पेटमा पनि अनुहार भएका कुम्भाण्ड (उदरमुख) गण पनि हात उठाएर नाच्दै छन् । यसरी फलकको सबैभन्दा तल गणहरूको प्रस्तुति यो फलकमा सारै आकर्षक छ । शिवको दायाँ हात र खुट्टा एवं पार्वतीको दायाँ खुट्टा चोइटा उप्किएर बिग्रिएको बाहेक फलक राम्ररी संरक्षित छ । कृष्ण देवले यो उमामहेश्वर मूर्तिफलकको मुक्तकण्ठले प्रशंसा गरेका छन् र नवौँ शताब्दीको समय तोकेका छन् (Deva, Krishna. Images of Nepal, Delhi Archaeological Survey of India, 1984 : p. 47).

रूपमण्डनमा उमामहेश्वरको बर्ण्नन जसरी गरिएको छ, त्यहीअनुरूप नै मूर्तिहरू बनाइएको छ । उमामहेश्वरको वर्णन गर्छु– उमासँग शङ्कर छन् । शङ्करको दाहिने हातमा मातुलिङ्ग र त्रिशूल छन्, बायाँतर्फको एक हातले उमालाई आलिङ्गन गरेको छ भने अर्कोमा नागेन्द्र (सर्प) छ । उमाको एक हात शिवको काँधमा र दोस्रोमा ऐना छ । सबभन्दा तल वृष, कुमार र गणेश बनाउनुपर्दछ । शरीरमा मासु नभएका भृङ्गी नाच्दै गरेको देखाउनुपर्दछ ।

**उमामहेश्वरं वक्ष्ये उमया सह शङ्कर :**
**मातुलिङ्गं त्रिशूलञ्च धरते दक्षिणे करे ॥२७॥**
**आलिङ्गितो वामहस्ते नागेन्द्रं (नागेन्द्रो) द्वितीय करे**
**हरस्कन्ध उमाहस्ते दर्पणो द्वितीये करे ॥२८॥**
**अधस्ताद् वृषभं कुर्यात् कुमारञ्च गणेश्वरम्**
**भृङ्गिरीटं तथा कुर्यान्निमंसिन्नृत्यसंस्थितम् ॥२९॥**

(रूपमण्डन चतुर्थोध्याय : २७-२९ )

यसरी रूपमण्डन (भारत, मेवाडका राणा कुम्भाको प्रधान सूत्रधार मण्डनको सङ्कलित रचना हो)को निर्देशित नियम र नेपाली कलाकारले बनाएका मूर्तिमा धेरै नै सामञ्जस्य पाइन्छ ।

हिन्दू दर्शनअनुरूप प्रकृति र पुरुषको मिलनको प्रतिमूर्ति नै उमामहेश्वर मूर्तिफलक हो । काठमाडौँ उपत्यकामा बनाइएका थुप्रै उमामहेश्वरको मूल स्रोत र प्रस्तुति एउटै भए पनि विविधता पाइनु नै एउटा प्रमुख विषेशता हो । पाटन, चामुण्डा मन्दिरको घेरामा रहेको पूर्वलिच्छविकालको उमामहेश्वरको मूर्ति होस् वा सरस्वतीकुण्ड लेलेको दुवैको मूल विषयवस्तु एउटै भए पनि मूर्तिफलकमा पाइने विविधता नै रोचक पक्ष हो ।

कलापारखी लैनसिंह बाङ्देलले पनि नेपाली कलाकारले थकाइ महसुस नगरीकन बनाएका विविध उमामहेश्वर मूर्तिफलकको प्रशंसा गरेका छन् (Bangdel, Lain S., Stolen Images of Nepal, Kathmandu, Royal Nepal Academy : 1989 : P. 222)। एउटै मूल विषयवस्तुमा मूर्ति बनाईकन पनि शैलीमा विविधता हुनु नै नेपाली कलाकारले बनाएको उमामहेश्वरको मूर्तिफलकको विशेषता हो ।

शिवपुराणमा विश्वको उत्पत्ति, पालन र संहार गर्ने परब्रह्मको विस्तारसँग व्याख्या भएको छ । व्याघ्रचर्म लगाउने, पिनाक धारण गर्ने शिवले पार्वतीसँग वैवाहिक सम्बन्ध गाँसेर पारिवारिक कार्य र कालकूट विष सेवनको वर्णन पुराणहरूमा पाइन्छ । योगीका रूपमा ख्याति कमाएका शिवले पार्वतीसँग वैवाहिक सम्बन्ध गाँसेर पारिवारिक जीवन बिताउनुका पछाडि सम्पूर्ण देवताको कल्याण नै निहित थियो । शिवको सौम्य मूर्ति उमामहेश्वरले त्यही कुरा इङ्गित गरेको पाइन्छ । सृष्टि र गृहस्थाश्रमबारे महत्त्वपूर्ण शिक्षा उमामहेश्वरफलकले प्रदान गरेको छ । चार आश्रम ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यासमध्ये गृहस्थाश्रममा मानिसले नैराश्यता देखाएमा प्रकृतिको मानवसृष्टि नै रोकिने भएकाले यो आश्रमप्रति धर्मशास्त्रहरूले विशेष महत्त्व दिएका छन् । योगी, तपस्वी, संन्यासीको रूपमा प्रसिद्ध शिवले समेत गृहस्थाश्रमको महत्त्व बुझेर पार्वतीसँग विवाह गरेर पारिवारिक जीवनमा प्रवेश गरेको तथ्य उमामहेश्वर मूर्तिफलकबाट थाहा पाइन्छ । अन्त्यमा दीर्घतपाः (लामो समयसम्म तपस्या गर्ने), श्रीमान् (विभूतिस्वरूपमा उमाद्वारा सम्पन्न) र स्तव्यः (स्तुतिको योग्य) शिव र उनकी अर्धाङ्गिनी पार्वतीलाई नमस्कार गर्दछु ।

**पाटन, घैँबुको उमामहेश्वर (संवत् १०७)**

पाटन, घैँबुको (धै) उमामहेश्वरफलक अभिलेख र मिति भएकाले महत्त्वपूर्ण छ । यो मूर्तिकै आधारमा यसभन्दा पछि बनेका मूर्तिको समय तोक्न सकिन्छ । मूर्तिफलकको बीचमा सबभन्दा माथि छत्र देखाउनु, गङ्गाको मूर्तिफलकको बीचबाट छेउमा कुँद्नु, खाटमुनि दैनिक प्रयोगका सरसामान राखेको जस्तै गरेर आसनीमुनि सामान राख्नु यो मूर्तिको विशेषता हो । पाटन, घैँबुकै उमामहेश्वर अभिलेखका कारण महत्त्वपूर्ण भए पनि कलाको दृष्टिकोणले त्यति उच्चस्तरीय छैन । पाटन, घैँबुको उमामहेश्वर अभिलेखको आशय यस्तो छ - 'संवत् १०७ माघ महिना रोहिणी नक्षत्र बुधवारको दिन श्री गुणकामदेवको राज्यकालमा ..... मणिग्वलक क्षेत्रमा कुनै एक आमाबाबु र गुरुका भक्तले जगत्लाई नै स्वर्ग र


रेखाचित्र ३ : उमामहेश्वर, घैंबु, पाटन

मोक्ष दिलाउनका निमित्त देवप्रसाद निर्माण गरे' (जोशी, २०३६ : पृ. ८)। दसौँ शताब्दीको यो उमा-महेश्वरफलकको अभिलेखमा शिवको स्तुति संक्षिप्त रूपमा वर्णन गर्नुका साथै शिवलाई ललितेशाय (ललिता अर्थात् त्रिपुरसुन्दरी देवी शक्तिका रूपमा) पनि वर्णन गरिएको छ । उमामहेश्वर मूर्तिको क्रममा यो एउटा बिर्सन नमिल्ने मूर्ति हो ।

**हाँडीगाउँ, सत्यनारायण मन्दिरको उमामहेश्वर** (इ.१४१४)

हाँडीगाउँक्षेत्र नेपालको पुरानो इतिहास र धरोहर बोकेको प्रसिद्ध थलो हो । लिच्छविकालका प्रसिद्ध राजदरबार मानगृह र कैलासकूटभवन यही क्षेत्रमा भएको अनुमान पुरातत्त्वविद्हरूको छ । हाँडीगाउँक्षेत्रमा निर्मित सत्यनारायण मन्दिरवरिपरि लिच्छविकाल र त्यसपछिका कलाकृति थुप्रै प्राप्त भएका छन्, जसमध्ये मिति भएको यो उमामहेश्वर मूर्तिफलक पनि उल्लेखनीय छ । फलकको बीचमा चारवटा हात भएका शिव ललितासनमा बसेका छन् । अरू उमामहेश्वरफलकमा जस्तै शिवका हातमा त्रिशूल र अक्षमाला प्रस्ट देखिन्छन् । एक हातले पार्वतीलाई अँगालो हालेको र अर्को हात भने वरदमुद्रामा देखाइएको छ । शिवको जटा, मुकुट, कण्ठहार, माला, बाजु, बाला, कम्मरबन्ध, त्यस्तै पार्वतीको कानको कुण्डल, कण्ठहार, धोतीको मुजा सबै बनाउन कलाकारले मेहनत गरेको देखिन्छ । फलकको तल्लो खण्डको बीचमा नृत्यमुद्रामा गणेश र दायाँबायाँ चार-चार जना अन्य गणहरू विभिन्न वाद्यवादन गर्दै-नाच्दै गरेको दृश्य यो फलकमा अङ्कन गरिएको छ । उमामहेश्वरका प्रारम्भका मूर्तिहरूमा उमा र महेश्वर मात्रै कुँदिएका छन् । त्यसपछि बिस्तारै कुमार, गणेश, गङ्गा आदिका मूर्तिहरू कुँदिन थाले । फलकको तल्लो भागमा पनि सुरुमा तीन, पाँच, सात गर्दै गणहरूको सङ्ख्या बढेर पन्ध्रौँ शताब्दीसम्म आइपुग्दा त नौवटासम्म गणहरू कुँदिएका छन् । यो फलकमा कुँदिएका

सम्पूर्ण देवदेवी, सेवकसेविका र गणहरूको मुहार खिइएको छ, जसले गर्दा अनुहारको भावभङ्गी बताउन सकिँदैन । फलकको सबभन्दा माथि बीचमा गङ्गा नदीलाई स्त्रीरूपमा पृथ्वीमा झर्न लागेको देखाइएको छ । अन्य उमामहेश्वरफलकभन्दा फरक यसमा गङ्गाका दायाँबायाँ स्थानका मुद्रामा सूर्यचन्द्र कुँदिएका छन् । सूर्यचन्द्रका ठीक तल शङ्ख, चक्र, गदा, पद्मवीज चारवटा बाहुमा धारण गरेका विष्णु र चारवटा हातमा पुस्तक, अक्षमाला धारण गरेका ब्रह्मा पनि यो उमामहेश्वरफलकमा देखाइएको छ । अरू शिवका रक्षकगणहरूका चारवटा हातमा भने शिवकै आयुधहरू यथावत् रूपमा देखाइएको छ । सत्यनारायण मन्दिरको यो उमामहेश्वरको मूर्तिमा दर्साइएको अर्को एउटा रमाइलो पक्ष भने आसनीमुनि राखिएका दैनिक प्रयोगका सामानको प्रदर्शन पनि हो । नौ-दसवटा दैनिक प्रयोगका सामान यसमा देखिन्छ, जसमध्ये ऐना, सिन्दूर राख्ने बट्टा, बिर्को भएको बट्टा आदि प्रस्ट चिनिन्छ । पाटन घैंबुको उमामहेश्वरफलकमा पनि यस्तै ढङ्गले घरेलु उपभोगका सामान प्रदर्शन गरिएको छ । कलाको दृष्टिकोणबाट सारै उच्च कोटीको मूर्तिफलकमा यो उमामहेश्वर मूर्ति नपरे पनि मिति भएकाले यो उल्लेखनीय छ ।

**भक्तपुर, नसमान टोलको उमामहेश्वर**

भक्तपुर, नसमान टोलमा एउटा सरल र सुन्दर उमामहेश्वर मूर्तिफलक थियो । १९८४ मा त्यो फलक चोरी भएकाले राष्ट्रलाई नै एउटा ठूलो क्षति भएको छ । काठमाडौं उपत्यकामा प्राप्त भएका अन्य उमामहेश्वर मूर्तिफलकजस्तै यस मूर्तिफलकलाई पनि तीन खण्डमा विभाजन गरेर अध्ययन गर्न सकिन्छ । सबैभन्दा माथिल्लो खण्डमा सूर्य र चन्द्र, शिवका रक्षकगण, गङ्गा आदि छन् भने बीचको मुख्य भागमा शिव, पार्वती, कुमार, नन्दी, पार्वतीका सेविकाहरू छन्। त्यस्तै सबैभन्दा तल्लो भागमा विभिन्न बाजाहरू बजाउँदै र नाच्दै गरेका गणहरू छन् । यो उमामहेश्वरफलकमा एउटा नौलो कुरा देखिएको छ । माथिल्लो खण्डमा एक जना साधु हिँड्न लागेको देखाइएको छ ।



रेखाचित्र ४ : उमामहेश्वर, नसमानटोल, भक्तपुर
(सन् १९८४ मा चोरी भएको)

उमामहेश्वरसँग यी साधुको के सम्बन्ध भएर यहाँ कुँदिएको हो, त्यो विचारणीय छ । शिवका अनन्य भक्तको रूपमा ऋषि भृङ्गीको प्रसङ्ग पुराणहरूमा छ । ऋषि भृङ्गीलाई गणहरू कुँदिने स्थानमा फलकको सबैभन्दा तल कुँद्ने प्रचलन छ । यो फलकमा पनि पाँच जना गणसँगै हातमा कमण्डलु लिएर नाच्न लागेको भावमा दर्साइएको छ । भृङ्गीको प्रसङ्ग आउँदा पुराणहरूमा शिवको मात्रै परिक्रमा गर्ने र शिवबाहेक पार्वतीलाई पनि घुम्न नचाहने भक्तको रूपमा दर्साइएको छ । पार्वतीले आफूलाई भृङ्गी ऋषिले नघुमेपछि अर्धनारीश्वर स्वरूप रहेको प्रसङ्ग पनि चाखलाग्दो छ । ऋषि भृङ्गी पनि कम हठी थिएनन्, आफूलाई कीराको रूपमा परिवर्तन गरेर अर्धनारीश्वरको आधा शिवको भाग मात्र छेडेर परिक्रमा गरे । त्यसैले यो मूर्तिफलकमा ऋषि भृङ्गीलाई सुरुमा शिवलाई परिक्रमा गर्न लाग्दाको क्षणमा माथिल्लो खण्डमा र पछि पार्वतीले ईर्ष्याले ऋषिको शरीरमा हेर्दा मासुहरू गलेर झरेपछि अस्थिपञ्जर मात्रै रहेको रूपमा देखाउन खोजेको हुन सक्छ । माथिल्लो खण्डमा नदी गङ्गालाई बीचमा नदेखाएर दायाँतर्फ कुँदिएको छ । गङ्गा स्वर्गबाट झरेको दर्साउन पाउ माथितिर फर्केको र वरिपरि बादलैबादल देखाइएको छ । फलकको दायाँबायाँ उभिएका रक्षकहरूले चारवटै हातमा शिवले धारण गर्ने आयुधहरू त्रिशूल, अक्षमाला, कमण्डलु, विभूतिको डल्लो धारण गरेका छन् । बीचको खण्डमा शिव, पार्वती, कुमार, नन्दी र सेविकाहरूको अनुहारको भाव दर्साउन कलाकारले खूबै मेहनत गरेका छन् । चारवटा हात भएका शिव कलात्मक ढङ्गले सिंहासनमा बसेका छन् । आकर्षक जटामुकुट, दुवै कानमा फरकफरक ढाँचाका कुण्डल, घाँटीमा कण्ठहार, पाखुरामा बाजु, कम्मरमा पटुका सबै नै मिलाएर कुँदिएको छ । लामो समयसम्म योगीको जीवन बिताएका शिवले उमेर ढल्केपछि गृहस्थाश्रममा प्रवेश गरेका हुन् । गृहस्थाश्रममा प्रवेश गरेपछि शिवको पत्नीप्रतिको जुन प्रेमभाव हो त्यो यसमा झल्काइएको छ । शान्त र प्रसन्न शिव एक हातले पार्वतीको कम्मर समात्दा रसिक पनि देखिन्छन् । पार्वती पनि एउटै आसनीमा शिवसँग ढेपिएर बसेकी छन् । पार्वतीको दायाँ हात शिवको तिघ्रामा र कमलको फूल लिएको बायाँ हात आफ्नै तिघ्रामा अडचाइएको छ । तालुमा लामो आकारको जुरो मोतीका मालाहरूले सिँगारिएको छ । गलामा हार र लामो माला, नाडीमा चुरा, पाउमा र कानमा गोलो आकारका रिङ, छोटो धोती सबै नै मिल्दो ढङ्गले बनाइएको छ । पार्वतीको छेउमै एउटी सेविका घुँडा मारेर बसेकी अर्की चमर लिएर उभिएकी छन् । अर्की घुँडा मारेर बसेकी सेविकाले भने पार्वतीको पाउ दुवै हातमा थामेर अदबसाथ टाउको झुकाएको भाव पनि सफलतासँग कलाकारले कुँदेका छन् । शरीर बाहिर निकालेका, ढाडमा जुरो, घाँटीमा रालो भएका नन्दी पनि सजीव ढङ्गले कुँदिएको छ । नन्दीको दुवै सिङको बीचमा सानो चिटिक्क परेको मुकुट कलाकारले सीप लगाएर बनाएका छन् । शिवको दायाँतर्फ ललितासनमै कुमार दायाँ हातमा सुरो र बायाँ हातले मुजुर लिएर प्रसन्न मुद्रामा छन् । कैलास पर्वतको भान दिन मूर्तिफलकका विभिन्न ठाउँमा चट्टानको, पहाडको दृश्य देखाइएको छ । मूर्तिफलकको सबभन्दा तल्लो खण्डमा चारवटा हात भएका गणेश परशु, अक्षमाला र मोदकपात्र लिएर नाच्दै छन् । गणेशका

दायाँतर्फ दुई जना र बायाँतर्फ दुई जना गणहरू बाजा बजाउँदै नाच्दै छन् । गणपति भएकाले गणेश दोहोरो कमलको फूलमा उभिएका छन् । बाह्रौँ-तेह्रौँ शताब्दीको यो उमामहेश्वरफलक नेपाली प्रस्तरकलाको सुन्दर नमुना हो ।

**भक्तपुर, भगवती मन्दिरको उमामहेश्वर**

नसमान टोलको उमामहेश्वरभन्दा केही समयपछि कुँदिएको उमामहेश्वर मूर्ति कलाकारिताका दृष्टिबाट उत्कृष्ट छ । यो मूर्तिफलकमा पनि सबैभन्दा माथिल्लो खण्डमा सूर्य, चन्द्र, गङ्गा, चारवटा हातमा विविध आयुध लिएका रक्षक कुँदिएका छन् । बीचको खण्डमा शृङ्गारिक भावमा बसेका उमामहेश्वर छन् । ललितासनमा बसेका शिवले हल्का गहना, अलङ्कृत जटामुकुट, जनै लगाएका छन् । जपमाला, त्रिशूल लिएका शिवको एक हात खण्डित छ भने अर्को हातले पार्वतीलाई कम्मरमा समातेको देखाइएको छ । पार्वतीले आफ्नो दायाँ हात शिवको बायाँ तिघ्रामा अड्याएकी छन् र बायाँ हातमा डाँठसहित कमलको फूल समातेकी छन् । पार्वतीको दायाँ पाउ सेविकाले हातमा थामेकी छन् । अधिकांश उमामहेश्वरफलकमा पार्वतीको पाउ सेविकाले यसरी नै थामेको देखाइन्छ । पार्वतीले बायाँ पाउ बटारेर असजिलो पाराले तिघ्रामाथि राखेकी छन् । प्राय: उमामहेश्वरफलकमा शिवको बसाइभन्दा पार्वतीको बसाइ असजिलो, अप्ठ्यारो ढङ्गको देखिन्छ । खुट्टा मोडेर बसेका नन्दीको घाँटीमा कुमार हातमा विविध आयुधहरू लिएर बसेका छन् । कुमारको दायाँतर्फ सुन्दर केशविन्यास र छरिएको शरीर भएकी सेविकाको घुँडासम्मको आकर्षक मूर्ति कुँदिएको छ । मूर्तिफलकको सबभन्दा तल चारवटा हात भएका नृत्यमुद्रामा गणेश र अन्य छ जना गणहरू वाद्यवादन गर्दै, नाच्दै गरेको देखाइएको छ । तीन शिर, तीन हात र तीन पाउ भएका भक्त भृङ्गी, वानरमुख र सिंहमुख गण पनि बनाइएको छ । यसरी सम्पूर्ण फलक कलाकौशलले परिपूर्ण छ ।

**भक्तपुर, चुपिङ्घाटको उमामहेश्वर**

सोह्रौँ शताब्दीमा बनेको भक्तपुर चुपिङ्घाटको उमामहेश्वर मूर्तिफलकमा खस्कँदो कलाकारिता प्रस्ट देखिन्छ । उपत्यकामा प्राप्त अन्य उमामहेश्वर फलकभन्दा बेग्लै शैलीले गर्दा पनि यस फलकको यहाँ चर्चा गरिएको हो । प्राय: उमामहेश्वरफलकमा मुख्य देवगणभन्दा अरू रक्षक र देवीहरू सानो आकारमा बनाउने परम्परा छ । यो चुपिङ्घाटको फलकमा भने शिवका गणहरू पनि झन्डै शिवजत्रै छन् । गङ्गा, विद्याधर, सेवक, सेविका सबैको उपस्थिति अस्वाभाविक ढङ्गले दर्साइएको छ । पन्ध्रौँ-सोह्रौँ शताब्दीमा प्रस्तरकलामा आएको ह्रास यो मूर्तिफलकमा प्रस्ट देख्न सकिन्छ ।

**राष्ट्रिय सङ्ग्रहालयको उमामहेश्वर**

उमामहेश्वरको एउटा सुन्दर मूर्ति राष्ट्रिय सङ्ग्रहालय, छाउनीमा प्रदर्शित छ । यसमा शिवपार्वतीलाई गुफाभित्र देखाउन चट्टानको कुँदाइ निकै सफलताका साथ गरिएको छ । मूर्तिफलकको मध्य भागमा शिव र पार्वती अर्धपर्यङ्क आसनमा

विराजमान छन् । कानमा सर्पकुण्डल र कुण्डल, चार बाहुमा रुद्राक्षमाला र त्रिशूल, गलामा कण्ठहार र यज्ञोपवीत लगाएका शिवले एक हातले पार्वतीलाई अँगालो हाल्दै हल्कासँग स्तन समातेका छन् । शिवको देब्रे तिघ्रामाथि पार्वती दायाँ खुट्टा आसनीबाट तल झरेर बायाँ खुट्टा दोबारेर शृङ्गारिक भावमा बसेकी छन् । पार्वतीको दायाँ हात शिवको तिघ्रामा अडयाइएको छ र देब्रे हात आफ्नै बायाँ घुँडामा अडयाएर कमलको फूल समातेको छ । कर्णाभूषण र कण्ठहार लगाएकी पार्वतीको शरीर मिलेको र लचकदार देखिन्छ । चारवटा हात भएका शिवको जटामुकुट सर्पकुण्डल, पत्रकुण्डल, कण्ठहार, बाजु, कम्मरबन्ध सबै नै बनाउन कलाकारले सारै नै मेहनत गरेको देखिन्छ । शिवको शिरमाथि दायाँतर्फ मानव रूपमा चार हात भएकी गङ्गा, दायाँतर्फ नन्दी र मयूर समातेका कुमार छन् । पार्वतीको एक पाउ सिंहमाथि छ, खुट्टानजिकै दुई जना स्त्रीसेविकाहरू चमर र खड्ग लिएर उभिएका छन् । मूर्तिको शिरोभागमा दुई जना रक्षक आफ्ना चारवटा हातमा शिवकै आयुध लिएर उभिएका छन् । मूर्तिको शिरोभागमा छत्र र शिवलिङ्गका दायाँबायाँ सूर्यचन्द्र पनि कुँदिएका छन् । यो मूर्तिको पृष्ठ भागमा कैलास पर्वत र गुफाको चित्र निकै सफलतापूर्वक कुँदिएको छ । कुमारको अनुहार, नन्दीको शिर, शिवको छाती र खुट्टाको केही भाग, पार्वतीको स्तन र कम्मरका भाग, केही गणका अनुहार र मूर्तिका अन्य केही भागका चोइटा उप्किएर खसेका छन् । मूर्तिको समय तोक्नु सबभन्दा कठिन विषय हो, तैपनि शैली र ढुङ्गाको प्रकृतिबाट यो केही सजिलो हुन्छ । विद्वान् कृष्ण देवले यो मूर्तिलाई बाह्रौं शताब्दीको भनेर तोकेका छन् (कृष्ण देव, १९८४ : पृ. ४८) । यसै गरेर अर्का स्वदेशी विद्वान् लैनसिंह बाङ्देलले दसौं-एघारौं शताब्दीको समय अनुमान गरेका छन् (बाङ्देल, १९९६ : पृ. १६३) । मूर्तिको विकासक्रम, सबभन्दा तल्लो खण्डमा कुँदिएका सात जना गणहरूको प्रकृति देख्दा यो मूर्ति दसौं शताब्दीपछिको देखिन्छ ।

**राष्ट्रिय सङ्ग्रहालय, छाउनीको विशेष प्रदर्शनीमा प्रदर्शन गरिएको उमामहेश्वरफलक (ने.सं.८३४ )**

इ.सन्.१९३८ मा सर्वसाधारणका लागि खुला गरिएको छाउनीको राष्ट्रिय सङ्ग्रहालयमा बेलाबेलामा विशेष प्रकारका प्रदर्शनी आयोजना गरिँदै आएको छ । २००३ विश्वसम्पदा दिवसको उपलक्ष्यमा (२०६० बैशाख-ज्येष्ठ) अस्थायी प्रदर्शनीको आयोजना राष्ट्रिय सङ्ग्रहालयमा गरिएको थियो । बेलाबेलामा चोरिएर फेला परेका पुरातात्त्विक महत्त्वका वस्तुहरू नेपाल प्रहरीले पुरातत्त्व विभाग र राष्ट्रिय सङ्ग्रहालयलाई जिम्मा लगाउने गरेको छ । यसपल्ट पनि विभिन्न स्थानबाट विभिन्न समयमा चोरिएर फेला परेका महत्त्वपूर्ण कलाकृतिहरू नेपाल प्रहरीका साथसाथै काठमाडौं र पाटनका जिल्ला अदालतले राष्ट्रिय सङ्ग्रहालयलाई हस्तान्तरण गरेका छन् । त्यही क्रममा दुई सयभन्दा बढी कलाकृतिमध्ये महत्त्वपूर्ण कलाकृतिहरूको

प्रदर्शन राष्ट्रिय सङ्ग्रहालयको सबैभन्दा पुरानो भवनमा (प्रधानमन्त्री भीमसेन थापा १८०६-३७) गरिएको छ । त्यहाँ प्रदर्शन गरिएको अभिलेख र मिति भएको यो उमामहेश्वरफलक एउटा छुट्टै नौलो कलाशैलीले गर्दा उल्लेखनीय छ । ५५×४० से.मी. लम्बाइ र चौडाइ भएको यो मूर्तिफलक मिति कुँदिएका कारणले पनि महत्त्वपूर्ण छ । प्राय: सबै उमामहेश्वरफलकमा जस्तै शिव, पार्वती एउटै आसनमा टाँसिएर शृङ्गारिक भावमा बसेको झलक यो मूर्तिफलकमा देखाइएको छ । शिवका चारवटा हातमा अक्षमाला, त्रिशूल, कमण्डलु आदि कुँदिएका छन् । पार्वतीको दायाँ हात शिवको घुँडामा र बायाँ हातमा डाँठसहितको कमलको फूल आकर्षक ढङ्गले बनाइएको छ । फलकको सबैभन्दा माथिल्लो खण्डको बीच भागमा छत्र र दायाँतर्फ गङ्गा नदीलाई सुन्दर स्त्री रूपमा स्वर्गबाट झर्दै गरेको दर्साइएको छ । गङ्गाले दुवै हातले शिवलाई चढाएको जल नदीकै रूपमा शिवको जटामा झरेको दृश्य स्वाभाविक रूपले कलाकारले कुँदेका छन् । गङ्गाले दुवै हातले समातेको ओढ्ने हावामा फहराएको स्वाभाविक दृश्य पनि आकर्षक छ । अन्य उमामहेश्वरफलकमा जस्तै शिवको दायाँ र बायाँ कुँदिएका रक्षकगणहरूका चारवटा हातमा शिवले धारण गर्ने आयुधहरू नै दर्साइएका छन् । शिवतर्फ दुईवटा मात्रै हात भएका दुई जना सेवकमध्ये एक जनालाई अन्जलिमुद्रामा देखाइएको छ । पार्वतीतर्फ पनि एउटी सेविकाले पाउ मोल्दै गरेकी र अर्की नमस्कारमुद्रामा देखाइएको छ । साधारणतया उमामहेश्वरफलकका तीन तह हुन्छन् । यो उमामहेश्वरफलकका भने चार तह छन् । गणहरू कुँदिएको खण्डमा बीचमा गणेश र उनको दायाँबायाँ अन्य छ जना गणहरू कुँदिएका छन् । गणहरूले मादल, ढोलक, झ्याली, आदि बाजा बजाउँदै गरेको देखाइएको छ । गणहरू कुँदिएको खण्डभन्दा तल्लो भागमा पनि भक्तहरू कुँदिनु यो फलकको विशेषता हो । आठ जना भक्तहरूले बीचमा शिवलिङ्ग राखेर पूजाअर्चना गर्न लागेको दृश्य नौलो, निकै आकर्षक छ । पौबाचित्रहरूमा भक्तहरू बनाउने प्रचलन देखिए पनि प्रस्तर मूर्तिफलकमा यस्तो कमै पाइन्छ । शिलापत्र कुँद्दा भक्तभक्तिनीलाई नमस्कारमुद्रामा दर्साउने चलन भने निकै व्यापक छ । शिवको दायाँतर्फ नन्दीको शिर मात्रै देखिने गरेर बनाइएको छ । शिवको जटामकुट, गलामा छोटो र लामो हार, कानमा कुण्डल, फुलबुट्टे पाउजु, पार्वतीको कम्मरमा बाँधिएको धोतीका बुट्टा सबै नै कलाकारले मन लगाएर बनाएको देखिन्छ ।

मूर्तिफलकको दायाँतर्फको सबैभन्दा तल्लो भागको एक टुक्रा चोइटिएर गएको छ । भक्तभक्तिनीले शिवलिङ्ग पूजा गरेको खण्डभन्दा तल अर्थात् मूर्तिफलकको सबभन्दा तल्लो खण्डमा मितिसहितको अभिलेख कुँदिएको छ ।

**साँखु, दुगहिटीको उमामहेश्वर (हाल राष्ट्रिय सङ्ग्रहालय)**

यो उमामहेश्वरफलक हेर्नेबित्तिकै सादा, तर सजीव लाग्दछ । यो फलकमा उमामहेश्वर, नन्दी र बालक कुमारबाहेक शिवपरिवारका अन्य सदस्य छैनन् । मूर्तिफलकको माथिल्लो भाग खण्डित छ, तैपनि शिवको शिरपछाडि बनेको प्रभामण्डल



रेखाचित्र ५ : उमामहेश्वर, दुगहिटी, साँखु
(हाल रा. सं., छाउनी)

आकर्षक छ। चौडा छाती र बलिष्ठ हातखुट्टाले गर्दा शिवको शरीर आकर्षक छ। शिवका चारवटा हातमध्ये दायाँतर्फको एउटा हातले पार्वतीलाई अँगालो हालेको छ, अरू हातमा विभिन्न आयुध छन्, तर यसमा त्रिशूल भने देखिँदैन। शिवको शिरको मुकुट, कानको कुण्डल, गलाको हार, नाडीको बाला, कम्मरमा बाँधिएको पटुका आदि सबै बनाउन कुशल कलाकारले गरेको मेहनत प्रस्ट देखिन्छ। शिवको नाइटो र ऊर्ध्वलिङ्ग पनि प्रस्टसँग बनाइएको छ। पार्वतीको केशविन्यास, मुकुट, कुण्डल, कण्ठहार, चुरा र गोडामा सेलजस्तो कल्ली पनि सारै सुहाउँदो ढङ्गले कुँदिएको छ। शरीरअनुसार मिल्दो स्तन, छिनेको कम्मर र ठीक्क मात्रामा फुकाएर बनाएको पुट्ठाले गर्दा पार्वतीको मूर्ति सजीव लाग्दछ। शिवको दायाँतर्फ तीखो सिङ भएका नन्दी र नन्दीको ठीक तल साना कुमार बसेका छन्। यो फलकमा कुमारको वाहन मयूर भने देखिँदैन। मूर्तिको सबभन्दा कठिन पक्ष त्यसको समय तोक्नु हो, त्यसैले यो मूर्तिको बारेमा पनि विद्वान्हरूको विभिन्न मत छ। लैनसिंह बाङ्देलले यो मूर्तिको समय नवौँ शताब्दी तोकेका छन् (बाङ्देल, १९८९ : पृ. १५७)। मूर्तिको सादापन र गणहरूको उपस्थिति नभएकाले यो मूर्ति नवौँ शताब्दीताकाकै लाग्दछ।

**नन्दीकेशरबहाल, नक्सालको उमामहेश्वर**

नक्सालमा दुईवटा उमामहेश्वरफलक छन्, जुन कलाका दृष्टिकोणबाट उच्चस्तरीय छन्। ती दुवै फलकको यहाँ वर्णन गरिनेछ। एउटा एघारौँ शताब्दीतिरको फलक छ। यसमा सबभन्दा तल नाच्दै-गाउँदै गरेका नौ जना गणहरू छन्। यो फलकमा कुँदिएका मूर्तिहरू प्रस्ट र स्वाभाविक देखिन्छन्। शिवको ठूलो आसन र पार्वतीको सानो आसन कुँदेर दुवैलाई छुट्टाछुट्टै आसनमा बसेको देखाइएको छ। छुट्टै आसन भए पनि शिवले एक हात पार्वतीको कुममा हल्कासँग राखेका छन् र पार्वतीको

एक हात शिवको तिघ्रामा र अर्को आफ्नै घुँडामा छ । फलकको दायाँबायाँ चन्द्रसूर्य पनि बनाइएको छ । गङ्गा फलकको बीचमा नभएर दायाँतर्फ छेउमा शिवलाई जल चढाउन लागेको देखाइएको छ । नन्दीको चित्रण सारै राम्रोसँग गरिएको छ । नन्दीसँगै कुमार पनि एक हातले दण्ड र अर्को हातले मयूर समातेर बसेका छन् । फलकको माथिल्लो खण्डमा दायाँ र बायाँ चारवटा हात भएका शिवका गण शिवकै आयुध लिएर पहाडबाट निस्कन लागेको देखाइएको छ । पार्वतीतर्फ एउटी स्त्रीसेविकाका चारवटा हातमा ढाल, तरबार पनि देखिन्छन् । अर्की बसेकी सानी सेविकाले आसनीबाट तल झरेको पार्वतीको खुट्टा हातमा थापेकी छिन् । एघारौं शताब्दीको मूर्तिफलक भएर पनि यसले लिच्छविकालको कलाको शैली अनुकरण गरेको छ । नक्सालको अर्को उमामहेश्वर मूर्तिको कला भने निकै खस्कँदो देखिन्छ । लैनसिंह बाङ्देलले यो दोस्रो मूर्तिलाई बाह्रौं शताब्दीको समय तोकेका छन् । फलकको तल पाँच जना गणहरू भएको यो उमामहेश्वरफलक देख्नेबित्तिकै खाँदिएको र शिवपार्वतीको शरीर पनि पुड्को देखिन्छ । नारायणचौरका यी दुइटै उमामहेश्वरफलकको ढाँचा एउटै छ । तर सय वर्षको अन्तरालमा कलाको क्षेत्रमा आएको ह्रास यी दुवै मूर्ति दाँज्दा देख्न सकिन्छ । उमामहेश्वरको विकासक्रममा चौधौं-पन्ध्रौं शताब्दीका भक्तपुरका केही यस्ता फलकको चर्चा गरिनेछ ।

**दीपङ्कर महाविहार, भक्तपुरको उमामहेश्वर**

हेर्नेबित्तिकै यो फलक तेह्रौं शताब्दीपछि कुँदिएको देखिन्छ । यो फलकले प्राचीन उमामहेश्वरकै शैली पछ्याएको छ, तर माझिएका कलाकारले यो मूर्ति कुँदेको हैन भन्ने प्रस्ट हुन्छ । कैलाशको भानका लागि कुँदिएको चट्टानको दृश्य भद्दाखाले छ । फलकको सबभन्दा माथि शिवलिङ्ग, दायाँबायाँ गोलो आकारका सूर्यचन्द्र, शिवलिङ्गको ठीक तल गङ्गा यसमा सबै विषय नछोडीकन समावेश छन् । यीबाहेक कम्मरसम्म कुँदिएका चार हात भएका गणहरू हातमा त्रिशूल र अक्षमाला लिएर पहाडबाट निस्कन लागेको जस्तै देखाइएको छ । शिवको दायाँतर्फ नन्दी र नन्दीको टाउकामा कुमार हातमा दण्ड लिएर बसेका छन् । शिव र पार्वतीको मुख ताछिएकाले भाव प्रस्ट छैन । शिवका चार हातमा अक्षमाला, वरद, त्रिशूल र एउटा हातले पार्वतीलाई अँगालो हालेर स्तन समातेको देखाइएको छ । पार्वतीतर्फ एउटी सेविका बसेर पाउ समात्तै गरेको र अर्की उभिएकी सेविकाले हातमा खड्ग लिएको देखाइएको छ । उत्तरलिच्छविकालका अधिकांश फलकको प्रचलित शैली यसमा पछ्याइएको छ । फलकको सबभन्दा तल बीचमा गणपति गणेश बनाएर पाँच जना गण कुँदिएका छन् । गणेशका चार हातमध्ये एउटामा बन्चरो लिएको प्रस्ट देखिन्छ । अरू गणहरू नाच्दै, बाजा बजाउँदै छन् । शिव र पार्वती दुवैका गहनामात्रै हैन रक्षक र सेविकाहरूका गहनासमेत कलाकारले मिहिनेत गरेर बनाएको देखिन्छ । यो उमामहेश्वरफलकलाई चौधौं शताब्दीताकाको खस्कँदो कलाको एउटा उदाहरणको रूपमा औंल्याउन सकिन्छ ।

**भक्तपुर, राष्ट्रिय कलासङ्ग्रहालयमा प्रदर्शित पन्ध्रौँ शताब्दीको उमामहेश्वर मूर्ति**

भक्तपुर, राष्ट्रिय कलासङ्ग्रहालयको मूर्ति पनि नौलो कलाकारिताले गर्दा चर्चामा छ । सबभन्दा तल पाँच जना गण भएको यो फलकमा अन्य उमामहेश्वरफलकभन्दा केही फरक कलाकृति देखिन्छ । फलकको सबभन्दा माथि दायाँबायाँ बनाएका गणहरूका चारवटा हातमध्ये एउटा हात कम्मरमा अडचाएर सम्पूर्ण शरीर नै देखाउने नौलो कलाकृति यो फलकमा छ । फुकेको छाती भएका शिवका चार हातमध्ये दुईमा त्रिशूल, अक्षमाला छन् भने एउटा वरदमुद्रामा छ । बाँकी एक हातले हल्कासँग पार्वतीको स्तन स्पर्श गरेको छ । यो फलकको बीचमा आकाशबाट निस्कन लागेका जस्तै भान पार्ने दुई स्त्रीमूर्तिहरू छन् । स्त्रीरूपमा गङ्गा र हातमा माला लिएकी एउटी केटी दुवैले जल र फूलको माला शिव र पार्वतीमा बर्साउन लागेको भान हुन्छ । पार्वतीको पाउनजिकै घुँडा मारेर बसेकी सेविका पनि आकर्षक छन् । भक्तपुरकै कलासङ्ग्रहालयमा पन्ध्रौँ शताब्दीकै अर्को एउटा उमामहेश्वरफलक छ । शिवपार्वतीको अनुहार खण्डित भएकाले भावभङ्गी बुझ्न सकिँदैन । यो फलकमा पनि कैलाशको भान दिन चट्टानलाई चिराचिरा पारेर कुँदिएको छ । यो फलकको एउटा नौलो कुरो के छ भने यसको तल्लो खण्डमा गणहरू छैनन् ।

**खौमा, भक्तपुरको इ.सं. १६११ को उमामहेश्वरफलक**

मिति र नौलो कलाकृतिले गर्दा भक्तपुरको यो फलक उल्लेखनीय छ । चार हात भएका शिवले एक हातले पार्वतीको कम्मरमा समातेर अर्को हातले चिउँडो समाती आफूपट्टि फर्काएका छन् । बाँकी दुई हातमा त्रिशूल र अक्षमाला लिएका छन् । यो फलकमा शिव घुँडा मारेर बसेका नन्दीको ढाडमै बसेका छन् । पार्वती शिवको काखमा बसेकी छन् । उनको पाउ सिंहमाथि छ । अरू फलकमा गणहरू विभिन्न आयुध लिएर शिवका दायाँबायाँ उभिएर पहरा दिएको देखाइन्छ । यो फलकमा भने शिवका दायाँबायाँ बसेका छन् । ठूलो फक्रेको कमलको फूलमाथि नन्दी र नन्दीमाथि शिव बसेका छन् । शिवको शिरपछाडि प्रभामण्डल र सम्पूर्ण शरीर ढाक्ने गरेर ज्वालावलि बनाइएको छ । हाँडीगाउँ सरस्वती मन्दिर, सत्यनारायण मन्दिर र कोटालटोल आदि विभिन्न ठाउँमा उमामहेश्वरका पन्ध्रौँ-सोह्रौँ शताब्दीका मूर्तिहरू छन् । तीमध्ये कोटालटोलको उमामहेश्वर मूर्तिको फलकको सबभन्दा आकर्षक स्थान तल्लो खण्ड हो । मूर्तिफलकको बीचमा अन्य उमामहेश्वरफलकको जस्तै उमा र महेश्वर बसेका छन् । शिवका चार हातमध्ये बायाँ एउटा हात पार्वतीको कुममा अडचाएको र अन्य हातमा विविध आयुध छन् । पार्वतीका दायाँ हात शिवको तिघ्रामा र बायाँ हातमा कमलको फूल छ । पार्वतीका दुई हातमध्ये दायाँ, बायाँ हातमा माला लिएका परीहरू छन् । अधिकांश उमामहेश्वरफलकमा उभिएका गणहरू हुन्छन् । यसमा भने पलेँटी कसेका गणहरू छन् । यो उमामहेश्वरफलकको अर्को आकर्षक पक्ष आसनीदेखि तल दैनिक प्रयोगका सरसामान सजाएर राख्नु हो । यो फलकमा उमामहेश्वरबाहेक थुप्रै गणहरू, रक्षकहरू, परी, गङ्गा कुँदिएका छन्, तैपनि मूर्ति मिलेको र चिटिक्क नै

देखिन्छ । ठाउँ किफायत गर्न यो फलकमा रक्षक र सेवकसेविकालाई समेत पलेँटी कसेर राखिएको छ ।

काठमाडौँ उपत्यकामा पाइने उमामहेश्वरफलकमा शिवका परिवारका सदस्यहरू कुँदिएको देखिन्छ । लिच्छविकालभन्दा अघिका उमामहेश्वरफलकमा भने उमामहेश्वर र वाहनको रूपमा नन्दीमात्रै कुँदिएका छन् । पछि समयको विकाससँगसँगै गणहरू, कुमार, गङ्गा, परी र रक्षकहरू पनि थपिँदै गएको देखिन्छ ।

**धातुको उमामहेश्वर (चौधौँ शताब्दी)**

प्रतापादित्य पालले Nepal where the Gods are Young नामक पुस्तकमा धातुका उमामहेश्वर मूर्तिको चित्र प्रकाशित गरेका छन् । शिवका चारवटा र पार्वतीका दुईवटा हात भएको यो धातुको मूर्तिमा सबै विशेषता अन्य उमामहेश्वरफलकको जस्तै छ । शिवको दायाँ पाउ पार्वतीको वाहन सिंहमा अडचाएको एउटा नौलोपन भने यस मूर्तिमा छ । धातुको मूर्तिमा ठाउँ-ठाउँमा जडाउ पनि भएकाले सारै आकर्षक र मनमोहक देखिन्छ । शिवका चार हातमा त्रिशूल र अक्षमाला प्रस्ट देखिन्छन् । शृङ्गारिक भाव दर्साउन शिवको एउटा हातले पार्वतीको स्तन स्पर्श गरेको देखाइएको छ । त्यस्तै पार्वतीको दायाँ हात शिवको देब्रे तिघ्रामा रसिकभावले अडचाएको छ र देब्रे हातमा लामो डाँठसहितको कमण्डलु राखिएको छ । शिव र पार्वतीको जडाउ मुकुट, कानको कुण्डल, गलाको कण्ठहार र माला, नाडीको चुरा, पाखुराको बाजुबन्ध, पाउको पाउजु , कम्मरपेटी सबैमा जडाउ प्रयोग गरेर कलाकारले सुन्दर आकर्षक बनाएका छन् । शिव र पार्वतीको सौम्य अनुहारमा शृङ्गारिक भाव झल्काउन कलाकारले गरेको मेहनत प्रस्ट देखिन्छ । पार्वतीको वाहन सिंहमा शिवले पाउ राखेको नौलोपनले गर्दा यो मूर्ति वर्णनीय छ ।

काठमाडौँ उपत्यकामा धातुकलाको चरम विकास बाह्रौँ शताब्दीपछि भएको हो । यो उमामहेश्वर मूर्तिको माझिएको कलाकारिताले गर्दा तेह्रौँ शताब्दीको अन्त्य तथा चौधौँ शताब्दीको प्रारम्भमा बनेको देखिन्छ । पी.पालले पनि यस उमामहेश्वर मूर्तिफलकको समय चौधौँ शताब्दी तोकेका छन्, जुन ठीकै हो ।

## अध्याय : छ
# शिवपरिवारका सदस्यहरू

उमामहेश्वरफलकमा कुँदिएका शिवपरिवारका प्रमुख सदस्यहरूमा (१) पार्वती (२) गङ्गा (३) गणेश (४) कार्तिकेय (५) भृङ्गी (६) नन्दी आदि पर्दछन् ।

**पार्वती** : पौराणिक ग्रन्थमा शिवपार्वतीको जन्मजन्मको सम्बन्ध दर्साइएको छ । शिवपुराणमा दक्षले गरेको यज्ञमा शिव र सतीलाई निमन्त्रणा नगरेको, तर सती आफ्नो माइती गएको र त्यहाँ शिवको अपमान भएपछि सहन नसकेर यज्ञकुण्डमा हामफालेर प्राण दिएको वर्णन छ । शिवको डरले अग्निले सतीको शरीर जलाउन सकेनन् । त्यही शरीर बोकेर शिवले पृथ्वी भ्रमण गरेको दुःखपूर्ण वर्णन पुराणहरूमा आउँछ । विभिन्न स्थानमा भ्रमण गर्दा सतीदेवीको अङ्ग झरेको पवित्र स्थललाई विभिन्न पीठको रूपमा पूजा गर्ने चलन अझै छ । शिवले पत्नीप्रेमको एउटा बेजोड नमुना देखाएका छन् । सतीको गुह्य पतन भएको स्थानमा हाल गुह्येश्वरीको मन्दिर छ । हिन्दूहरूको यो एउटा पवित्र तीर्थस्थल हो ।

पार्वतीका आदर्श र दयामायाका कथा पुराणहरूमा प्रशस्त भेटिन्छन् । एकपल्ट एउटा गोहीले बालकलाई समात्यो । त्यो बालक छुटकाराका लागि करायो । दयालु पार्वती त्यो आवाज सुनेर घटनास्थलमा पुग्नुभयो । गोहीले आफ्नो आहारा छोड्न मानेन । पार्वतीले आफ्नो जीवनभरको तपस्याको पुण्य त्यस गोहीलाई दिएर बालकको ज्यान जोगाउनुभयो । यस्तैखाले घटनाहरूका वर्णन पुराणहरूमा बेलाबेलामा आउँछन् ।

देवीको अपार शक्तिको वर्णन चण्डी (सप्तशती)मा पाइन्छ । महाकाली, महालक्ष्मी र महासरस्वतीका गणहरूले परिपूर्ण जगदम्बाका कथाहरू नै सप्तशतीमा छन् । काली, दुर्गा, महिषमर्दिनी चण्डी, अम्बिका, चामुण्डा आदि पार्वतीकै विभिन्न रूपहरू हुन् । विभिन्न समयमा बेग्लाबेग्लै राक्षसलाई मार्ने देवीले बेग्लाबेग्लै रूप लिएका वर्णन पुराणहरूमा छन् ।

पर्वतराज हिमालय र मेनकाको गर्भबाट सतीदेवीको दोस्रो जन्म पार्वतीको रूपमा भयो । यो जन्ममा पनि पार्वतीले शिव पति पाऊँ भनेर तपस्या गरिन् र सफल भएको कथाको वर्णन पुराणहरूमा छ ।

अमरकोशमा पार्वतीका विभिन्न नाम बताइएको छ– (१) उमा (२) कात्यायनी (३) गौरी (४) काली (५) हैमवती (६) ईश्वरी (७) शिवा (८) भवानी (९) रुद्राणी (१०) शर्वाणी (११) सर्वमंगला (१२) अर्पणा (१३) पार्वती (१४) दुर्गा (१५) मृडानी (१६) चण्डिका (१७) अम्बिका (१८) आर्या (१९) दाक्षायणी (२०) गिरिजा (२१) मेनकात्मज (मन्नालाल, अमरकोश पृ. ६)।

काठमाडौँ उपत्यकामा पार्वतीका एक्लै उभिएका मूर्तिका साथसाथै उमामहेश्वरफलकमा सारै आकर्षक ढङ्गले कुँदिएका मूर्तिहरू प्राप्त छन् । उपत्यकाका उमामहेश्वरफलकमा सबभन्दा आकर्षक बसाइको ढाँचा नै उमाको देखिन्छ । प्राय: सम्पूर्ण उमामहेश्वरफलकमा पार्वतीको केशशृङ्गार, गहना र धोतीका बुट्टा निकै नै मेहनत गरेर बनाइएका छन् । उमामहेश्वरफलकमा शिवसँगै उमा एउटै आसनीमा, छुट्टै आसनीमा र कतै-कतै शिवकै काखमा बसेको देखाउने प्रचलन छ । प्राय: सम्पूर्ण उमामहेश्वरफलकमा शिवका चारवटा हात बनाउने चलन भएजस्तै पार्वतीका दुईवटा हात बनाइन्छन् । ती दुई हातमध्ये एउटा हात शिवको काँधमा वा तिघ्रामा अडचाएको वा अँगालो मारेको देखाइन्छ । पार्वतीको दायाँ हातमा कहिलेकाहीँ कमलको फूल पनि बनाइएको हुन्छ । अर्को हातमा सुगाचरी बसेको वा ऐना समातेको पनि देखाइन्छ । फलकमा उमातर्फका सेविकाहरू चमर, छाता र फूल लिएर उभिएको देखाइन्छ । कहिलेकाहीँ आसनबाट तल झरेको पाउ पार्वतीकी सेविकाले हातमा थामेको पनि देखाइन्छ । उमाका सेविकाहरू दुई वा चार हात भएका हुन्छन् । उमामहेश्वरफलकको आकर्षक पक्षमध्ये सेवकसेविकाहरूका प्रस्तुति पनि पर्दछन् ।

**गङ्गा** : काठमाडौँ उपत्यकाका अधिकांश उमामहेश्वरफलकमा सबभन्दा माथिल्लो खण्डमा गङ्गालाई सोझै आकाशबाट पृथ्वीमा झर्न लागेको देखाइन्छ । आकाशबाट हुत्तिँदै तलतिर झर्दाको स्वाभाविक दृश्य देखाउन कलाकारले सफलतापूर्वक मिहिनेत गरेको देखिन्छ ।

प्राणीहरूलाई चाहिने अत्यावश्यक वस्तुमध्ये हावापछि पानीकै स्थान आउँछ । पृथ्वीका सम्पूर्ण प्राणीले पानीको महत्त्व बुझेका छन् । हिमालयबाट निस्केर १५६० मिल पूर्वतिर बहेर गङ्गा बङ्गालको खाडीमा गएर झर्दछिन् । पुराणअनुसार गङ्गा हिमालयकी पुत्री हुन् । गङ्गाकी आमा भने सुमेरुकी छोरी मेना हुन् । प्राचीन समयमा पृथ्वीमा गङ्गा थिइनन्, गङ्गाको बास स्वर्गमा मात्र थियो (वायुपुराण ४२।३९–४९:७१५) । कपिलमुनिले सगरका ६०,००० पुत्रलाई गङ्गासागरमा भस्म गरे । तिनको उद्धारका लागि राजा भगीरथले तपोबलले गङ्गाजीलाई पृथ्वीमा ल्याए । त्यसैले गङ्गालाई भागीरथी पनि भनिन्छ (भागवत ९,४,१४) । स्वर्गबाट झर्दा शङ्करले जटामा धारण गरेकाले शङ्करकी पत्नी भनिन्छ (वायुपुराण ४२: ३९–४०, ७१) । आदित्य पुराणअनुसार पृथ्वीमा गङ्गावतरण बैशाख शुक्ल तृतीया र हिमालयबाट गङ्गानिर्गमन ज्येष्ठ शुक्ल दशमी (गङ्गादशहरा) मा भएको थियो ।

त्यो दिनमा स्नान गरेमा दस पाप हर्ने भएकाले दशहरा भनिन्छ । प्रमुख तीर्थस्थान हरिद्वार, प्रयाग, काशी आदि गङ्गाका सहस्र नामको उल्लेख छ । गङ्गाको भौतिक तथा आध्यात्मिक दुवै रूपको विद्वान्हरूले वर्णन गरेका छन् । गीतामा भगवान् कृष्णले आफूलाई नदीमा गङ्गा भनेका छन् । मनुस्मृति (८.२) मा गङ्गा र कुरुक्षेत्रलाई सबभन्दा ठूला पवित्र स्थान भनिएको छ । पुराणमा विष्णुको बायाँ खुट्टाको औंलाको नङबाट गङ्गाको जन्म र शङ्करको जटामै अलमलिएको वर्णन छ । राजा भगीरथले जब गङ्गालाई गङ्गासागर लिएर जाँदै थिए बाटामा जह्नु ऋषिले दिएनन्, प्रार्थना गरेपछि जाँघबाट निकाले त्यसैले गङ्गालाई जाह्नवी पनि भनिन्छ (भागवत ९,१५,३) । ब्रह्माले विष्णुको बायाँ खुट्टाको औंला धोएर गङ्गाको सृष्टि गरेका थिए, त्यसैले गङ्गालाई 'विष्णुपदी' पनि भनिन्छ । गङ्गाद्वार प्रयाग र गङ्गासागर सङ्गममा गङ्गा अत्यन्त दुर्लभ छन् । गङ्गाजल बासी भएर पनि वर्जित छैन ।

**वर्ज्यं पर्युषितं पुण्यं वर्ज्यं पर्युषितं जलम्**
**न वर्ज्यं तुलसीपत्रं न वर्ज्यं जाह्नवीजलम् ।**

गङ्गाका विभिन्न नाम छन् ती यस प्रकार छन् - विष्णुपदी, जाह्नवी, भागीरथी, त्रियथगा, सुरनिम्नगा, त्रिस्रोता, स्वरापगा, सुरापगा, अलकनन्दा, मन्दाकिनी, सुसदी, भीष्मसू ।

उमामहेश्वरफलकमा गङ्गालाई सुन्दर स्त्रीको रूपमा दर्साइन्छ । आकाशबाट तल पृथ्वीमा ऊर्दा जुन रूपको देखिन्छ, त्यसैअनुरूप गङ्गाको मूर्ति कुँदिएको हुन्छ । फलकको माथितर्फ पाउ र तलपट्टि शिर पारेर माथिबाट ऊर्दै गरेको गङ्गाको भान उमामहेश्वरफलकले दिन्छ ।

प्रारम्भका उमामहेश्वरफलकमा गङ्गाको उपस्थिति देखिँदैन । उत्तर लिच्छविकालदेखिका उमामहेश्वरफलकमा गङ्गाको मूर्ति बनाउन थालियो । फलकको सबभन्दा माथि ठीक बीचमा र कहिलेकाहीँ केही छेउमै गङ्गाको मूर्ति कुँदेको देखिन्छ । गङ्गाका चार हातमध्ये दुई हातले शिवलाई जल चढाउँदै गरेका र बाँकी दुई हातले आफ्नै ओढ्ने समातेको दृश्य उमामहेश्वरफलकको अर्को आकर्षक पक्ष हो ।

उमामहेश्वरफलकमा बाहेक गङ्गाका एकल मूर्तिहरू पनि उपत्यकामा थुप्रै प्राप्त भएका छन् । अधिकांश हिन्दू मन्दिरको मूल ढोकामाथि दायाँबायाँ गङ्गा र जमुनाका माटा, प्रस्तर, काष्ठ या धातुका मूर्ति स्थापना गर्ने चलन छ । मन्दिरको ढोकाको दायाँबायाँ पनि गङ्गा र जमुनाको मन्दिर स्थापना गरिन्छ । पशुपति प्राङ्गणमा ढुङ्गाको ब्रह्मा मन्दिर छ । मन्दिरको मूल ढोकाका दायाँबायाँ गङ्गा र जमुनाका साना, तर सुन्दर मूर्ति बनाइएका छन् । मल्लकालमा दरबारमा पूर्ण कदका धातुका गङ्गाजमुनाका मूर्ति स्थापना गरिएका छन् । मकर र कछुवामाथि उभिएका गङ्गा र जमुनाका आकर्षक मूर्तिले मल्लदरबारका चोकहरूको सुन्दरता नै बढाएका छन् । पशुपति आर्यघाटमा पनि पूर्ण कदको प्रस्तरको जमुनाको सुन्दर

मूर्ति छ। ठूलो कछुवाको ढाडमा उभिएकी जमुनाको मूर्तिको आङ्गिक अनुपात सारै मिलाएर बनाइएको छ। जोडीको रूपमा बनाइने गङ्गाजमुनाको मूर्तिमा जमुनाको मूर्ति मात्रै प्राप्त भएकाले अर्को हराएको अनुमान सहजै गर्न सकिन्छ।

काठमाडौँ उपत्यकाका अधिकांश मन्दिरका ढोकाका दायाँबायाँ गङ्गाजमुनाका मूर्तिहरू बनाइएका छन्। पशुपतिको आर्यघाटमा गङ्गामाईको मन्दिर पनि छ। मन्दिरभित्र गङ्गाको सङ्गमरमरको मूर्ति स्थापित छ। यो मन्दिर निर्माणकर्ताबारे किटान गरेर भन्ने सामग्री प्राप्त छैन। ढोकाको खापामा भने वि.सं.१९०५ मा बुद्ध गिरि बाबाले गङ्गामाई प्रीति गरेर ढोका राखेको अभिलेख छ। गोविन्द टण्डनले पशुपतिक्षेत्रको सांस्कृतिक अध्ययन नामक पुस्तकमा त्यसको उल्लेख गरेका छन् (टण्डन, २०५३ : पृ.५१२)। राणा प्रधानमन्त्री जङ्गबहादुरकी श्रीमती गङ्गादेवीले गङ्गेश्वर नामको शिवलिङ्ग स्थापना गरेकी थिइन्। यो गङ्गमाईको मन्दिर पनि सम्भवत: उनकै कृति हो। गङ्गामाईको मन्दिरबाटै हरेक वर्ष आषाढ शुक्ल सप्तमीका दिन गङ्गामाई-यात्रा प्रारम्भ गरिन्छ। यो यात्रामा हनुमानढोकाबाट ल्याएको खड्ग र लट्ठी पनि सामेल गराइन्छ। नेपालका विभिन्न जात्रामा राजाको प्रतीकस्वरूप तलबाट खड्ग, छाता समावेश गराइने चलन छ। यसरी नेपालमा गङ्गाको सम्मानमा मूर्ति, मन्दिर बनाउनुका साथै जात्राहरूको आयोजना पनि गरिएको छ।

**गणेश** : उमामहेश्वरफलकमा शिवपार्वतीका छोरा भईकन पनि गणेशले छोराको रूपमा भन्दा पनि गणपति (गणको मालिक) को रूपमा स्थान पाएको देखिन्छ। उमामहेश्वरफलककै सबभन्दा तल तीनदेखि नौवटासम्म गणहरू बनाइएका हुन्छन्। मत्स्यपुराणमा शिवका गणबारे विभिन्न श्लोक छन्। शिवले आश्रय दिएका शिवभक्तहरू गणको रूपमा देखिन्छन्। करङमात्र देखिने भृङ्गी, सिंहको मुख भएका सिंहमुख, साँढेको टाउको वा सिङ भएका नन्दी, कानमा घण्ट झुन्डयाउने घण्टाकर्ण, पेटमा मुख भएका कुम्भाण्ड आदि गणहरू गायन, वादन र नृत्यमा मग्न देखिन्छन्। शरीर मानवको र टाउको विभिन्न जनावर एवं चराचुरुङ्गीहरूको भएका यी गणहरूमध्ये गणेशले प्राय बीचमा नै स्थान ओगटेको देखिन्छ। वाद्यवादन विशेषज्ञहरूले उमामहेश्वरफलकमा गणहरूले बजाएका विभिन्न बाजाको नाम पनि उल्लेख गरेका छन् (दर्नाल, २०४४ : पृ. ४१-४२, (१) ता: (२) मृदङ्ग (३) ढक्का (ढोल) (४) बाँसुरी (५) झ्याली )। यसबाहेक शङ्ख फुकेको पनि उमामहेश्वरफलकमा देखिन्छ। उमामहेश्वरफलकमा महत्त्वपूर्ण स्थान ओगटेका गणेशको जन्मबारे पनि रोचक कथाहरू प्रचलित छन्।

सुप्रभेदागम ग्रन्थअनुसार गणेशको जन्म शिव र पार्वतीले गज र गजाको रूप लिएर जङ्गलमा विचरण गर्दा भएको थियो। वेद, पुराणमा भने गणेशको जन्मबारे यस्तो वर्णन छ– एकपल्ट पार्वतीले शरीरमा बुकुवा घस्दा निस्केको मयलले एउटा मानव आकृति बनाइन् र गङ्गामा बगाइन्, गङ्गाजल स्पर्श गर्नेबित्तिकै

त्यो सजीव भयो। पार्वतीले पुत्र भनेर बोलाउँदै वात्सल्य देखाइन्। ब्रह्माले उनलाई गणहरूको आधिपत्य प्रदान गरे।

लिङ्गपुराणमा राक्षसहरूको उपासनालाई विघ्न पुऱ्याउन देवताहरूको अनुरोधमा शिवजीको वरदानस्वरूप गणेश प्रकट भएको उल्लेख छ। शिवपुराणमै शिव आफैँले रिसाएर पुत्रको शिर छेदन गरेको र पार्वतीको अनुरोधमा पुनः जोडिएको प्रसङ्ग पनि समावेश छ। यसरी विभिन्न पुराणमा गणेशको जन्मसम्बन्धी बेग्लाबेग्लै कुराको चर्चा गरिएको छ। मनुष्य शरीर र हात्तीको टाउको भएका गणेश शिवपार्वतीका छोराका रूपमा प्रख्यात छन्। गणेशको मूर्ति उमामहेश्वरफलकमा सबभन्दा तल्लो खण्डमा, बीचमा वा अन्यत्र पनि बनाइने परम्परा छ। लामो सुँड भएको हात्तीको टाउको, ठूलो पेट र नाङ्लोजत्रो कान बनाउनु गणेशको मूर्तिको विशेषता हो।

काठमाडौँ उपत्यकामा प्राप्त उमामहेश्वरफलकको तल्लो खण्डमा बनाइने गणेशको मूर्ति प्रायः नृत्यमुद्रामा देखिन्छ। तर पनि साँखु बजारभन्दा पूर्वमा रहेको उमामहेश्वर मूर्तिफलकमा बसेका गणेशको मूर्ति छ। राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित उमामहेश्वरफलकमा पनि गणेशलाई बसेको देखाइएको छ। गुणकामदेवको ने.सं. १०७ (वि.सं. १०४४) मिति भएको क्वाबहालको उमामहेश्वर मूर्तिमा भएका गणेश पनि महाराजलीला आसनमा आसीन छन्। यसै गरेर पाटन, गहिटीमा रहेको उमामहेश्वरफलकका गणेश पनि महाराजलीला आसनमा रहेका छन्।

काठमाडौँ उपत्यकामा प्राप्त उमामहेश्वर मूर्तिफलकमा गणहरू बनाउने चलन लिच्छविकालको अन्त्यतिर प्रारम्भ भएको देखिन्छ। प्राचीन उमामहेश्वर मूर्तिफलकमा शिवपार्वती र नन्दीबाहेक परिवारका अन्य सदस्य समावेश छैनन्। उमामहेश्वर मूर्तिफलकमा समयको विकाससँगसँगै परिवारका सदस्यहरू थपिँदै गएको देखिन्छ। अठारौँ-उन्नाइसौँ शताब्दीपछि भने उमामहेश्वरफलकमा गणहरू बनाउने चलन कम हुँदै गयो।

नारदपुराणमा गणेशका निम्न नाम उल्लेख छन्- (१) वक्रतुण्ड (२) एकदन्त (३) महोदर (४)गजवक्त्र (५) लम्बोदर (६) विकट (७) विघ्नराज (८) धूम्रवर्ण (९) भालचन्द्र (१०) विनायक (११) गणपति (१२) गजानन।

यी गणमध्ये गणपति नामअनुसार गणेशलाई उमामहेश्वरफलकमा सबभन्दा तल गणहरूको मालिकको रूपमा देखाइन्छ।

**कुमार** : उमामहेश्वरफलकमा देखिने अर्को शिवपरिवारका सदस्य हुन् कुमार। बालसुलभ चरित्र देखाउने ढङ्गले यिनको मूर्ति कुँदिएको हुन्छ।

पुराणहरूमा कुमारको जन्मबारे बेग्लाबेग्लै प्रसङ्गको व्याख्या गरिएको छ। कुमारलाई शिव, गङ्गा, अग्नि, स्वाहा, कीर्तिका आदि विभिन्न देवदेवीहरूका पुत्रको रूपमा रामायण, महाभारत, पुराण, मेघदूत, रघुवंश, कुमारसम्भव आदि ग्रन्थमा उल्लेख गरिएको छ। उनका विभिन्न गुणले गर्दा उनका बाबुआमा हुन धेरै देवदेवीले रहर गरेको देखिन्छ।

अठारवटा पुराणमध्ये स्कन्दपुराण पनि एउटा हो । स्कन्दपुराणको चारौं शताब्दी इ. को प्रतिलिपि प्राप्त छ (हरिनन्दन, १९६१ : पृ. ७)। नेपालको राष्ट्रिय अभिलेखालयमा रहेको ताडपत्रमा लिखित स्कन्दपुराण सातौं शताब्दी इ. को मानिन्छ (ओझा, १९७५ : पृ. १४३)।

वैदिककालमा इन्द्र युद्धका देवता, सेनापतिको रूपमा पूजित भएजस्तै महाकाव्य र पुराणकालमा कार्तिकेय युद्धका देवताको रूपमा वर्णित छन् । तारकासुरले पाँच वर्षभन्दा कमको बालकले मार्न सक्ने वरदान पाएपछि विश्वमा हाहाकार मच्चियो । त्यसैले तारकासुर मार्न शिव र पार्वतीको छोराको रूपमा कुमारको जन्म भएको कुरा पुराणमा वर्णन छ ।

युद्धका देवताको रूपमा चिनिने कुमार शिवको वाहन नन्दीका टाउकामा बसेर सिङ खेलाउँदै गरेको वा नन्दीसँगै बसेको वा आफ्नै वाहन मयूरमा चढेको रूपमा उमामहेश्वरफलकमा देखाइन्छ । कुमारले चञ्चले पाराले घुँडा छोएको, चलाएको भान पार्न नेपाली कलाकार सफल भएको देखिन्छ । पाटन, गहिटीमा रहेको एउटा उमामहेश्वरफलकमा उभिएका कुमारले आफ्नो दायाँ हातले मयूर र देब्रे हातले शिवको घुँडा चलाउँदै गरेको देखाइएको छ । त्यसै गरेर काठमाडौंका अन्य केही उमामहेश्वरफलकमा पनि बसेका कुमारले शिवको घुँडा समातिराखेको देखाइएको छ । भक्तपुर, नसमानटोलको उमामहेश्वरफलकमा भने ललितासनमा बसेका कुमारको दायाँ हातमा भाला र देब्रे हातले वाहन मयूरलाई कुखुरो समातेझैं समातेका छन् । यसरी उपत्यकाका उमामहेश्वर मूर्तिफलकको एउटा मुख्य विशेषताको रूपमा कुमारको प्रस्तुतिलाई लिन सकिन्छ ।

काठमाडौं उपत्यकाबाहेक नेपाल अधिराज्यमा अन्यत्र पनि उमामहेश्वरफलक छन् । ती मूर्तिफलकका मोटामोटी विशेषता उस्तै खालकै भए पनि केही नौला विशेषता भने छन् । बारा जिल्लाको सदरमुकाम कलैयाबाट २२ किलोमिटर दक्षिणपूर्वमा सिमरौनगढ पर्दछ । त्यहाँको कङ्कालीमाई मन्दिरमा अनुहार फुटेको भए पनि अन्य कलाकृति सुन्दर भएको एउटा उमामहेश्वरफलक छ । त्यो फलकमा सबभन्दा तल्लो खण्डमा तीन जना गणहरू, फलकको दायाँ कुनामा गणेश, बीचमा भृङ्गी र बायाँ कुनामा कुमारका सुन्दर मूर्ति कुँदिएका छन् । काठमाडौं उपत्यकामा कुँदिएका उमामहेश्वरफलकमा कुमार सधैं मूर्तिको बीच खण्डमा देखाइन्छन् । त्यहाँ सिमरौनगढमा भने सबभन्दा तल गणको स्थानमा कुँदिएका छन् ।

**नन्दी** : शिवको वाहन र गणका रूपमा नन्दीको परिचय पाइन्छ । ऋषि शिलादका छोराको रूपमा जन्मिएका नन्दीको उल्लेख शिवपुराणमा छ । नन्दीले शिवको आराधना पवित्र मनले गरेपछि अल्पायु हरेर शिवद्वारा नै बुढेसकालले नछुने वर प्राप्त गरेको वर्णन शिवपुराणमा छ । नन्दीसँग प्रसन्न भएर शिवले उनलाई आफ्नो गणमा पनि सामेल गरे । नन्दी (पशु) उपासकको प्रतीक हो । शिव

भगवान्‌को कृपाबाट भएको सांसारिक बन्धन काटिन्छ भन्ने भाव झल्काउन नै नन्दीको स्थापना शिव मन्दिरमा गरिन्छ । नन्दीको चित्र र मूर्ति बनाउँदा (क) सम्पूर्ण पशु रूपमा, (ख) शिर नन्दीको र शरीर दुई सिङ बनाउने नियम छ ।

नन्दीको १ भृङ्गी, २ भृङ्गी, ३ रिटी, ४ तुण्डी, ५ नन्दिक, ६ नन्दकेश्वर आदि विभिन्न नामहरू अमरकोषमा उल्लेख गरिएको छ । रूपमण्डनमा नन्दीसहित अष्टप्रतिहारको वर्णन छ । १) नन्दी २) महाकाल ३) हेरम्ब ४) भृङ्गी ५) दुर्मुख ६) पाण्डुर ७) सित ८) असित । शिवका अष्टप्रतिहारको स्थिति र आयुधको वर्णन पनि रूपमण्डनमा गरिएको छ । पूर्व दिशामा नन्दीको मूर्ति स्थापना गर्नुपर्छ र हातमा विभिन्न आयुध मातुलिङ्ग, नागेन्द्र, सर्प, डमरु र वीजपुरक बनाउनुपर्दछ । नन्दीलाई मानवस्वरूपमा देखाउँदा तन्दुरुस्त चार हात, तीन आँखा, सिन्दूरको जस्तो रातो वर्ण भएका,व्याघ्रचर्म लगाएका, चार हातमा त्रिशूल र भिन्दिपाल (एक प्रकारको अस्त्र), एउटा हात शिरमा र दोस्रो तर्जनीमुद्रामा हुनुपर्ने नियम बताइएको छ ।

**नन्दी कार्यस्त्रिनेत्रस्तु चतुर्बाहुर्महाभुजः ॥१५॥**
**सिन्दूरारुणसङ्काशो व्याघ्रचर्माम्बरच्छदः**
**त्रिशूलभिन्दिपालौ च करयोस्तस्य कारयेत् ॥१६॥**
**शिरोगतं तृतीयन्तु तर्जयन्तं तथा परम् ॥**
**आलोकमानं कर्तव्यं दूरादागामिकं जनम् ॥१७॥**
(वि.ध. तृ.खं. अ. ७३, १५-१७)

जीतेन्द्रनाथ बनर्जीले नन्दीलाई शिवको वाहनको रूपमा भन्दा गणको रूपमा प्रस्तुत गरिन थालेको र नन्दी, नन्दीश्वर, अधिकारनन्दीजस्ता नाम पुराण र महाकाव्यमा संशोधन गरिन थालेपछि यसमा वृद्धि भएको कुरा बताएका छन् (बनर्जी, १९८५ : पृ.५३५) । नन्दीको स्थापनाबिना शिवको पूजा नै अधुरो मानिन्छ । नन्दीलाई शिव मन्दिरको सामुन्ने पशुवाहनको रूपमा, उमामहेश्वरफलकमा गणको रूपमा र वृषवाहन शिव मूर्तिमा वाहकको रूपमा देखाइन्छ । अधिकांश उमामहेश्वरफलकमा शिवको ढाडपछाडि ठूलो जुरो भएको नन्दी बनाइन्छ । नन्दीको घाँटीमा बसेका फुच्चे कुमारले सिङ समात्दै खेलेको रमाइलो दृश्य पनि उमामहेश्वरफलकमा दर्साइन्छ (पौड्याल, २०५७ : पृ.८४) ।

**भृङ्गी** : शिवपरिवारका महत्त्वपूर्ण सदस्यको रूपमा भृङ्गीको उल्लेख पाइन्छ । शिवका अगाध भक्त अन्धक राक्षसले घनघोर तपस्या गरेर भृङ्गीको रूपमा जन्म लिएको वर्णन शिवपुराणमा छ । शिवको भक्तिमा मात्र भृङ्गी यति तल्लीन थिए कि सँगै बसेकी पार्वतीलाई पनि परिक्रमा गर्दैनथे । एकपल्ट पार्वती भृङ्गीको परीक्षा लिन कस्सिइन् । शिवको पूजाआराधना गर्न भृङ्गी तरखर गर्दै थिए । पार्वती शिवसँग एकाकार भएर अर्धनारीश्वर रूपमा प्रकट भइन् । भृङ्गी पनि सम्झौता गर्ने पक्षमा थिएनन् । तुरुन्तै एउटा कीराको स्वरूप लिएर शिवपार्वतीमध्ये शिवतर्फको दायाँ भाग मात्रै परिक्रमा गरे । पार्वतीलाई सही नसक्नु रिस उठ्यो । रीसले पार्वतीले

भृङ्गीको शरीरमा हेरिन् । पार्वतीको आँखाको ज्वालाले भृङ्गीको शरीरको मासु गलेर झर्न थाल्यो । हाडछाला मात्रै बाँकी भएपछि भृङ्गीले शरीरको सन्तुलन मिलाउन सकेनन् । भृङ्गी लड्न लागेको देखेर शिवलाई सारै माया लाग्यो र तेस्रो पाउ प्रदान गरे । तेस्रो पाउ पाएपछि भृङ्गी नाच्न, गाउन थाले । यसरी उमामहेश्वरफलकमा करङ मात्र देखिएका भृङ्गीलाई प्रसन्न भएर नाच्न, गाउन लागेको देखाइन्छ । एउटै उमामहेश्वरफलकमा तीन पाउ भएका र दुब्लापातला भृङ्गी कुँद्ने प्रचलन पनि काठमाडौँ उपत्यकामा छ । पाटन, कुम्भेश्वर र गहिटीको उमामहेश्वरफलकको तल्लो खण्डमा कुँदिएका भृङ्गीको मूर्ति उत्कृष्ट कलाको एउटा नमुना हो । पाटन, सुनागुठीमा रहेको भृङ्गारेश्वर शिवलिङ्गको भृङ्गीसँग सम्बन्ध रहेको अनुमान गर्न सकिन्छ । भीमार्जुनदेव र विष्णु गुप्तको संवत् ६५ र शिवदेवको संवत् १२१ को अभिलेख त्यस क्षेत्रमा प्राप्त भएबाट त्यो मूर्ति त्यस भेगको प्राचीनतम प्रमाणित हुन्छ । नेपाल महात्म्यमा पनि भृङ्गीको वर्णन गरिएको छ ।

एकपल्ट शिवले पार्वतीलाई दर्शनसम्बन्धी ज्ञान प्रदान गर्दै हुनुहुन्थ्यो । भृङ्गीलाई सुन्न मन लागेकाले मौरीको स्वरूपमा परिवर्तन भएर लुकेर ज्ञानका कुरा सुने । शिवले उनको फटचाइँ थाहा पाएपछि पृथ्वीलोकमा ब्राह्मणको रूपमा जन्मने श्राप दिए । यसरी भृङ्गी गुणध्याय नामक ब्राह्मणको रूपमा जन्मिए । गुणध्याय (भृङ्गी) ले नौ लाख कथाहरू लेखेपछि पापबाट मोचन भएको उल्लेख पनि नेपाल महात्म्यमा छ । 'बृहत्खण्ड' नामक यो ग्रन्थ रामायण र महाभारतजति नै महत्त्वपूर्ण छ । वेतामा मनीले बृहत्खण्ड नामक ग्रन्थ क्षेमेन्द्रले बृहत्कथामञ्जरी नामकरण गरेर सम्पूर्ण कथा संस्कृत भाषामा उल्था गरेको कुरा बताएका छन् (मनी, १९९३: पृ.३०) । यस्तै जोशीले यो ग्रन्थ पूरा गरेपछि गुणध्याय विभिन्न ठाउँमा तीर्थयात्रा गर्न गएको वर्णन गरेका छन् । तीर्थयात्राकै क्रममा उनी नेपाल पनि आएको बुझिन्छ । उनले सुनागुठीमा पूर्वजन्मको आफ्नै नाम भृङ्गीबाट भृङ्गारेश्वर शिवलिङ्ग स्थापना गरेको अनुमान गर्न सकिन्छ (जोशी, १९९ सम्पादकीय) । शिवपुराणमा भृङ्गीको पूर्वजन्मको कथा पनि प्रस्तुत छ । शिव र पार्वती एकपल्ट मन्दराचल पर्वतमा गएर रमाइलो, हाँसखेल गर्न थाले । पार्वतीले ठट्टैठट्टामा शिवको आँखा छोपिन् । शिवको आँखाको रापले पार्वतीको हातबाट पसिना आयो र त्यो पसिनाबाट एउटा डरलाग्दो जीवको जन्म भयो । अन्धो, कुरूप, जटाधारी, कृष्णवर्णको त्यो बच्चालाई शिवले अन्धक नामकरण गरे । शिवको अनुरोधमा अन्धकलाई पुत्ररूपमा पार्वतीले पाल्न थालिन् । हिरण्याक्ष राक्षसले पुत्रप्राप्तिका लागि घनघोर तपस्या गरेको थाहा पाएपछि शिवले अन्धकलाई नै पुत्रको रूपमा दिए । अन्धकले तपस्या गरी शिवका १०८ वटा नाम जपेपछि शिवको गणको दर्जा प्राप्त गरे । स्टेला क्र्यामरिसले अन्धक नै अर्को जन्ममा भृङ्गी भएर जन्मेको उल्लेख गरेकी छन् (स्टेला, १९८१ : पृ.३७९) ।

# दोस्रो खण्ड

## अध्याय : सात

# काठमाडौं उपत्यकाका प्रमुख भैरव मूर्तिहरूको चर्चा

### भैरव

शिवको पूर्णरूपको झलक नै भैरव हो भनेर शिवपुराणमा भनिएको छ । नेपालमा शिवका संहार मूर्तिहरूमध्ये भैरवका मूर्ति सबैभन्दा बढी प्राप्त छन् । शिवको एउटा नाम भैरव हो । प्रारम्भिक अवस्थामा भैरव शब्द त्रिदेवमा अन्तिम देवता शिवको वाचक रूपमा थियो । शब्दको हिसाबले भैरव शब्द प्राचीन भए पनि पूजापद्धति र मूर्तिहरू भने नयाँ नै हुन् । राजवली पाण्डेका अनुसार भैरवको ग्रामीण रूप नै भैरो हो । यिनी मुख्यत: कृषकका देवता हुन् । भैरवको पूजा वाराणसी तथा बम्बईमा र उत्तर तथा मध्यभारतका किसानहरूमा प्रचलित छ । मध्यभारतमा कम्मरमा सर्प बेरेको मृदङ्गवादकको रूपमा वा एउटा रातो ढुङ्गामा दूध चढाएर भैरवको पूजा गर्ने परम्परा छ । सहरमा भने रक्सी चढाएर भैरवको पूजा गरिन्छ (पाण्डे, १९७८ : ४८२) । भारतको कुमाउँ, गढवालमा भैरवलाई भैर (भैंरो) भनिन्छ । नेपालमा पनि नेवार भाषामा भैल द्यो भनिन्छ । पशुपतिको प्राङ्गणस्थित कीर्तिमुखभैरवलाई प्रत्येक महिना पूर्णिमामा बलि चढाइन्छ । मत्स्येन्द्रनाथलाई कामरूपबाट नेपाल ल्याउँदा चार जना भैरवहरू इथाह्यग्राभैरव, हरसिद्धिभैरव, त्याङ्ग्राभैरव तथा लुतावाहाभैरवहरूले बोकेर ल्याएको कुरा पनि स्मरणीय छ (जोशी, अप्रकाशित लेख) । अग्निपुराणमा भैरवको जन्म र उनले श्रापको रूपमा रूख हुनुपरेको घटनाको उल्लेख छ । भैरवले जन्मनेबित्तिकै शिवको आज्ञाबिना सम्पूर्ण देवताको वध गरे, त्यसैले शिवले वृक्ष हुने श्राप दिए । देवतालाई दमन गरेको हुनाले दमनक नामको रूखमा परिणत भए । अझै पनि दमनक (तातिरी) रूखको पूजा गर्ने चलन भारतमा छ । आफ्नो स्वरूप भैरवलाई श्राप दिएपछि, तुरुन्तै शिवले आशिष पनि दिए । क्षेत्रपालको रूपमा महाभैरव भनेर पूजा पाउने वर दिए । यसरी भैरवको उत्पत्तिबारे शिवपुराणमा वर्णन पाइन्छ ।

वैदिक कालमा भयावह रूपमा चिनिने रुद्र देवताको बिस्तारै स्वभाव परिवर्तन हुँदै गएर सौम्य शिव, महादेव, भोलेनाथ भनेर चिनिए पनि उनको रौद्र रूप लुप्त

भने हुन सकेन । त्यही रुद्रकै परिवर्तित रूपमा भैरवलाई लिन सकिन्छ । यही प्रसङ्गलाई विद्वान् डा. यदुवंशीले यसरी व्यक्त गरेका छन्– आफ्नो उग्र रूपमा शिवलाई क्रूर, भयावह र महाविनाशकारी देवता मानी चण्ड, भैरव, महाकाल इत्यादि उपाधि दिइएको छ । यदुवंशीले शैव सम्प्रदायका स्रोतका रूपमा कृष्ण मिश्रको 'प्रबोधचन्द्रोदय' नाटकको प्रसङ्ग उल्लेख गरेका छन्, जसअनुसार नाटकको एउटा पात्र कापालिक र उपासनाविधिमा एउटा प्रमुख क्षेत्र नरबलिको पनि उल्लेख छ । भक्तहरूले शिवलाई भैरवका रूपमा पूजा गर्दथे र नरबलिका विभिन्न अङ्ग भैरवलाई चढाउँथे (यदुवंशी, १९५५ : ९५) ।

विभिन्न तन्त्रसाहित्यमा शक्तिपीठहरूको नाम उल्लेख गरिएको छ । विभिन्न ग्रन्थमा भने शक्तिपीठका नाम फरकफरक छन् । श्रीमद्देवीभागवतमा भने शक्तिपीठको सङ्ख्या १०८ तोकिएको छ । तन्त्रचूडामणिमा भने सतीदेवीको कथाका साथै पीठहरूको नाम पनि उल्लेख छ । दक्षप्रजापतिले धूमधामसँग गरेको यज्ञमा छोरी सतीदेवीले आफ्ना पति महादेवको अपमान भएपछि अग्निकुण्डमा हामफालेर ज्यान फालिन् । अग्निले शिवको डरले सतीको शरीर जलाउन भने आँट गरेनन् । पत्नीको विछोडमा विह्वल भएका शिवले सतीको शव बोकेर पृथ्वीका विभिन्न भागको भ्रमण गर्न थाले । पालनकर्ता विष्णुले सुदर्शनचक्रद्वारा सतीको शरीर टुक्राटुक्रा पारे । विभिन्न स्थानमा सतीका बेग्लाबेग्लै अङ्गहरू खसे र एकएक शक्तिपीठ उत्पन्न भएर त्यस ठाउँमा एकएक भैरव रूप पनि रहन थाले । तन्त्रचूडामणिमा उल्लेख भएअनुसारका स्थान, अङ्ग, शक्तिपीठ र भैरव यस प्रकार छन् :

| क्र.सं. | स्थान | अङ्ग | शक्तिपीठ | भैरव |
|---|---|---|---|---|
| १. | हिङ्गुला | ब्रह्मरन्ध्र | कोट्टविशा | भीमलोचन |
| २. | शर्करार | तीन चक्षु | महिषमर्दिनी | क्रोधीश |
| ३. | सुगन्धा | नासिका | सुनन्दा | त्र्यम्बक |
| ४. | काश्मीर | कण्ठदेश | महामाया | त्रिसन्धेश्वर |
| ५. | ज्वालामुखी | जिह्वा | सिद्धिदा | उन्मत्तभैरव |
| ६. | जालन्धर | स्तन | त्रिपुरमालिनी | भीषण |
| ७. | वैद्यनाथ | हृदय | जयदुर्गा | वैद्यनाथ |
| ८. | नेपाल | जानु | महामाया | कपाली |
| ९. | मानस | दक्षिणहस्त | दाक्षायणी | अमर |
| १०. | एत्कल(विरजा क्षे.) | नाभि | विमला | जगन्नाथ |
| ११. | गण्डकी | गण्डस्थल | गण्डकी | चक्रपाणि |
| १२. | बहुला | वामबाहु | बहुलादेवी | भीरुक |
| १३. | उज्जयिनी | कूर्पर | मङ्गलचण्डी | कपिलाचर |
| १४. | त्रिपुरा | दक्षिणपाद | त्रिपुरसुन्दरी | त्रिपुरेश |
| १५. | चहल | दक्षिणबाहु | भवानी | चन्द्रशेखर |

| | | | | |
|---|---|---|---|---|
| १६ | त्रिस्रोता | वामपाद | भ्रामरी | भैरवेश्वर |
| १७. | कामगिरी | योनिदेश | कामाख्या | उन्माद |
| १८. | प्रयाग | हस्ताङ्गुलि | ललिता | भव |
| १९. | जयन्ती | वामजङ्घा | जयन्ती | क्रमदीश्वर |
| २०. | युगाधा | दक्षिणाङ्गुष्ट | भूतधात्री | क्षीरखण्डक |
| २१. | कालीपीठ | दक्षिणपादाङ्गुलि | कालिका | नकुलीश |
| २२. | किरीट | किरीट | विमला | संवर्त |
| २३. | वाराणसी | कर्णकुण्डल | विशालाक्षी (मणिकर्ण) | कालभैरव |
| २४. | कन्याश्रम | पुष्ट | सार्वाणी | निमिष |
| २५. | कुरुक्षेत्र | गुल्फ | सावित्री | स्थाणु |
| २६. | मणिबन्ध | दुई मणिबन्ध | गायत्री | सर्वानन्द |
| २७. | श्रीशैल | ग्रीवा | महालक्ष्मी | शम्बरानन्द |
| २८. | काँची | अस्थि | देवगर्भा | रूरू |
| २९. | कालमाधव | नितम्ब | काली | असिताङ्ग |
| ३०. | शोणदेश | नितम्बक | नर्मदा | भद्रसेन |
| ३१. | रामगिरि | अन्यस्तन | शिवानी | चण्डभैरव |
| ३२. | वृन्दावन | केशपाश | उमा | भूतेश |
| ३३. | शुची | ऊर्ध्वदन्त | नारायणी | संहारभैरव |
| ३४. | पञ्चसागर | अधोदन्त | वाराही | महारुद्र |
| ३५. | करतोया तट | तल्प | अर्पणा | वामनभैरव |
| ३६. | श्रीपर्वत | दक्षिणगुल्फ | श्रीसुन्दरी | सुन्दरानन्द |
| ३७. | विभाष | वामगुल्फ | कपालिनी | सर्वानन्द |
| ३८. | प्रभास | उदर | चन्द्रभाग | वक्रतुण्ड |
| ३९. | भैरव पर्वत | ऊर्ध्वोष्ट | अवन्ती | लम्बकर्ण |
| ४०. | जन्मस्थल | च्यूँडो | भ्रामरी | विकृताक्ष |
| ४१. | सर्वशैल | वामगण्ड | राकिनी | वात्सनाभ |
| ४२. | गोदावरी तिर | गण्ड | विंश्वेशी | दण्डपाणि |
| ४३ | रत्नावलि | दक्षिणस्कन्ध | कुमारी | शिव |
| ४४. | मिथिला | वामस्कन्ध | उमा | महोदर |
| ४५. | नलहाटी | नलीखुट्टा | कालिका | योगेश |
| ४६. | कर्णाट | कर्ण | जयदुर्गा | अभीरु |
| ४७. | वक्रेश्वर | मन | महिषमर्दिनी | वक्रनाथ |
| ४८. | यशोर | पाणिपद्म | यशोरेश्वरी | चण्ड |
| ४९. | अट्टहास | ओष्ठ | फुल्लरा | विश्वेश |
| ५०. | नन्दीपुर | कण्ठहार | नन्दिनी | नन्दिकेश्वर |

| ५१. | लङ्का | नुपूर | इन्द्राक्षी | राक्षसेश्वर |
|---|---|---|---|---|
| ५२. | विराट | पादाङ्गुलि | अम्बिका | अमृत |
| ५३. | मगध | दक्षिणजिह्वा | सर्वानन्दकरी | व्योमकेश |

तन्त्रचूडामणिमा ५३ शक्तिपीठको उल्लेख भएजस्तै देवीभागवतमा १०८ पीठहरूको उल्लेख छ । यी दुवै ग्रन्थमा नेपालका शक्तिपीठको भने उल्लेख छैन । यसको कारण स्थानको नाम परिवर्तन भएर पनि हुन सक्छ । विद्वान् कुलचन्द्र कोइरालाले यसै प्रसङ्गमा नेपालका विषयमा पीठदेवताका सङ्केतहरू तान्त्रिक साहित्यमा प्रशस्त भएको उल्लेख गर्दै शक्तिसङ्गमतन्त्र, तन्त्रचूडामणि, मेरुतन्त्र आदिको नाम पनि उल्लेख गर्नुभएको छ । मेरुतन्त्रमा सतीदेवीको अङ्गपतन भएका पीठहरूको निर्देशन गर्दा भनिएको श्लोक पनि उद्धृत गरिएको छ (कोइराला, २०५१:२५६-२६२) :

**अकार: कामरूपाख्यमादिपीठं तदुच्यते**
**यस्मिन् पीठे मयादेवि कुलमार्ग प्रवर्तित : ।**
**तत्रते पतिता योनिस्तांदृष्ट्वा तत्प्रियं कृतम् ॥**
**आकार काशिका पीठं**...............
**नेपालं तु इकारस्यात् गुह्यं तत्रतु पार्वती**
**तस्मात्वामस्य मार्गस्य मूलस्थानं तदुच्यते ॥**
**षड् पञ्चाशल्लक्षमिता भैरव्यो भैरवास्तथा**
**शक्तीनां च सहस्रे द्वे पीठानाञ्च शतत्रयम् ॥**

अकाररूप कामरूप पीठ हो, जहाँ मैले हे पार्वती ! कुलमार्गको प्रवर्तन गरेँ । जहाँ सतीको योनि पतन भएको थियो, त्यो देखेर उनको प्रिय हुने कौल मार्गको प्रवर्तन गरे ।

काशी आकाररूप पीठ हो.........

इकाररूप नेपालको पीठ हो, जहाँ गुह्यभाग पतन भएको थियो । अत: यो मार्ग (वाममार्ग) को मूल स्थान नेपालको गुह्येश्वरी पीठलाई भनिन्छ, जहाँ छपन्न लाख सङ्ख्यामा भैरवी र भैरवहरू निवास गर्दछन् । त्यस्तै त्यहाँ तेइस सय शक्तिका पीठहरू छन् (कोइराला,२०५१:२६२) ।

यसरी विभिन्न धार्मिक ग्रन्थका आधारमा रुद्रको भैरव रूपमा र शक्तिपीठको सम्बन्धमा धेरै कुरा प्रस्ट हुन्छ । नेपालका विभिन्न मन्दिरमा प्राप्त शिलालेखहरूका आधारमा भैरवका विभिन्न नाममध्ये एउटा नाम भीमसेन पनि हो भन्ने कुरा प्रस्ट हुन्छ । कीर्तिपुरस्थित बाघभैरवको एक अभिलेखमा (ने.सं. १०७) उक्त भैरवलाई भीमसेनको संज्ञा दिइएको छ । संस्कृतिविद् हरिराम जोशीले पनि आफ्नो अनुसन्धानको क्रममा भैरवको एक नाम भीमसेन रहेको कुरा प्रस्ट पार्नुभएको छ (जोशी, २०४०:७२) ।

काठमाडौं उपत्यकामा रहेका प्रसिद्ध मठमन्दिरहरूमध्ये भैरवलाई महत्त्व दिएर पूजाआजा सम्पन्न गरिने मन्दिर पनि थुप्रै छन् । काठमाडौं उपत्यकाजस्तै वाराणसीमा पनि प्रसिद्ध तीर्थस्थलहरूमा भैरवपीठको ठूलो महत्त्व छ ।

काशीबाहेक काठमाडौँ उपत्यकामा भैरवको विशेष पूजाआजा र जात्रा हुने स्थानमा भक्तपुर पर्दछ । भक्तपुरलाई भैरवको विशेष स्थानको रूपमा लिन सकिन्छ । जीतबहादुर मानन्धरले भक्तपुरलाई त भैरवप्रधान नगर नै हो भनेर वर्णन गर्नुभएको छ । भक्तपुरका टोलटोलमा भैरवका थुप्रै ठूला-साना मन्दिर र पीठहरू दर्शन गर्न सकिन्छ । मानन्धरले चोखाछेँ गल्लीनिवासी एक जना राजोपाध्यायलाई उद्धृत गर्दै काठमाडौँका विभिन्न टोलमा रहेका भैरवहरूको नाम प्रस्तुत गर्नुभएको छ, जुन यस प्रकार छ– असनमा अल भेलु, केलटोलमा ललु भेलु, इन्द्रचोकमा अजा भेलु, किलागल टोलमा लंका भेलु र कमलाछी टोलमा से भेलु, नरदेवी टोलमा नेत भेलु, कुलामटीमा कोठा भेलु, ज्याठा टोलमा मिं भेलु । यीबाहेक मानन्धरजीले तीर्थलाल ना: द्य: भनिएको कोलिग्राम (कान्तिपुर) केही अध्ययन नामक लेख पनि उद्धृत गर्नुभएको छ । त्यसअनुसार असंभेलु, किसि भेलु, लुचु भेलु, वैद्य: भेलु, मांव भेलु, मदु भेलु, कुलो भेलु, इखा भेलु, क्वाद्वं भेलु, थेहिटी भेलु, ज्याथा भेलु र त्यौड भेलु ।

यहाँ उल्लेख भएका केही भैरवहरूको अस्तित्व भेट्टिएको पनि छ । काठमाडौँ नगरको दक्षिणतर्फ नेपालराजालाई नै खड्गसिद्धि प्रदान गर्ने पचलीभैरव भने नगरको दक्षिणभेगकै क्षेत्रपाल एवं अधिपति भएर रहेका छन् । दक्षिणका भैरव भनी यिनको प्रसिद्धि र जात्राको विशेष महत्त्व छ ।

## पशुपतिको उन्मत्तभैरव

प्रसिद्ध पशुपति मन्दिरको दक्षिणतर्फ रहेको भव्य नयाँ मन्दिरमा उन्मत्तभैरवको मूर्ति स्थापना गरिएको छ । पशुपति मन्दिरक्षेत्रमा भएको शिलालेखअनुसार यो भैरव मूर्ति नारायण भट्टले स्थापना गरेका थिए । ने.सं. ५८८ (इ.सं. १४६७) मा निर्मित धातुको यो मूर्ति १० फिट अग्लो छ ।

नेपालमा धातुका मूर्ति दुई प्रकारले बनाउने चलन छ- १. मैन पगाल्ने विधि, २) धातुको पाता पिटेर मैन पगाल्ने विधि । मैन पगाल्ने विधिमा मैनका ढाँचा बनाएर माटो र भुसले लेपन गर्ने, घाममा सुकाएपछि तरल धातु एकापट्टि मात्र खुला राखिएको प्वालबाट खन्याइन्छ र सोलो फुटाएपछि धातुको मूर्ति तयार हुन्छ । पाता पिटेर बनाउने विधिमा मैनको आकार बनाइन्छ । त्यसमाथि धातुका पाता ओछ्याएर हथौडाले पिटेर आकार निकालिन्छ । पशुपतिको उन्मत्तभैरवको मूर्ति पनि तामाको पाता पिटेर बनाइएको हो ।

नारायण भट्टले उन्मत्तभैरवको मूर्ति स्थापना गरेपछि (ने.सं ५९१) इ.स. १४७७) मन्दिरलाई तीनवटा गजुर चढाएको वर्णन टण्डनले पनि गरेका छन् (टण्डन, २०५३ : पृ.४५७) ।

हालका पुजारी रवि कर्माचार्य (वर्ष ३२) ले २०४७ सालमा मूल भट्ट रावल श्री पद्मनाभ शास्त्रीको समयमा स्व.श्री ५ वीरेन्द्र र स्व.ऐश्वर्यबाट पूजाअर्चना गरेको उल्लेख गरे । त्यससम्बन्धी शिलापत्र पनि मन्दिरभित्रै स्थापित छ ।

उन्मत्तभैरवको मूर्तिमा एक शिर, दश बाहु र दुई पाउ बनाइएको छ । बाहु

विभिन्न आयुध शूल, तरबार, कपालपात्र, डमरु, खट्वाङ्ग, पाश, नरमुण्ड लिएका एवं अभयमुद्रा र बिन्दुमुद्रामा देखाइएको छ । अरू भैरव मूर्तिजस्तै यस भैरव मूर्तिले पनि सर्पमाला र मुण्डमाला लगाएको छ । ठूलाठूला त्रिनेत्र, फिँजारिएको आँखीभौं, फुलाएको नाक, ठूलो पेट, ऊर्ध्व रूपमा देखाइएको पुरुषचिह्न र मुण्डमालाले मूर्ति डरलाग्दो देखिन्छ । भैरवको दायाँ पाउ बेतालमा र देब्रे पाउ गुँडुल्किएको नागआसनमा देखाइएको छ ।

हिन्दू तान्त्रिक विधिले उन्मत्तभैरवको दैनिक पूजा, आरती गरिन्छ । सन्तानको कामनाले गरिएको यिनको पूजाले भाकल पूरा हुने विश्वास अधिकांश भक्तजनहरूको रहेको छ ।

दस फिट अग्लो धातुको यो भैरवको मूर्ति सुन्दर कलाकृति र भयावह स्वरूपले गर्दा चर्चामा छ । पूर्वमा तत्पुरुष, पश्चिममा सद्योजात, उत्तर वामदेव, दक्षिण अघोर र बीचमा ईशान आदि शिवका पाँच मुख छन् । शिवलिङ्गको दक्षिण मुख अघोर हो, जसलाई भैरवस्वरूप मानेर पूजा गरिन्छ । पशुपतिमा भने दक्षिणतर्फ कीर्तिमुखभैरव र उन्मत्तभैरवको मूर्ति नै स्थापना गरिएका छन् । सन्तानको कामनाले पूजा गर्ने भक्तजनको घुइँचो उन्मत्तभैरवको सुन्दर मन्दिरमा देखिन्छ ।

**भक्तपुर, सदाशिवचोकका भैरवहरू**

भक्तपुरको प्रसिद्ध सुनौलो ढोकाबाट भित्र प्रवेश गरेपछि भैरवचोक आउँछ । संरक्षण र सुरक्षाको दृष्टिबाट यो चोक सर्वसाधारणका लागि बन्द छ । अनुसन्धान गर्ने र उच्च शिक्षा हासिल गर्न अध्ययन गर्ने विद्यार्थीहरूका लागि मात्रै विशेष



**रेखाचित्र ६ र ७ : सदाशिवचोक, भक्तपुरका भैरवहरू**



रेखाचित्र ८, ९, १० र ११ : सदाशिवचोक, भक्तपुरका भैरवहरू

अनुरोधमा यहाँ प्रवेश गर्न सकिन्छ । त्यस्तै विशेष अवसरमा अध्ययन गरेर काष्ठ र प्रस्तरका भैरव मूर्तिहरूको वर्णन यहाँ गरिँदै छ ।

पचपन्न झ्याल र उनान्सय चोक भएको प्रसिद्ध भक्तपुर दरबारको तलेजुचोकसँगै जोडिएको यो भैरवचोकबारे विभिन्न आख्यान जोडिएका छन् । पचपन्नझ्याले दरबारसरह नै प्रसिद्धि पाएको वसन्तपुर दरबारको उल्लेख अब ग्रन्थमा मात्रै सीमित हुन पुगेको छ । विभिन्न समयमा आएका भूकम्पले यी प्रसिद्ध दरबारहरूलाई भग्नावशेषमा परिणत गरिसकेका छन् । लीलाभक्त मुनकर्मीले बडो मार्मिक ढङ्गले भक्तपुरको वसन्तपुर दरबारको उल्लेख गर्नुभएको छ । राजा जगत्प्रकाश मल्लले निर्माण गरेको वसन्तपुर दरबार (वसन्त विहार) तलेजु मन्दिरसँगैको चौकोट दरबारको भण्डारखाल पोखरीको पश्चिमतर्फ अवस्थित थियो । तलेजु मन्दिर भएरै यो दरबारमा ओहोरदोहोर गर्ने गरिन्थ्यो र यसमा धेरै चोक र धेरै ढोकाहरू थिए (मुनकर्मी, १९९२ : २५-२८) । यसरी भक्तपुरका विभिन्न प्रसिद्ध दरबारहरूको उल्लेख पाइन्छ । ने.सं. ८७४ (इ.स. १७५३) मा रणजित मल्लद्वारा स्थापना गरिएको प्रसिद्ध कलात्मक स्वर्णद्वारबाट प्रवेश गरेर नै भैरवचोकमा जान सकिन्छ ।

यक्ष मल्लको समयपछि टुक्रिएका पाटन, भक्तपुर र काठमाडौँ राज्यमा तीन जना छुट्टाछुट्टै राजा एकै समयमै राज्य गर्दथे । आन्तरिक कलह, सुलह र सन्धि त्यो बेलाको इतिहासका अभिन्न अङ्ग नै थिए । पाटनका राजा महेन्द्र मल्लका दुई छोरा सदाशिव मल्ल र शिवसिंह मल्ल थिए । पिताको मृत्युपछि सदाशिव पाटनका राजा भए । सूर्यविक्रम ज्ञवालीले सदाशिव मल्लको समयमा रचना भएको ने.सं. ६९६ (इ. १५७६) को हस्तलिखित ग्रन्थको उल्लेख गर्नुभएको छ (ज्ञवाली, २०१९ : १२९) । सदाशिव मल्लको समयमा भएका महत्त्वपूर्ण घटनामध्ये पाटनको महाबौद्धको मन्दिर निर्माण पनि हो । बौद्ध पण्डित जीवराजले निर्माण गरेको महाबौद्धको कला र वास्तुकलाको सबैतिरबाट प्रशंसा भएको छ । जीवराजका पिता अभयराज आफ्नी पत्नीसहित गया गई तीन वर्ष बसेर फर्केपछि त्यताको मन्दिर, वास्तुशैलीबाट प्रभावित भएर नै महाबौद्धको मन्दिर निर्माण गर्न प्रेरित भएका थिए । शिखर शैलीको बौद्ध मन्दिरको निर्माण ने.सं. ७०५ (इ.स. १५८५) मा समाप्त भएको थियो (ज्ञवाली, २०१९ : १३०) । यिनै सदाशिवका बारेमा वंशावलीहरूमा एउटा घटनाको उल्लेख छ । घोडसवारीमा सौख गर्ने राजा सदाशिव अलि लहडी स्वभावका थिए भन्ने कुराको उल्लेख वंशावलीमा पाइन्छ । आफ्ना तबेलाका घोडाहरू प्रजाको खेतीमा धेरैपल्ट यिनले छोडेपछि प्रजाहरूले सल्लाह गरेर मनोहराको किनारमा सदाशिवलाई पिटे । प्रजाको पिटाइबाट बच्न भाग्दै भक्तपुरमा पुगे र त्यहाँका राजाले एउटा चोकमा नजरबन्द गरे । त्यही चोक नै सदाशिवचोकको नामले भक्तपुरमा प्रसिद्ध छ । यही चोकमै भैरवका विभिन्न रूपका सुन्दर मूर्तिहरू छन् । प्रचलित जनविश्वासअनुसार सदाशिव मल्ल भैरवभक्त थिए । त्यसैले उनको आग्रहमा त्यहाँ भैरवका विभिन्न मूर्तिहरूको निर्माण भयो ।

कुमार, गणेश, देवी (भैरवी), भैरव आदि चार जना देवदेवी र विभिन्न सोह्र भैरवहरू यो चोकको तल्लो खण्डको तीनतर्फ बरन्डामा सारै मिलाएर स्थापना

गरिएका छन् । चोकमै भने सोह्रवटा हात भएका वाराही, कौमारी, वैष्णवीका सुन्दर ढुङ्गेमूर्ति र ढुङ्गाकै आठवटा हात भएका भैरवको एउटा मूर्ति छ । पानी भएको इनार र जलद्रोणी पनि यही चोकमा भएकाले दैनिक क्रियाकलाप र धार्मिक कार्यका लागि ती दुवैको जल प्रयोग गरिने प्रस्ट हुन्छ । यो भैरवचोकको कोठामा र बाहिरी भित्तामा बहुमूल्य चित्रहरू छन् । अधिकांश चित्रहरू छानाबाट पानी चुहिनाले बिग्रिएका छन् । हाल पुरातत्त्व विभागको सक्रियातामा ती पुराना चित्रहरू संरक्षण गरिँदै छन्, जुन प्रशंसनीय छ । सारै सुन्दर रङको सम्मिश्रणद्वारा रङाइएका यी चित्रहरूमा युद्धको दृश्यका साथै नारायणका विभिन्न १२ रूप दर्साइएको छ । यो चोकका सोह्रवटा टुँडालमध्ये चार कुनामा चार शार्दूल, गणेश, देवीका विभिन्न रूपहरू र भैरवका मूर्ति वर्णनसहित राखिएका छन् । टुँडालबाहेक झ्याल, ढोका र त्यहाँ कुँदिएका विभिन्न अर्थ लगाउन सकिने काष्ठमूर्तिहरू पनि सारै रोचक छन् । आकारमा सानो भए पनि दिन आएपछि भीमकायहरूलाई पनि निल्न सकिन्छ भन्ने आशय यहाँका काष्ठकलाहरूमा झल्किन्छ । सानो भ्यागुताले विशाल हात्ती निल्न लागेको, पाँचवटा स-साना मुसाले बाघलाई टोक्दै, खाँदै गरेको र भ्यागुताले सिंहलाई खान लागेको प्रकृतिविपरीत कार्यहरू यहाँ अङ्कित गर्नुले राजनीतिक दाउपेचको सङ्केत गर्दछ ।

बडादसैँको नवमीको दिनमा भैरवचोकमा बलि चढाउने प्रचलन अझै छ । भक्तपुरका बासिन्दा र हाल सदाशिवचोकमै चित्र संरक्षण कार्यमा सहयोग गर्ने कृष्णकुमारका अनुसार दरबारबाहिर रहेका ढुङ्गे धारामा कुनै व्यक्तिले रगत बगेको देखेमा तुरुन्तै मृत्यु हुनेछ, त्यसैले सतर्क रहनुपर्ने बताउँछन् । अब क्रमिक रूपले त्यहाँका काष्ठभैरवहरूको चर्चा गरिनेछ । सोह्रवटा भैरव, गणेश, कुमार, शक्ति र भैरवसहित जम्मा काठका बीसवटा रङ्गीन काष्ठमूर्तिहरू यो सदाशिव चोकको दलानमा स्थापित छन् ।

१. एक शिर, दुई पाउ, र बाह्रवटा हात भएको यो भैरवको वाहनका रूपमा मानिस देखाइएको छ । वाहनको रूपमा रहेको मानिसका एउटा गोडा र एउटा हातमा भैरवका दुवै पाउ अडेका छन् । मूर्तिफलकको तल्लो खण्डमा फक्रिएको कमलको फूलका साथसाथै भैरवका दुवै पाउ राखेको स्थानमा पनि दुईवटा बेग्लै कमलका फूल सुन्दर ढङ्गले कुँदिएका छन् । मूर्तिफलकको सबैभन्दा बाहिर अग्निज्वाला र त्यसभन्दा भित्र फूलको घेरा बनाइएको छ । कानमा सर्पकुण्डल, नाडी, खुट्टा सबैमा सर्पको गहना, मुण्डमाला, कपालमा चन्द्रमा, कम्मरमा हात्तीको छाला बाँधेर, त्यही नै ओढेको सारै मिल्दो ढङ्गले देखाइएको छ । शिवको रौद्र रूपको झल्को भैरवको ठाडोठाडो परेको कपालमा अर्धचन्द्र बनाइएबाट पनि प्रस्ट हुन्छ ।
२. महिष वाहन भएको यो भैरवका बाह्रवटा हातमा विविध आयुधहरू छन् । टाङ फटचाएर उभिएका भैरवको एउटा पाउ राँगोको पुच्छरमा र अर्को पाउ

कमलको फूलमाथि छ । फलकको सबभन्दा तल कुँदिएको दोहोरो कमलको फूल निकै प्रभावकारी छ । हात्तीको छाला ओढेको यो भैरवका हातमा माला, धनु, बाण, अङ्कुश, ढाल आदि आयुध कुँदिएका छन् । मूर्तिफलकभन्दा बाहिर कुँदिएको तोरणमा चारवटा हात भएका देवीहरू पनि छन् ।

३. वृष (नन्दी) वाहन भएको यो भैरवका पनि बाह्रवटा हात छन् । त्रिशूल, डमरु, पास हातमा लिएका भैरवको सम्पूर्ण शरीरमा नीलो रङ्ग लगाएको छ । भैरवको एक पाउ साँढेको पुच्छरमा र अर्को पाउ फक्रिएको कमलको फूलमाथि राखिएको छ । गलामा मुण्डमाला, घाँटीमा कण्ठहार र बाजु एवं नाडीमा सर्पका गहना लगाएका भैरवको मुखको भाव निकै प्रभावकारी छ । भैरवले हात्तीको छाला ओढेको पनि सारै कलात्मक ढङ्गले देखाइएको छ । शिवको डरलाग्दो रूप नै भैरव भएकाले यसमा शिवप्रतिमामा हुने सम्पूर्ण लक्षण देख्न सकिन्छ । शिवले लिने आयुध नै यसमा भैरवले लिएका छन् ।

४. काठी कसेको सेतो घोडा वाहनका रूपमा रहेको यो भैरवको सम्पूर्ण शरीर रातो रङको छ भने आँखीभौँ, जुँगादाह्री हरिया छन् । कपालपात्र, खड्ग, वज्र, बाण, अग्निज्वाला हातमा लिएका भैरवका दुवै पाउ फक्रिएका कमलका फूलमाथि राखिएका छन् । अग्निज्वालाजस्तो कपालमा चन्द्रमा र नरखप्पर दुवै बनाइएको छ । यो फलकको बाहिरी भागमा अग्निज्वाला र फूलपातको घेरा लगाइएको छ ।

५. मयूर वाहन भएको यो पाँचौँ भैरवका बाह्रवटा हातमा पनि लट्ठी, खड्ग कपालपात्र आदि आयुध मिलाएर कुँदिएका छन् । सेतो रङको यो भैरवको कपाल, आँखीभौँ र दाह्री भने राता भएकाले रङको सम्मिश्रण सारै मिलेको छ । यो भैरवका पनि दुवै पाउ सेतो फक्रेको कमलको फूलमाथि राखिएका छन् । मुण्डमाला, सर्पमाला र सर्पकै पाउजु र बाजु, चुरा लगाएका भैरवले कम्मरभन्दा तल हात्तीको छाला बेरेका छन् भने माथिल्लो भाग नाङ्गै छ । अरू भैरवको मूर्तिजस्तै यसमा पनि मूर्तिभन्दा बाहिरी भागमा कलात्मक तोरण बनाइएको छ ।

६. सेतो रङको हाँस वाहन भएको यो हरियो रङको भैरव पनि निकै कलात्मक छ । कपालपात्र, ढाल, घण्ट र हातमा सर्प पनि लिएका भैरवका दुवै पाउ फक्रिएको कमलका फूलमाथि राखिएका छन् । मुण्डमाला र नागकै गहना लगाएको यो भैरवका डरलाग्दा आँखा बनाउन कलाकार सफल भएका छन् ।

७. कालो रङको मलेवा (परेवा) वाहन भएको यो सातौँ भैरवको मूर्ति पनि कलाको दृष्टिबाट उत्कृष्ट छ । मूर्तिफलकको सबभन्दा तल दोहोरो कमलको फूलमाथि र फेरि छुट्टै निर्माण गरिएको काठको फल्याकमाथि दुईवटा छुट्टाछुट्टै फक्रेका कमलका फूलमा भैरवका दुवै पाउ राखिएका छन् । विविध आयुधले सजिएको यो भैरवले पनि मुण्डमाला र नागको अलङ्कार पहिरिएको छ ।

८. रातो रङको चरा वाहन भएको यो भैरवको मूर्ति पनि उत्कृष्ट छ । बाह्रवटा

हातमा विभिन्न आयुध मिलाएर कुँदिएका छन् । भक्तपुरको भैरवचोकमा निर्मित आठवटा भैरवहरूको मूर्तिमा वाहनका रूपमा चरा बनाइएको छ ।

९. घोडा वाहन भएको यो भैरव मूर्ति पनि उत्कृष्ट छ । यो मूर्तिफलकको बाहिरी खण्डमा तोरण कला र रङको समायोजनका लागि उत्कृष्ट छ । भैरवका बाह्रवटा हातमा विभिन्न आयुध मिलाएर कुँदिएका छन् ।

१०. कुकुर वाहन भएको यो सेतो रङको भैरव पनि कलाको दृष्टिबाट उत्कृष्ट छ । विविध आयुध र कलात्मक तोरणले यसको सुन्दरता अझै बढाएको छ । रूपमण्डनमा वटुकभैरवको मूर्ति बनाउँदा कुकुर नजिकै वा वाहनका रूपमा बनाउने विधान छ । यो मूर्ति त्यहीअनुरूप छ ।

११. कालो रङको स्याल वाहन भएको यो भैरवको शरीर भने नीलो रङको छ । खट्वाङ्ग, कपाल, बाण, धनु, नरमुण्ड विभिन्न हातमा कुँदिएका छन् । अरू भैरवजस्तै यो भैरवका पनि बाह्रवटा हात, दुवै पाउ फक्रिएको कमलको फूलमाथि, मूर्तिफलकको बाहिरी भागमा अग्निज्वालाको घेरा, ठाडो कपालमा चन्द्रमा र नरमुण्ड कुँदिएका छन् ।

१२. सेतो भेडा वाहन भएको यो भैरवको शरीरमा भने पहेँलो रङ लगाइएको छ । बाह्रवटा हातमा विविध आयुध र दुईवटा फरक आकारका कमलको फूलमाथि खुट्टा अडचाएका भैरवको अनुहारको भावभङ्गी प्रभावकारी छ ।

१३. मयूर वाहन भएको रातो रङको भैरवका हातमा विविध आयुध ढाल, छत्रसँगै मयूरपङ्ख पनि कुँदिएको छ । कान, नाडी, गोडा, गला आदिमा सर्पकै गहना लगाइएको छ । शास्त्रअनुरूप नै भैरवको गहना सर्पको बनाइएको छ ।

१४. सेतो हाँस वाहन भएको हरियो रङको यो भैरवको मूर्ति रङ र कलाको तालमेलका कारण निकै सुन्दर देखिन्छ । कानमा सर्पकुण्डल, सर्पमाला नाडीमा र पाउमा सर्पकै गहना लगाएका भैरवको मुख भयावह छ र भैरवका विभिन्न हातमा विविध आयुध पनि मिलाएर कुँदिएका छन् ।

१५. गरुड वाहन भएको, हरियो रङको यो भैरव सारै सुन्दर छ । गरुडको मुख मानवाकृतिको अथवा चराकै आकारको बनाउने प्रचलन नेपाली कलामा पाइन्छ । यो मूर्तिफलकमा भने चराकै आकारको मुख भएको गरुड कुँदिएको छ । गरुडको हात अञ्जलिमुद्रामा देखाउन कलाकार सफल भएका छन् । दुईवटा फक्रिएका कमलको फूलमा राखिएका पाउ र शरीरका विभिन्न भागमा सर्पका गहना भने अरू भैरव मूर्तिमा जस्तै छन् ।

१६. एक जोडी हरियो रङको सुगा वाहनको रूपमा कुँदिएको यो भैरवको शरीर भने गुलाफी रङको छ । अरू भैरवभन्दा फरक विशेषताले गर्दा यो भैरव मूर्ति बढी आकर्षक छ । दुईवटा सुगा भएकाले पनि यो फलकको सुन्दरता बढेको छ । बाह्रवटा हातमा विविध आयुध, नरमुण्डमाला, गोलो ठूलो आकारको आँखाले गर्दा मूर्ति भयावह, तर आकर्षक छ ।

१७. बाह्रवटै हात भएको सेतो रङको गणेश पनि भैरवसँगै लहरै स्थापना गरिएको छ । सेतो रङको गणेश, रातो वस्त्र र कालो रङको मुसाले गर्दा फलकको रङको सम्मिश्रण निकै मिलेको छ ।
१८. कुमारको पनि सुन्दर मूर्ति गणेशसँगै स्थापना गरिएको छ । नीलो रङको मयूर बनाइएको यो कुमारफलक पनि सुन्दर छ ।
१९. भैरवीसँगै बाह्रवटा हात भएका भैरवको मूर्तिफलकमा भने वाहन कुँदिएको छैन । फक्रिएको कमलको फूलमा दुवै पाउले टेकेर उभिएका भैरवको आँखा ठूलो, गोलो, डरलाग्दो बनाइएको छ । यो भैरव स्थापना गरेको खोपाको बाहिरी भागमा सुन्दर तोरण कुँदिएको छ । नाग समातेको गरुड, गोही, फूल, पात सारै नै प्रभावकारी ढङ्गले कुँदिएका छन् । भैरवचोकमा स्थापना गरिएका अरू सोह्रवटा भैरवहरूको मूर्तिमा कुँदिएको जस्तो वाहन भने यो भैरवको छैन ।
२०. भैरवी : भैरवसँगैको अर्को खोपामा जामा, चोली लगाएकी स्त्रीमूर्ति कुँदिएको छ । डरलाग्दो सिंहमाथि बसेकी, बाह्रवटा हात भएकी देवीको हातमा विविध आयुध कुँदिएका छन् । भैरवीले अन्य गरगहनाका साथै मुण्डमाला पनि लगाएकी छन् । भैरवचोकमा भएका बीसवटा मूर्तिहरूमध्ये स्त्रीमूर्ति भने एउटा भैरवीको मात्रै हो ।

यसरी यो भैरवचोकमा वाहनसमेत निर्माण गरिएका सोह्रवटा भैरव, शक्तिसहित भैरव, प्रस्तरको एउटा भैरव र टुँडालमा पनि भैरव कुँदिएका छन् । टुँडालको भैरवको ठूलो मूर्तिबाहेक ससाना अष्टभैरवको उल्लेख पनि सत्यनारायण प्रजापतिले गर्नुभएको छ । उहाँले त्यो पश्चिमपट्टिको भित्तामा बनाइएका बाह्रवटा नारायणको चित्रको पनि उल्लेख गर्नुभएको छ । मधुसूदन, त्रिविक्रम, वामन, श्रीधर, हृषीकेश, पद्मनाभ, दामोदर, वासुदेव, नारायण, माधव, गोविन्द, विष्णु आदि बेग्लाबेग्लै नामका साथै रङको पनि उहाँले 'देवता चित्रसङ्ग्रह' उद्धरण गर्दै वर्णन गर्नुभएको छ (प्रजापति, रोलम्बा १९९१ : १९–२४) ।

नेपाली काष्ठकलाको सुन्दर नमुनाका रूपमा भक्तपुरको भैरवचोकका यी भैरवलाई औँल्याउन सकिन्छ । नेपाली कलाको अनुपम सम्पत्तिको संरक्षण बेलैमा भएमा लामो समयसम्म सुरक्षित राख्न सकिन्छ ।

## भक्तपुर, ढुङ्गे धाराको भैरव

भक्तपुरको पचपन्नझ्याले दरबारको ठीक अगाडि रहेको ढुङ्गे धारामा एउटा सुखासन भैरवको सारै राम्रो मूर्ति छ । भूपतीन्द्र मल्लले स्थापना गरेको यो भैरव शक्तिसहित कुँदिएको छ । पाँच शिर र चौधवटा हात भएको यो भैरवको शिरमाथि सातवटा नागको फणा पनि आकर्षक ढङ्गले कुँदिएको छ । भैरवका गोलागोला दुई आँखा र निधारमा तेस्रो आँखाको प्रतीक गोलो टीका कुँदिएको छ । हात र खुट्टामा नागका बाजु र कल्ली, घाँटीमा छोटा र लामा दुई प्रकारका नागकै माला आभूषणका रूपमा प्रयोग गरिएको यो भैरवको कलापक्ष निकै स्तरीय छ ।

कम्मरभन्दा माथि लुगाको प्रयोग छैन । तल भने हड्डीको जालीदार लुगा छ । डमरु, बन्चरो, खट्वाङ्ग, कपालपात्र, जपमाला आदि विभिन्न आयुध हातमा लिएका भैरवको आङ्गिक अनुपात पनि मिलेको देखिन्छ । भैरवकी स्त्रीशक्तिको हातमा पनि डमरु, बन्चरो, जपमाला कुँदिएको छ । सम्पूर्ण मूर्तिफलकको पृष्ठभूमिमा अग्निज्वाला कुँदिएको छ । ढुङ्गे धाराभन्दा माथि बेग्लै मन्दिरको आकार बनाएर यो भैरव स्थापना गरिएको छ । लालबैठकमा प्रदर्शन गरिएको शक्तिसहितको भैरव र यो ढुङ्गे धाराको भैरवको विषयवस्तु र कलाकारिता निकै नै मिल्दोजुल्दो छ ।

भैरव उभिएको आसनको तल्लो भागमा विभिन्न जलप्राणीहरू गोही, माछा, कछुवा, सर्प सारै प्रभावकारी ढङ्गले बनाइएको छ । भक्तपुर दरबारको लालबैठकमा प्रदर्शन गरिएको भैरव मूर्तिमा पनि यस्तै ढाँचाले जलप्राणी कुँदिएको छ । मन्दिरको ढाँचा बनाइएकाले दायाँबायाँ साना सिंह पनि कुँदिएका छन् । ढुङ्गे धारामा राजा भूपतीन्द्र मल्लको मितिसहितको अभिलेख पनि छ । धाराका दुवै पाटामा मुसोसहितका गणेश, हात्तीमा बसेका चारवटा हात भएका इन्द्र, नन्दीमाथि सवार शिव, गरुडासन विष्णु र घोडामा बसेका सूर्य पनि ससाना आकारमा कुँदिएका छन् । ढुङ्गे धाराको माथिल्लो भागमा उफ्रन लागेको भ्यागुतो र गोहीको मूर्ति पनि सारै स्वाभाविक रूपले बनाइएको छ । मल्लकालमा उच्च स्तरमा पुगेको कलाको झल्को यो ढुङ्गे धारामा स्थापना गरिएका मूर्तिहरूबाट पाइन्छ ।

**भक्तपुर, वसन्तपुर दरबारको ढोकामा स्थापित भैरव** (इ.स. १७००)

भक्तपुरको पुरानो वसन्तपुर दरबारको ढोकामा दायाँ र बायाँ उग्रचण्डीदेवी र भैरवका मूर्ति स्थापित छन् । मिति र अभिलेख भएका यी दुवै मूर्तिले भक्तपुरको कलासंस्कृति र इतिहासमा नयाँ आयाम थपेका छन् ।

भैरवको मुख्य वासस्थानका रूपमा भक्तपुरको चर्चा गरिन्छ । भक्तपुर दरबारक्षेत्रमा एकल र शक्तिसहित स्थापना गरिएका भैरवका मूर्तिहरू थुप्रै छन् । मितिसहितको अभिलेख कुँदिएकाले यो भैरव मूर्तिको महत्त्व बढन गएको हो । एक शिर, दुई पाउ र बाह्रवटा हातहरू भएको यो मूर्तिफलक दोहोरो ज्वालावलि मिलाएर कुँदिएको छ । आगोको लप्का माथितिर गएको जस्तो कपाल, नरमुण्डजडित मुकुट, कान, हात र खुट्टामा सर्पको गहना, गलामा मुण्डमाला, कम्मरभन्दा तल हड्डीको जालीदार जामा सबै नै प्रतिमाविज्ञानका पुस्तकमा बताइएका नियमअनुसार नै बनेका छन् । दायाँतर्फको हातमा खड्ग, डमरु, घण्ट आयुधका रूपमा देखाइएका छन् र सबैभन्दा तल्लो हात वरदमुद्रामा छ । बायाँतर्फको हातमा खट्वाङ्ग, ढाल, मुण्डमाला, पताकामुद्रामा एवं दायाँ र बायाँका एकएकवटा हात बिन्दुमुद्रामा देखाइएका छन् । भैरव नरवाहनका रूपमा कुँदिएका दुई पुरुषका ढाडमाथि उभिएका छन् ।

फलकको दायाँबायाँ चारवटा हात भएका सिंहनी, व्याघ्रिनी पद्मपीठमा उभिएका छन् । आयुधमा डमरु, खट्वाङ्ग र बिन्दुमुद्रा देखाइएका छन् । एउटा कलाकारले मेहनत गरेर शास्त्रीय आधारमा तयार पारेको यो भैरव मूर्तिको सूक्ष्म कलाकारिता

प्रशंसनीय छ । ने.सं. ८२१ मा मल्ल राजा भूपतीन्द्रले स्थापना गरेको यो महाभैरव मूर्तिको सजीव कला हेरेपछि कलापारखीले जिब्रो टोक्ने गर्दछन् ।

**ज्ञानेश्वरको आनन्दभैरव**

काठमाडौँ, ज्ञानेश्वरमा स्थापित आनन्दभैरव पूर्णकदको मूर्ति हो । एउटै सिङ्गो ढुङ्गामा बनेको यो मूर्तिको विशेषता हेर्दा लिच्छविकालको प्रभावमा मल्लकालको प्रारम्भकालतिर बनेको देखिन्छ । मन्दिरको गर्भगृहको पूर्वपट्टि भित्तामा टाँसेर स्थापना गरिएको यो भैरवको मूर्ति प्रदक्षिणा गर्न सकिँदैन । भैरवको दायाँबायाँ साना आकारका गणेश र लक्ष्मी पनि स्थापना गरिएका छन् ।

बच्चाको स्वास्थ्यका लागि आनन्दभैरवमा पूजा गर्ने प्रचलन छ । काठमाडौँ उपत्यकाबाहेक पहाडबाट पनि भक्तजनहरू यहाँ पूजा र भाकलपूजा गर्न आउँछन् ।

तान्त्रिक विधिमा आधारित पूजाविधान भएकाले भैरवलाई फूल र बलि चढाउने प्रथा छ । यो मन्दिरमा पूजा गर्ने पुजारी नजरमान र गणेशमान राजभण्डारीका अनुसार यहाँ ज्यादै बिरामी भएका बच्चाका लागि भैरवको मूर्ति खुर्केर जन्तर बनाई लगाइदिने प्रचलन पनि छ । काठमाडौँका विभिन्न पीठहरूमा गरिने 'चा पूजा' ज्ञानेश्वर भैरवमा पनि गर्ने चलन छ । नखाने, एकोहोरो रोइरहने बच्चालाई त्यहीँको ढुङ्गे धारा (ज्ञानधारा) मा ख्वाल्ल नुहाएर आनन्दभैरवको पूजा गर्ने प्रथा छ ।

अरू भैरवको मूर्तिजस्तै यसमा पनि नागकै गहनाको प्रयोग भएको छ ।

**कीर्तिपुरको बाघभैरव**

कीर्तिपुरको डाँडामा अवस्थित बाघभैरवको मन्दिर यसको वास्तुकला र कीर्तिपुरसँग सम्बन्धित किंवदन्तीका कारणले प्रसिद्ध छ । नेपाल उपत्यकामा प्राप्त मुखौटा भैरव मूर्ति र पूर्णकदका मूर्तिबाहेक शक्तिशाली जनावर बाघको रूपमा पनि पूजा गर्ने प्रचलन रहेको कुरा कीर्तिपुरको बाघभैरव मन्दिरमा स्थापना गरिएको मूर्तिबाट प्रमाणित हुन्छ । डिल्लीरमण रेग्मीले ने.सं. ६३५ (इ. १५१५) को कीर्तिपुर, बाघभैरव मन्दिरको अभिलेखको उल्लेख गरेका छन् (रेग्मी, १९६६ : ६१०) । व्याघ्रेश्वर अर्थात् बाघरूपी ईश्वरको प्रतिमा मन्दिरको गर्भगृहमा स्थापना गरेको उल्लेख त्यसमा परेको छ ।

कीर्तिपुरको बाघभैरव मन्दिरमा स्थापना गरिएको बाघभैरवका बारेमा विभिन्न लोकोक्ति सुन्न पाइन्छ, जसमध्ये दुईवटा यस प्रकार छन्– कीर्तिपुरका गोठाला केटाकेटीहरूले आफ्ना भेडाबाखा चराउने क्रममा काँचो माटाका विभिन्न वस्तु बनाउँदा एउटा बाघ पनि बनाए । जिब्रो हाल्न बाँकी रहेको बेलामा खेलौना बाघमा प्राणप्रतिष्ठा भएर बाखाहरू खाएको त्यो रूपलाई नै मन्दिरमा प्रतिष्ठापन गरिएको उल्लेख छ । यस्तै मिल्दो कथा शुक्रसागर श्रेष्ठले पनि उल्लेख गरेका छन् । हाल पनि जिब्रो नभएको त्यो बाघले आँ गरेर जिब्रो मागेको हो भन्ने भनाइ श्रेष्ठको छ । बाहिरबाट तीनतले यो बाघभैरव मन्दिर भित्रबाट चारतले छ । मन्दिरको भुइँ तलाको गारो चारैतर्फ प्राचीन भित्तिचित्रहरूले ढाकेको छ (श्रेष्ठ, २०५७ : ४१) ।

बाघभैरव मन्दिरको गर्भगृहमा स्थापना गरिएको बाघ माटोले निर्मित भए पनि मुख भने चाँदीको छ । श्री ३ महाराज चन्द्रशमशेरको समयमा स्थानीय व्यक्तिले मूर्ति टिकाउ गर्नका लागि चाँदीको बनाएर देवमूर्तिमा चढाएका थिए । जनश्रुतिअनुसार त्यसभन्दा पहिले तामाको थियो । मूर्तिको मरम्मत वज्राचार्यद्वारा गरिने प्रचलन छ । मूर्ति मरम्मत गर्दा बालाजु, म्हेपि र कीर्तिपुरकै विभिन्न सात ठाउँबाट माटो ल्याई बनाउने प्रथाको शुक्रसागरले पनि उल्लेख गरेका छन् (श्रेष्ठ, २०५७ : ३७)। (आजुद्य:) बाजे देवता भनेर कीर्तिपुरेहरूले बाघभैरवलाई सम्बोधन गर्दछन् । अजाजु (जिज्यू बाजे) भनेर सम्बोधन गरिएको (यो अभिलेख परिशिष्टमा समावेश छ) बाघभैरवको मन्दिरमा विभिन्न समयमा विभिन्न व्यक्तिले गरगहना र अन्य वस्तुहरू चढाएका प्रमाण थुप्रै छन् । जसमध्ये ने.सं. ८१४ सुवर्णाभिलेखबाट क्वाठनायक विश्वनाथ भारोले श्री ३ व्याघ्रेश्वर भट्टारकलाई सुनको तोरण, खापा, ज्याल, गुंग्वाक चढाएको उल्लेख छ । यो अभिलेख परिशिष्टमा समावेश छ । धनवज्र वज्राचार्यको मध्यकालको अभिलेखको पृ. ५३४ मा र शुक्रसागरको कीर्तिपुरको सांस्कृतिक र पुरातात्त्विक इतिहासमा पृ. १२६ मा यो सुवर्णाभिलेख छापिएको छ ।

बाघभैरवलाई बलि चढाउने प्रथा छ । बलि चढाउँदा हिफ:द्य (देवस्थल) मा चढाइन्छ । मूल मन्दिरमा चढाइँदैन । हिफ:द्यको अर्थ भोग लिने देवता भएको कुरा श्रेष्ठले उल्लेख गरेका छन् (श्रेष्ठ, २०५७ : ३७) ।

बाघभैरवको प्राङ्गणमा भेटिएका मातृकागण, शिवपार्वती आदिका मूर्तिलाई विशेषज्ञहरूले निकै अघिको मिति तोकेका छन् । ती मूर्तिको आधारमा बाघभैरवक्षेत्रको प्राचीनता सहजै अनुमान गर्न सकिन्छ । गणेश मन्दिरमा स्थापित यी मातृकाको बारेमा विभिन्न किंवदन्ती सुन्न पाइन्छ, जसमध्ये ती मातृकाका मूर्तिहरू भेडा र शिवपार्वती गोठालाका प्रतीक हुन् । कलापारखी लैनसिंह बाङ्देलले यी मूर्तिहरूका गहना, कपडानिर्माणविधि र मूर्तिगत शैली इत्यादिका सम्बन्धमा विचार गरेर यिनीहरूको निर्माणकाल इसाको तेस्रो शताब्दी तोक्नुभएको छ (बाङ्देल, २०३९ : ५३) ।

बाङ्देलले तोकेको समय ठीकै देखिन्छ । प्रतापादित्य पाल र मेरी स्लुसरले पनि यी मूर्तिहरूका बारेमा आफ्ना पुस्तकमा उल्लेख गरेका छन् । तर मूर्ति ठम्याउन भने सकेका छैनन् । पालले भने यी मूर्तिहरूको समय चारौँ शताब्दी तोकेका छन् । दुवै विद्वान्को समयबाट औसत समय सजिलै निकाल्न सकिन्छ । यी प्राचीन मूर्तिहरूका आधारमा बाघभैरवको प्राचीनता अनुमान गर्न मद्दत हुन्छ । बाघभैरव मन्दिरसँग सम्बन्धित जात्रा भने केही दशकअघिदेखि मात्र चलेको हो (श्रेष्ठ, २०५७ : ८७) ।

## बुङ्गमतीको हयग्रीवभैरव

पाटन, जावलाखेलबाट दक्षिणतर्फ रहेको बुङ्गमती (किसानको बस्ती) नेवारहरूको मल्लकालीन बस्ती हो । नरेन्द्रदेव (१५९३ इ.सं.) ले बुङ्गमतीमा बस्ती बसालेको उल्लेख वंशावलीमा छ । आजसम्म पनि प्राचीन संस्कृति र कलाको जीवन्त उदाहरणको रूपमा बुङ्गमतीलाई औँल्याउन सकिन्छ । काष्ठकलाको जगेर्ना

र निरन्तरता प्रदान गर्न बुङ्गमतीका बासिन्दाको ठूलो प्रयत्न छ ।

बुङ्गमतीमा मच्छिन्द्रनाथको प्रसिद्ध मन्दिर छ । उत्तरतर्फ मुख्य द्वार भएका मच्छिन्द्रनाथ मन्दिरको ठीक पछाडि उत्तरतर्फ मूल द्वार भएका हयग्रीवभैरवको मन्दिर छ । मच्छिन्द्रनाथको रथयात्रासँग यी भैरवको पनि सम्बन्ध छ । बैशाख शुक्ल प्रतिपदाका दिन रातो मच्छिन्द्रनाथको मूर्तिलाई रथारोहण गराइन्छ । तीन दिनसम्म रथलाई पुलचोकमै राखिन्छ । चौथो दिन बुङ्गमतीको हयग्रीवभैरवलाई बलिपूजा चढाएपछि लोकेश्वर मीननाथको मूर्ति पनि रथारोहण गराएर रथ तानिन्छ । त्यसैले बुङ्गमतीको हयग्रीवभैरवको ठूलो महत्त्व छ ।

ढुङ्गाका दुई हात र शिर मात्रै बनाइएको यो भैरवको मुखाकृतिलाई पित्तलको पातोले छोपिएको छ । अन्य भैरव मूर्तिजस्तै यस भैरवका कपाल पनि ठाडाठाडा बनाइएको छ र कपालमा सर्प, चन्द्र पनि कुँदिएको छ । कानमा ठूलो, गोलो आकारको पत्र कुण्डल र बाहिरी घेरा नागको बनाइएको छ । त्यस्तै हातमा नागको चुरा बनाइएको छ । हातमा कपालपात्र र बिन्दुमुद्रा दर्साइएको छ । शिरमा बीचमा विष्णुको शिर र दायाँबायाँ दुईदुईवटा खप्पर बनाइएको छ । मूर्तिको शिरभन्दा माथि धातुपत्रमा मूर्ति स्थापनाबारे वर्णन गरिएको छ ।  पाटनका राजा श्रीनिवास मल्लको यो स्वर्ण लेखमा लोन्डेकुन्डे (हयग्रीव) भैरवको उल्लेख छ । भैरव मन्दिरको मुख्य मूर्ति स्थापना गरिएको कोठा भोज खान खुला रूपमा राखिएको ठूलो कोठा छ । यो भैरव मन्दिरका प्राय: सबै टुँडाल चोरी र नष्ट भइसकेका छन् । तीनवटा प्राचीन टुँडाल अझै छन् । एउटा टुँडालमा स्त्रीआकृति कुँदिएको छ । अरू दुईवटा टुँडालमा तीनवटा शिर भएका भैरवलाई नरमुण्डमालासहित दर्साइएको छ । मन्दिरको मूल ढोकामाथि तोरण पनि राखिएको छ । काठको तोरणमा कुँदिएका स-साना विभिन्न मूर्तिहरू हराइसकेका छन् । गरुडले दुवै नङ्ग्राले नाग र नागिन समातेको आकर्षक दृश्य अन्य तोरणमा जस्तै यसमा पनि दर्साइएको छ ।

काठमाडौं उपत्यकाका विभिन्न भैरवमध्ये बुङ्गमतीको हयग्रीवभैरवको एउटा महत्त्वपूर्ण स्थान छ ।

### लुभुको महाभैरव

पाटन, मङ्गलबजारबाट सात कि.मी. पूर्वमा लुभु पर्दछ । नेवार भाषामा लु भनेको सुन र भु भनेको थाल हो । यस नामकरणसम्बन्धमा पनि यस ठाउँमा विभिन्न किंवदन्ती पाइन्छन् । लिच्छविकालदेखि नै बस्ती भएको मानिए पनि नेपाल संवत् ६८० तिर गङ्गा रानीले लुभुमा नयाँ बस्ती बसाल्दा सुनको थाल मासेर खर्चको व्यवस्था गरेकाले यस सहरको नाम लुभु रहेको मानिन्छ । त्यस्तै छत्रपालभैरवले सुनको छाताद्वारा लुभुक्षेत्रलाई महामारीबाट सुरक्षा प्रदान गरेकाले सुवर्ण छत्रपुर भनिन्छ ।

लुभुको महालक्ष्मीको प्रसिद्ध मन्दिरमा घाँटीसम्म कुँदिएको धातुका विभिन्न देवीदेवताका छवटा मूर्ति स्थापना गरिएका छन् । गणेश, महालक्ष्मी र कुमार भोग नचढाइने देवदेवीको रूपमा र गणेश, महाभैरव र कुमारी भोग लिने देवदेवीको

रूपमा पूजाआजा गरिने प्रचलन छ । ७५ रोपनी जग्गा आयस्ताबाट मन्दिरको खटजात्रा सम्पन्न गरिन्छ । प्रत्येक वर्ष अक्षयतृतीयादेखि एक हप्तासम्म लुभुक्षेत्रमा खटजात्रा धुमधामसँग सम्पन्न गरिन्छ । गणेश, महालक्ष्मी र कुमारलाई एउटा खटमा र गणेश, महाभैरव र कुमारीलाई अर्को खटमा राखेर जात्रा गरिन्छ । २०३१ सालमा यस मन्दिरका विभिन्न देवीदेवताका मूर्तिहरू चोरी भएपछि पाटनको पुलाछेँमा धातुको मूर्ति बनाएर मन्दिरको गर्भगृहमा स्थापना गरिएको छ । लुभुको महाभैरव र गणेशसम्बन्धी विभिन्न किंवदन्तीहरू प्रचलित छन् । जसमध्ये बुङ्गमतीका भैरवले आफ्ना छोरा कार्यविनायकलाई लिएर लुभु घुम्न आएको र त्यहीँ नै बसेको विश्वास गरिन्छ । महालक्ष्मी मन्दिरको पहिलो तल्लामा भित्तामा टाँसेर बनाएको फलैँचामाथि गणेश, महालक्ष्मी र कुमार एवम् गणेश, महाभैरव र कुमारीका धातुका मूर्ति स्थापना गरिएका छन् । महालक्ष्मीको शिरको मुकुटमा नरमुण्डहरू बनाइएका छैनन् । अरू सबै मूर्तिमा नरमुण्डहरू बनाइएका छन् । मन्दिरभित्र रक्षकको रूपमा ढुङ्गाका चारवटा सिंहहरू कुँदिएका छन् । मन्दिरभित्र तीनवटा तोरण र अभिलेखसहितका दुईवटा घण्ट पनि छन् । २०५३ सालमा स्व. हर्षमाया श्रेष्ठको सम्झनामा मन्दिरभित्र सङ्गमरमर बिछ्याइएको छ र त्यससम्बन्धी शिलालेखमा श्री महाभैरव र महालक्ष्मीलाई नमस्कार गरिएको छ ।

काठमाडौँ उपत्यकाका अधिकांश भैरवमूर्तिजस्तै लुभुको महाभैरवको कानमा सर्पकुण्डल, नाडीमा सर्पको चुरा, पाखुरामा सर्पकै बाजु र गलामा पनि सर्पकै माला कुँदिएको छ । गोलो आकारका तीनवटा आँखा, मुकुटमा नरखप्पर, विष्णु (ब्रह्मा ?), भैरवको कपाल अग्निज्वालाजस्तो माथितिर उडेको र त्यसमा चन्द्रमा, सर्प एवम् नरमुण्ड बनाइएको छ ।

काठमाडौँ उपत्यकाका प्रायः सबै भैरव मूर्तिहरू छुट्टै मन्दिरमा स्थापना गरिएको छ । लुभुको यो प्रसिद्ध महालक्ष्मी मन्दिरमा भने अन्य मूर्तिसँग स्थापना हुनु यसको विशेषता हो ।

वैशाख महिनाको अक्षयतृतीयादेखि आठ दिनसम्म महालक्ष्मी मन्दिरको जात्रा गरिन्छ । महालक्ष्मी मन्दिरको जात्राका आठ दिनसम्म गुठियारहरू आफ्नो सहर छोडी बाहिर नजाने प्रचलन छ । दुईवटा खटमध्ये एउटामा गणेश, महालक्ष्मी र कुमार भोग नचढाइने देवदेवीको रूपमा र अर्को खटमा गणेश, महाभैरव र कुमारी भोग लिने देवदेवीको रूपमा पूजा गरी सहर परिक्रमा गराइन्छ ।

**हनुमानढोकाको कालभैरव मूर्ति**

हनुमानढोकाको जगन्नाथ मन्दिरसँगै उत्तरतर्फ फर्केको कालभैरवको विशाल मूर्ति छ । छवटा हात र एउटा शिर भएको यो भैरव मूर्तिको तालमान सारै मिलेको छ । खड्ग, ढाल, कपाल, त्रिशूल, नरमुण्ड झुन्ड्याइएको हात र बिन्दुमुद्रामा एउटा हात देखाइएको छ । उत्तानो परेर पल्टिएका बेतालमाथि उभिएका भैरवको अनुहारको भावभङ्गी र रङ नै डरलाग्दो छ । अरू भैरवको मूर्तिमा जस्तै यो मूर्तिको पनि कान,

नाडी, पाउ र घाँटीमा सर्पका गहना छन् । घुँडासम्म आउने लामो मुण्डमाला र सर्पमाला पनि घाँटीमा झुन्ड्याइएको छ । कालभैरवको मुकुट पनि खप्परले सजाइएको छ । खुला रूपको मन्दिरमा स्थापित कालभैरवको मूर्तिको दायाँबायाँ ढुङ्गाकै सिंह पनि बनाइएको छ । काठमाडौं उपत्यकामा प्राप्त भैरव मूर्तिहरूमध्ये आकार र सुन्दर शैलीका कारणले कालभैरव मूर्ति चर्चामा छ ।

तेह्र फिट अग्लो यो भैरवको मूर्तिबारे प्रचलित किंवदन्तीहरूमध्ये एउटा साँचो बोल्नेबारे पनि छ । कुनै पनि व्यक्तिले यो मूर्तिका सामुन्ने झूटो बोलेमा तुरुन्तै रगत छादेर मर्ने विश्वास मल्लकालमा प्रबल रूपमै थियो । त्यसैले लिडियाले पनि साँचो बकाउने प्रक्रियामा एकले अर्को व्यक्तिलाई यो कालभैरवको मूर्ति भएको स्थानमा लग्ने चर्चा गरेकी छन् (Aran, 1978 : 82) । गौतमवज्र वज्राचार्यले भाषावंशावली उद्धृत गर्दै यो मूर्ति राजा प्रताप मल्लले भण्डारखालमा खनेको पोखरीमा पानी पुऱ्याउन बूढानीलकण्ठदेखि ढल बनाउँदै गर्दा रानीवनमा जमिनमुनि भेट्टाएको उल्लेख गरेका छन् (वज्राचार्य, २०३३ : ७५) । कालभैरवको मूर्ति राजा प्रताप मल्लले स्थापना गरेको कुराको उल्लेख डा. रेग्मीले पनि गरेका छन् (रेग्मी, इ. १९६६ : ६१०) । यो मूर्तिको बनोटको अध्ययन गर्दा लिच्छविकालमै निर्माण भएको देखिन्छ ।

कालभैरव मूर्तिमा नरबलि पनि चढाउने प्रथा रहेको उल्लेख मेरी स्लुसरले राइटलाई उद्धृत गर्दै गरेकी छन् (स्लुसर, इ. १९९८ : २३७) ।

**श्वेतभैरव**

भैरवको मुखौटो मात्र पूजा गर्ने र जात्रामा प्रदर्शन गर्ने चलन काठमाडौंमा प्रशस्तै छ । हनुमानढोका दरबारको भव्य मन्दिर देगुतलेजुको सँगै अर्को मन्दिरको भुइँ तलामा श्वेतभैरवको भव्य मूर्ति स्थापना गरिएको छ । इन्द्रजात्राको अवसरमा आठ दिनसम्म यो मूर्ति प्रतिष्ठापन गरिएको आँखीझ्याल खोलिन्छ र सर्वसाधारणले पूजा गर्दछन् । श्री ५ रणबहादुर शाहले वि.सं. १८५२ मा यो धातुको भव्य मूर्तिको स्थापना गरेका थिए । 'स्वस्ति श्रीसम्वत् १८५२ साल भाद्रशुक्लपक्ष द्वादश्यां तिथौ शुक्रवासरे धनिष्ठानक्षत्रे धृतियोगे एतस्मिन्दिने श्री भैरवमूर्ति निर्माणपूर्वक प्रतिष्ठा विहिता श्री रणबहादुर भट्टारकेनेति श्री शाके १७१७ शुभम्' (वज्राचार्य, २०३३ : २६४) ।

उन्नाइसौं शताब्दीको श्वेतभैरवको यो मूर्तिले धातुकलाको एउटा सुन्दर नमुना प्रस्तुत गरेको छ । श्वेतभैरवको मुकुट, त्यसको बुट्टा, त्रिनेत्र, दसवटा मिलेका ह्रात र चारवटा बङ्गारा सारै सुन्दर ढङ्गले कुँदिएका छन् । जुँगा, दाह्री छरिएको र घाँटीमा सर्पको माला कुँदिएको यो भैरवको लामो लोती भएका कानमा गहना लगाउने प्वाल भने खाली नै छ । अधिकांश भैरव मूर्तिको मुकुटमा नरखप्पर र ह्रातमा मानवशिर बनाउने चलन छ । ह्रातको त्यो शिरलाई ब्रह्मा भन्ने चलन छ ।

दरबारको मूलढोकाबाहिर श्रीरामभक्त हनुमानको मूर्ति भूतप्रेत हटाउन स्थापना गर्ने प्रचलन भएजस्तै हनुमानढोकाबाहिर स्थापना गरिएको यो भैरवको मूर्तिको उद्देश्य पनि त्यस्तै रहेको कुरा त्रिरत्न सौन्दर्यगाथामा वर्णन गरिएको छ ।

सुन्दरानन्द बाँडाले यसै कुराको उल्लेख गरेका छन् । त्यसमा वर्णन भएअनुसार श्री ५ रणबहादुर शाहले इन्द्रजात्राको शोभा बढाउन र डाकिनी, पिशाचिनी आदिलाई भगाउन सुनको यो मूर्ति बनाउन लगाएका थिए । यस मूर्तिलाई शरभमुखभैरव भन्ने संज्ञा त्यहाँ दिइएको छ । शरभ सिंहभन्दा पनि बलियो मानिन्छ (वज्राचार्य, २०३३ : ६१) । यो श्वेतभैरवको मूर्ति बनाउन सुन किन्दा चार हजार लागेको थियो । त्रिरत्न सौन्दर्यगाथामा वर्णन गरिएको विवरण परिशिष्टमा उल्लेख छ (शाहकालीन कला र वास्तुकला : पृ.१९२,९३,९४ ) ।

वज्राचार्यहरू पूजारी भएको यो भैरवमूर्तिमा तान्त्रिक विधिअनुसार पूजा गर्ने परम्परा छ । इन्द्रजात्राको सप्ताहव्यापी कार्यक्रममा यो मूर्तिका पछाडि घ्याम्पो राखिएको हुन्छ र त्यसमा भरिएको जाँड भक्तजनहरूले रोगव्याधि भगाउन तँछाडमछाड गरेर पिउँछन् । काठमाडौँका विभिन्न टोलमा भैरवको मूर्ति प्रदर्शन गर्दा पछाडि रहेको घ्याम्पोमा जाँड हालेर भक्तहरूलाई खुवाउने चलन व्यापक छ । काठमाडौँको इन्द्रजात्रामा यसरी प्रदर्शन गरिने भैरवको मखुन्डो भने धातु, काठ र माटोको हुन्छ । यसरी इन्द्रजात्राको सामाजिक र धार्मिक दुवै महत्त्व प्रस्ट देखिन्छ ।

**इन्द्रजात्रामा प्रदर्शन गरिने धातुको प्रचण्डभैरव**

इन्द्रजात्राको उपलक्ष्यमा काठमाडौँ उपत्यकामा विभिन्न विहार र मन्दिरबाट विभिन्न देवदेवीका मूर्तिहरू मन्दिर र विहारबाहिर निकालेर प्रदर्शन गरिन्छ । हनुमानढोकाको नुवाकोटको भगवती मन्दिरमा स्थापना गरिएको प्रचण्डभैरवको मूर्ति गद्दीबैठकअगाडि काठको मचानमाथि प्रदर्शन गरिन्छ । सरकारी गुठीको व्यवस्था र देखरेखमा भैरवलाई इन्द्रजात्राको अघिल्लो दिन र इन्द्रजात्राको भोलिपल्ट भेडाको बलि चढाउने चलन छ । प्रचण्डभैरवलाई इन्द्रजात्राको भोलिपल्ट पूर्णिमाको दिनमा तान्त्रिक विधिअनुसार बत्तीसवटा माटाको पालामा विभिन्न गेडागुडी, औषधि आदि राखेर होम गरिन्छ । वज्राचार्य गुरुले पञ्चध्यानी बुद्धको मूर्ति कुँदिएको टोपी लगाएर होम र पूजाको विधि सम्पन्न गर्दछन् । २०६० सालको पूर्णिमाको प्रचण्डभैरवको पूजा प्रेमरत्न वज्राचार्य (३७ वर्ष) ले सम्पन्न गराए । सुकुन्दामा बत्ती बालेर वज्र हातमा लिएर शङ्खबाट जल चढाउँदै प्रचण्डभैरवको पूजा सुरु गरिन्छ । भैरवलाई अर्पण गरिने विभिन्न प्रकारका नैवेद्यमध्ये समय्बजीमा कालो भटमास, अदुवा र मासु भने अनिवार्य रूपमा चढाउने प्रचलन छ । प्रचण्डभैरवलाई भेडाको बलि चढाउँदा रेटेर चढाउने प्रचलन छ । होम र बलिद्वारा सम्पूर्ण पूजाविधि सम्पन्न गरिन्छ । सरकारी गुठीका गुठियार डिल्लीकुमारी वज्राचार्यको देखरेखमा पूजाको समाप्तिमा प्रचण्ड-भैरवको मुखमा नली छिराएर समय्बजी र छ्याङ पठाएपछि पूजा समाप्त हुन्छ ।

हनुमानढोकाको प्रचण्डभैरवको यो मखुन्डो रूपको मूर्ति अन्य भैरव मूर्तिजस्तै देखिन्छ । धातुको पाता पिटेर बनाइएको यो मूर्तिका गोला, ठूला तीनवटा आँखा छन् । प्राय: सम्पूर्ण भैरव मूर्तिमा शिवको अवतारको झलक प्रदान गर्न निधारमा ठाडो तेर्सो आँखा बनाइन्छ । यस मूर्तिमा सेतो र कालो रङ मिलाएर

लगाएको छ। फुकेको नाक, फिँजारिएको आँखीभौँ र मुखका दाराले भैरवको भयावह स्वरूपको झलक दिएको छ। भैरवको कान र छातीमा सर्पकुण्डल र सर्पमाला पनि पहिराइएको छ। हनुमानढोकाक्षेत्रमा प्रदर्शन गरिने विभिन्न भैरवका मूर्तिहरूमध्ये विशेष प्रकारको पूजाविधिले गर्दा यसको विशेष महत्त्व छ।

**हनुमानढोका, नुवाकोट भगवती मन्दिरको दलानमा इन्द्रजात्राको अवसरमा प्रदर्शन गरिने धातुको आनन्दभैरव मूर्ति**

कमलको फूलमाथि दुईवटा नन्दी र नन्दीमाथि आसनी गरेर उभिएका भैरवको एउटा सुन्दर मूर्ति इन्द्रजात्राको अवसरमा प्रदर्शन गरिन्छ। नुवाकोट भगवती मन्दिरको दलानमा प्रदर्शन गरिने यो भैरव मूर्तिका अठारवटा हातहरू छन्। विभिन्न आयुधहरू डमरु, अङ्कुश, ढाल, पास, खण्ड, नरमुण्ड आदि कुँदिएका छन्। भैरवका पाँचवटा शिरका मुकुटमा नरखप्परहरू पनि कुँदिएका छन्। भैरवको ठाडोठाडो कपालमा चन्द्रमा र नरखप्पर पनि देखाइएको छ, कानमा सर्पकुण्डल हातमा सर्पको चुरा र खुट्टामा पनि सर्पको कल्ली लगाएको आँ गरेको अनुहार डरलाग्दो छ। नागमाला र रुद्राक्ष, फुलेको कमलको आसनीमा मयूर, नन्दी आदि वाहन मिलाएर कुँदिएको छ। कमलको फूलको तल्लो भागमा राजा भास्कर मल्लदेवको नाम र नेपाल सं. ८२२ कुँदिएको छ। परिशिष्टमा यो अभिलेख समावेश छ। कमलको फूलको बीच भागमा भैरवको शिरमात्र कुँदिएको छ। अभिलेख र मिति भएकाले यो धातु मूर्तिको विशेष महत्त्व छ। यो मूर्तिसँगै अठारवटै हात भएको देवीको एउटा भव्य मूर्ति प्रदर्शन गरिन्छ। नागको बिछ्यौनामा सुतेका शिवको नाभीबाट निस्केको डाँठसहितको कमलको फूल र त्यसमाथि बनाइएकी देवी उभिएकी छिन्। शिव र देवी दुवैका चारवटा हातमा डमरु, खट्वाङ्गसहितको त्रिशूल, वज्र र कपालपात्र देखाइएको छ। मूर्तिविज्ञानको नियमअनुसार विष्णुका मात्र शयन मूर्ति बनाइन्छन्, तर यहाँ शिवको शयन मूर्ति बनाइएकाले यसलाई एउटा नौलो प्रस्तुति मान्नुपर्दछ। सम्पूर्ण नेपालमा भेटिएका ढुङ्गा र धातुका मूर्तिहरूमध्ये नाग बिछ्यौनामा सुतेका शिवको यो अनौठो मूर्तिको विस्तृत अध्ययन अति नै आवश्यक छ।

**इन्द्रचोकको आकाशभैरव**

काठमाडौँ उपत्यकामा भएका भैरवका मूर्तिहरूमध्ये आकाशभैरव कला, वास्तुकला र स्थानका दृष्टिकोणवाट पनि निकै चर्चित छ। धर्मशास्त्र र प्रतिमाविज्ञानका पुस्तकमा वर्णित भैरवको वर्गीकरणमा आकाशभैरव भन्ने नाम भेटिँदैन। नेपालमा भने विभिन्न लोकोक्तिको आधारमा इन्द्रचोक, भक्तपुर र हलचोकका भैरवलाई आकाशभैरव भन्ने प्रचलन पाइन्छ। विभिन्न कथनका आधारमा यी भैरवहरूको शिरच्छेदन भएको पाइन्छ।

शिवको उग्ररूप नै भैरव हो। शिवलिङ्ग र शैव परिवारका मूर्तिमा पशुबलि चढाउने प्रचलन छैन, तर भैरवका आकृतिका बेग्लाबेग्लै पत्थरमा भने विभिन्नथरीका पूजाआजामा पशुबलि अनिवार्य मानिन्छ।

नेपालमा बौद्ध धर्मावलम्बीहरूले पनि भैरवलाई अक्षोभ्य बुद्धको परिवारको सदस्यका रूपमा पूजाअर्चना गर्दछन् । इन्द्रचोकको आकाशभैरवको मुकुटको बीचमा भएको आकृतिलाई हिन्दूहरूले ब्रह्मा र बौद्ध मार्गीहरूले अक्षोभ्यको शिर मानेर पुज्दछन् ।

काठमाडौं उपत्यकामा भैरवका विभिन्न आकृतिका मूर्ति पुज्ने चलन छ, जसलाई यसरी वर्गीकरण गर्न सकिन्छ- क) शिर मात्रै बनाइएको भैरव मूर्ति ख) घैंटोको रूपमा बनाएर अग्रभागमा शिर बनाइएको भैरवको मूर्ति । ग) पूर्ण आकृतिको रूपमा बनाइएको भैरव र उनकी शक्ति घ) गोलो वा लामो आकृतिको ढुङ्गाका रूपमा पूजित भैरव ।

माटो, काठ, ढुङ्गा, धातु र हस्तिहाडमा बनाइएका भैरव मूर्तिहरू काठमाडौं उपत्यकाका प्राप्त छन् । इन्द्रचोकको आकाशभैरव भने घैंटाका रूपमा बनाइएको छ ।

किराती राजा यलम्बरसँग आकाश भैरवको सम्बन्ध देखाइएको छ । भैरवले राजा यलम्बरको रूप धारण गरेर काठमाडौं उपत्यकामा शासन चलाएका र महाभारतको युद्ध हेर्ने मनोकामना रहेका भनाइहरू पनि प्रचलित छन् । कुरुक्षेत्रमा यलम्बर साधारण राजा मात्रै नभएर भैरवको अवतार भएको कुरा दिव्यदृष्टिद्वारा श्रीकृष्णले थाहा पाए । राजा यलम्बरले युद्धमा पराजित हुने पक्षबाट आफू लड्ने कुरा बताएपछि कृष्णलाई समस्या पर्‍यो । छलद्वारा राजा यलम्बरको शिर श्रीकृष्णले छेदन गरे । शरीरबाट छुट्टिएको शिरले नै महाभारतको युद्ध हेर्‍यो । युद्धप्रति त्यति उत्सुकता नरहेकाले यलम्बर आकाशमार्गबाट नेपाल फर्कंदा बाग्मती र विष्णुमती नदीको दोभान (इन्द्रचोकको भैरव मन्दिरको स्थान) मा आइपुग्दा मिर्मिरे उज्यालो भएकाले त्यहीँ पत्थरको रूपमा परिणत भए । जनताले त्यहीँ छाप्रो बनाए र आकाशभैरवका रूपमा आफ्ना प्रिय राजालाई पुज्न थाले । छवटा प्राचीन टोलहरूको सङ्गमक्षेत्र इन्द्रचोकमा आकाशभैरवको आकर्षक, भव्य मन्दिर छ । नेपालमा प्रचलित प्राचीन छानेशैली (Pagoda Style) का ढाँचामा यो मन्दिर निर्माण भएको छ । छानेशैलीको मन्दिर भए पनि लाम्चो र समकोणीय ढङ्गले यसको निर्माण गरिएको छ । छानेशैलीका अरू मन्दिरको भन्दा यसको छाँट बेग्लै छ । पूर्वतर्फ फर्किएको मोहडा भएकाले मुख्य सडकबाट मन्दिरको सुन्दर वास्तुशैली र कलाकृति अवलोकन गर्न सकिन्छ । तीन तला र झिँगटीको छाना भएको यो मन्दिरको भुइँ तलामा विभिन्न पसल छन् । पहिलो तलामा पूर्वपट्टि फर्काएर स्थापना गरिएको भैरवको भव्य मूर्ति छ । दोस्रो तलामा बार नलगाएको ठूलो खुला कोठा छ । विभिन्न धार्मिक पर्वमा त्यहाँ भोज खाने गरिन्छ । तेस्रो तला भान्साको रूपमा प्रयोग गरिन्छ । पहिलो तला पाँचवटा कलात्मक झ्याल र चारवटा ठूला शार्दूलका धातुमूर्तिले गर्दा आकर्षक देखिन्छ । पाँचवटा झ्यालमध्ये बीचको झ्याल त तोरण र दायाँबायाँ राखिएका झन्डाले एकदमै आकर्षक देखिन्छ । नेपालमा निर्मित छानेशैलीका मन्दिरमा टुँडाल (प्रत्येक तलाको चार कुनामा) मा

शार्दूलको आकृति बनाइन्छ । गुम्बज शैलीको मन्दिरमा भने दोस्रो, तेस्रो तलाका चारै कुनामा शार्दूलका मूर्ति राख्ने प्रचलन उपत्यकामा देखिएको छ । जङ्गबहादुरले सन् १८७४ मा कालमोचनमा बनाएको सत्यनारायणको भव्य मन्दिरको दोस्रो तलाका चारवटा कुनामा धातुका शार्दूल स्थापित छन् । मैतिदेवीको मन्दिरमा पनि भुइँ तलाका चारै कुनामा चारवटा शार्दूल स्थापना गरिएका छन्, तर छानेशैलीको मन्दिरमा पनि शार्दूलको आकर्षक ढङ्गले स्थापना गरिएको भने आकाशभैरवकै मन्दिरमा हो । यसलाई मन्दिरको एउटा छुट्टै विशेषताको रूपमा लिन सकिन्छ ।

भैरव मन्दिरको वास्तुशैलीपछि अब मूर्तिको वर्णनतर्फ लागौँ । आकाशको प्रतीक भएकाले यो भैरवको मुहारको रङ्ग नीलो छ । प्रतिमाविज्ञानका पुस्तकमा चण्डभैरवको रङ पनि नीलो नै बनाउनुपर्ने नियम बताइएको छ । भैरवका प्रतिमामा पाइने मुख्यमुख्य विशेषतामा ठूलो आँखा, फुकेको नाक, गहनाको रूपमा सर्पको प्रयोग गरिन्छ । यो आकाशभैरवको मूर्तिमा पनि पाइन्छ । घाँटीसम्म मात्र बनाइएको यो मूर्तिको कपाल, मुकुट, सर्पकुण्डल र घाँटी भने चाँदीको पाताले मोरिएको छ । कलात्मक चाँदीको वेदिका, दायाँबायाँ स्थापना गरिएका गणेश र कुमारका सुन्दर प्रतिमाले भैरवको शक्तिलाई पूर्णता प्रदान गरेका छन् ।

## रानीपोखरीको शक्तिसहितको भैरव

सातवटा नागका बटारिएका शरीरलाई आसन बनाएर शक्तिसहित उभिएको भैरवको मूर्ति रानीपोखरीमा स्थापित छ । सम्पूर्ण फलक ज्वालावलिले घेरिएको छ । भैरवका चारवटा हातमध्ये दुईवटामा खड्ग र घण्ट छन् भने एउटा वरदमुद्रामा र एउटा हातले शक्तिलाई अँगालेको कलाकारले मिलाएर कुँदेका छन् । अग्निको ज्वालाजस्तै माथितिर उठेको कपाल, पाँचचोसे मुकुट, शिवको उग्र रूप दर्साउन मुकुटमा नरखप्पर आदि प्रतिमाविज्ञानका पुस्तकको नियमअनुसार नै बनेका छन् । गलामा हार, सर्पमाला, मुण्डमाला, सर्पवलय (सर्पको चुरा), सर्पको पाउजु, हड्डीको जामा सबै नै शिवको उग्ररूप भैरवलाई सुहाउँदो ढङ्गले बनाइएको छ । भैरवका ठूला गोला आँखा, छरिएको आँखीभौँ, जुँगा र मुण्डमालाले शिवको उग्र रूप प्रस्टसँग देखाएको छ । भैरवको तुलनामा शक्तिको मूर्ति सानो आकारको बनाइएको छ । देवीका दुईवटा हात वरद र अभयमुद्रामा देखाइएको छ । देवीको शिरमा लगाएको मुकुट, कानको गोलो आकारको कुण्डल, गलामा हार र लामो माला सबै नै मिलाएर कुँदिएको छ । वस्त्रको रूपमा कम्मरभन्दा तल मुजा पारेको धोती र त्यसलाई बुट्टे कम्मरबन्धले अड्याएको छ । शिवका परिवारको मूर्ति भएकाले भैरव र भैरवी दुवैको निधारमा तेस्रो आँखा बनाइएको छ । ज्वालावलिले घेरिएको मूर्तिफलकको सबभन्दा तल कमलको फूलको आसन पनि सुन्दर ढङ्गले बनाइएको छ ।

## टेकुको पचलिभैरव

टेकु दोभानमा अवस्थित पचलिभैरवको मूर्ति खुला मन्दिरमा स्थापित छ । चारवटा खम्बामाथि छाना हालेर चारैतिर खुला रहेको यो मन्दिर शक्तिपीठहरूजस्तै

देखिन्छ । गोलो आकारको प्रस्तरमाथि धातुको कोश राखिएको यो पचलिभैरवको मूर्ति पञ्चमुखी शिवलिङ्गजस्तै देखिन्छ । पचलिभैरवको जात्राका बेलामा भने यो कोशलाई झिकेर मन्दिरकै पूर्व दिशामा प्रतिष्ठापन गरिएको हुन्छ । उन्नाइस इन्चजति अग्लो यो पित्तलको कोशमा भैरवका चारवटा हात, एउटा शिर, दुई पाउ कुँदिएका छन् । खड्ग, पात्र, बिन्दुमुद्रामा हातहरू देखाइएका छन् । अधिकांश भैरवका मूर्ति बेतालको आसनमा उभिएका हुन्छन् । यहाँ भने बेताल मन्दिरनजिकै, तर छुट्टै स्थापना गरिएको छ । उत्तानो परेर सुतेका बेतालको मूर्तिको कलाकृति पनि त्यति प्रभावकारी छैन । टेकु पचलिभैरवको बाह्रवर्षे जात्राको विशेष महत्त्व छ । राजासँग खड्ग साट्ने प्रचलन भएकाले पनि यसको महत्त्व देखिन्छ । काठमाडौं उपत्यकामा धेरै देवताहरूको 'मन्दिर' र 'देगुछे' दुई प्रकारको वासस्थान हुन्छ, तर यो पचलिभैरवका भने बाह्रवटा देगुछे छन् । प्रत्येक महिना डङ्गोल थरका डङ्गोल ज्यापूहरूको घरमै पालैपालो गरेर पचलिभैरवको कलश राख्ने प्रचलन छ । त्यसैले पचलिभैरवका देगुछे बाह्रवटा छन् । पचलिभैरवको प्राचीनताबारे मेरी स्लुसरले लिच्छविकालको दक्षिणकोलिग्रामका पाञ्चालीसँग सम्बन्ध जोडेकी छन् । तर पचलिभैरवबारे उल्लेख भएको पहिलो ताम्रपत्र काष्ठमण्डपसँग सम्बन्धित भएको कुरा डी.आर्. रेग्मीले मिडेभल नेपाल, पार्ट ३ मा वर्णन गरेको र त्यसलाई स्लुसरले उद्धृत गरेकी छिन् (स्लुसर, १९८९ : २३९) । काठमाडौंका भैरव नै फर्पिङ राजाको रूपमा अवतरित भएका थिए । कसाई जातकी केटीसँग उनी प्रेममा परेका थिए र आफ्नी प्रेमिकाको अनुरोध र ढिपीमा भैरवरूप प्रदर्शन गर्दा मन्त्र गरेको अक्षता छर्कन बिर्सिएर भैरवले आफ्नो स्वरूप परालको मुठामा लुकाउनुपरेको थियो । त्यसैले विभिन्न पीठमा भैरवको त्यही अङ्ग डल्लो ढुङ्गाको रूपमा पूजा गरिन्छ ।

हिन्दूहरूको ठूलो चाड दसैंको चौथौ दिन पचलिभैरवको जोसिलो जात्रा सम्पन्न गरिन्छ । जात्रामा भैरवको प्रतिनिधित्व कलश र अजिमा (भैरवकी शक्ति) को पात्रद्वारा गर्दै भैरवको छोरा गणेश पनि जात्रामा सम्मिलित गराइन्छ । ज्योतिषीहरूले ग्रहनक्षत्रको स्थिति हेरेर जुराएको समयमा एउटा ठूलो राँगाको बलि भैरवलाई चढाइन्छ, रगत मन्दिरको वरिपरि र कलशमा पनि छर्किइन्छ । वैदिक देवता अग्निको प्रार्थना गर्दै सिङ्गै टाउको आगोमा अर्पण गरिन्छ । त्यसपछि विभिन्न देवता, भूत, प्रेत, पिशाचका नाम लिँदै मासु र छाला काट्दै हावामा माथिपट्टि फ्याँकेर आगोमा पारिन्छ । पवित्र अग्निमा डढाइएको मासुको खरानी प्रसादको रूपमा भक्तजनहरूले खाने र घस्ने गर्दछन् । घटस्थापनाको पाँचौं दिन पनि पचलिभैरवको पूजाआजा र विभिन्न कार्य सुचारु रूपले चलिरहन्छन् ।

छोरा गणेशलाई बाबु भैरवसँग भेट्टाउने कार्य पनि बाजागाजा बजाएर भव्यताले सम्पन्न गरिन्छ । काठमाडौंको ब्रह्मटोलबाट बाजागाजाको लस्कर निस्केपछि कसाई जातका मानिसले गणेशको मूर्ति बोकेर बजार घुमाउँछन् । बेलाबेलामा

आफ्ना बाबुलाई गणेश भेट्न गएको उद्गार पनि जोसिलो पाराले त्यो जमघटमा व्यक्त गरिन्छ ।

कलश बोकेको जमातले 'भैरवसङ्गीत' पनि घन्काउँछ । बडो रमाइलो, उत्तेजित र जोसिलो वातावरणमा पचलिभैरवको जात्रा सम्पन्न गरिन्छ । गणेशका बाबु भैरव, सौतेनी आमा अजिमा र गणेशको आन्तरिक भावना पनि यो जात्रामा व्यक्त गरिएको पाइन्छ ।

**लेलेको टीकाभैरव**

भैरवको साकार मूर्तिबाहेक विभिन्न आकृतिमा पनि पूजा गर्ने व्यापक चलन काठमाडौँमा छ । काठमाडौँका विभिन्न मन्दिर र पीठहरूमा गुच्चाजस्तो गोलो ढुङ्गा वा कलशलाई पनि भैरवको रूपमा मानेर पूजा गर्ने चलन देखिन्छ । लगनखेलबाट दक्षिणतर्फ अवस्थित लेलेको पुरातात्त्विक महत्त्व ज्यादै छ । २०३८ सालको बाढीले लेलेमा भएका लिच्छविकालीन, मल्लकालीन र शाहकालीन मूर्ति र मन्दिरलाई सारै क्षति पुऱ्याएको छ । त्यहाँको प्राचीन सम्पदाको वर्णन गर्दा पुराना चित्रहरूको मद्दत लिनुपर्दछ ।

नदीको किनारमा रहेको टीकाभैरवको खुला मन्दिरमा पनि कलश र भित्तिचित्रको रूपलाई 'टीकाभैरव' भनेर पूजाआराधना र बलि चढाउने प्रथा छ ।

वैदिक समयमा भयावह देवता रुद्रको रूपमा चिनिएका शिवको डरलाग्दो रूप नै भैरव भएकाले उनको मन्दिर मसानघाटनजिक बनाउने प्रचलन पाइन्छ । त्यही मान्यताअनुरूप लेले भैरवको कलशस्वरूप र ठूलो भित्ता ढाक्ने चित्र कोरिएको देखिन्छ । संहारकारी देवता शिवको डरलाग्दो रूप भएकाले भैरवलाई सधैँ मुण्डमाला र नरकपाल धारण गरेको देखाइन्छ । लेलेको नदीकिनारमा रहेको यो कलश र चित्ररूपी भैरवको विशेष महत्त्व छ ।

टीकाभैरवका पूजारी कृष्णलाल कर्माचार्य (८२ वर्ष) का अनुसार गुठीको तीन रोपनी जग्गाको आम्दानी नै यो पीठको दैनिक पूजाको खर्च हो । लीलावती, प्रभावती र कलावती नामका तीन खोलाहरूको सङ्गममा स्थापित यो टीकाभैरवमा चैत्र पूर्णिमाको बेलामा मेला लाग्दछ । लेले बजारमा बालकुमारी, जयकुमारी र भैरवको जात्रा सम्पन्न गरेपछि यो खोलाको टीकाभैरवमा समय्बजी चढाइन्छ । भित्ताको चित्र रङ्गरोगन गर्न पाटनका चित्रकारहरू चैत्र पूर्णिमाभन्दा अघिको एकादशीमा आएर काम सुरु गर्ने प्रचलन छ । लेलेका वृद्ध पूजारी कृष्णलाल कर्माचार्य र उनका भाइ तुलसीलाल कर्माचार्य (६३ वर्ष) का अनुसार यो ऐतिहासिक र सांस्कृतिक महत्त्व बोकेको टीकाभैरव स्थानको संरक्षणको आवश्यकता छ । भैरवका विविध रूपको पूजा गर्ने प्रचलनको पुष्टि यो टीकाभैरवको कलश र भित्तिचित्रले गरेका छन् ।

## अध्याय : आठ

# काठमाडौँ, पाटन र भक्तपुरस्थित सङ्ग्रहालयका भैरव मूर्तिहरूको चर्चा

### राष्ट्रिय सङ्ग्रहालय, छाउनीमा प्रदर्शित भैरव मूर्तिहरू

विश्वसम्पदासूचीमा परेको काठमाडौँ उपत्यकाको स्वयम्भू चैत्यको नजिकै अवस्थित छाउनीमा निर्मित राष्ट्रिय सङ्ग्रहालय अमूल्य कलाकृतिले गर्दा सधैँ नै चर्चामा छ । राष्ट्रिय सङ्ग्रहालयमा निर्मित ३ वटा छुट्टाछुट्टै भवनहरूमा विविध महत्त्वपूर्ण वस्तुहरू सङ्कलित र प्रदर्शित छन् ।

प्रधानमन्त्री भीमसेन थापाले सन् १८१९ मा सिलखानाको हातहतियार (ढुकुटी) का लागि छाउनीमा निर्मित भवन नै सङ्ग्रहालयको रूपमा सर्वसाधारणका लागि खुला गरियो । सन् १९२६ मा प्र.म. चन्द्रशमशेरले छाउनीको त्यो भवनको उत्तर र दक्षिणमा अरू दुई खण्ड पनि थपे । सिलखाना सङ्ग्रहालयको नामले चिनिने यो भवनलाई इ. स. १९३८ को महाभूकम्पपछि प्र.म. जुद्धशमशेरले 'नेपाल म्युजियम' नामकरण गरेर सर्वसाधारणका लागि १९३९, १२ फेब्रुअरीदेखि खुला गरे । जुद्ध जातीय कलाशाला भने १९४२ देखि खुला भयो (अमात्य, १९९९ : ४५-४६) । राष्ट्रिय सङ्ग्रहालयले त्यस्ता वस्तुहरू सङ्ग्रह गरेको छ, जसको ऐतिहासिक, सांस्कृतिक र राष्ट्रिय महत्त्व छ (पौडयाल, २०५७ : ८८) ।

राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित विभिन्न महत्त्वपूर्ण मूर्तिहरूमध्ये सङ्ख्याको दृष्टिले काठका भैरव मूर्तिहरूको बाहुल्य छ ।

छाउनी सङ्ग्रहालयमा प्रदर्शित विभिन्न महत्त्वपूर्ण मूर्तिहरूमध्ये यहाँ भैरवका मूर्तिहरूको मात्र चर्चा गरिनेछ ।

### प्रस्तरको पञ्चमुखी भैरव

प्रस्तरका मूर्तिहरू प्रदर्शित कक्षमा एउटा पाँचवटा शिर भएको मूर्ति पनि प्रदर्शित छ । राष्ट्रिय सङ्ग्रहालयले त्यो मूर्तिलाई दसौँ शताब्दीको शिवको भैरव रूप भनेर तोकेको छ । शिवका संहार मूर्तिहरूमध्ये काठमाडौँमा भैरव मूर्तिहरू मात्र प्राप्त छन् । शिवका भक्तहरूको एउटा सम्प्रदायलाई कापालिक भनिन्छ ।

त्यही सम्प्रदायका भक्तहरूले शिवको यो रूप पूजा गर्ने र आफ्नो आकृति पनि त्यस्तै बनाउने गरेको वृत्तान्त विभिन्न पुस्तकमा पाइन्छ । खप्पर हातमा लिने भएकाले यो शैव सम्प्रदायलाई कापालिक भनेर सम्बोधन गरिएको हो । कपाल मृत्क अथवा मृत्युको प्रतीक हो, जसको सम्बन्ध शिवको विध्वंसक, घोर र रौद्र रूपसँग छ । पाण्डेले कापालिकहरूलाई एउटा सङ्घटित सम्प्रदायभन्दा साधकहरूकै एउटा समुदाय भनेका छन् (पाण्डे, १९७८ : १७४) । कापालिक मतको उत्पत्तिका सम्बन्धमा पुराणमा विभिन्न कथाहरू दिइएको छ । जसमध्ये शिवले भैरव रूपमा ब्रह्माको हत्या गरेकाले त्यही हत्याको प्रायश्चित गर्न कापालिक व्रत धारण गरेको र शिवको त्यही रूपको पूजा गर्ने चलन भएको उल्लेख पनि पाइन्छ । ब्रह्माण्डपुराण र नीलमतपुराणमा भने अलि फरक शिवताण्डवको कथा दिइएको छ । शिवको घोर ताण्डव रूप संसारको विध्वंसक भीषण मार स्वयं वहन गर्न नै भैरव रूपमा उत्पन्न भएको हो । त्यसैले शिवको कापालिक रूप बाहिरबाट डरलाग्दो भए पनि भित्र नरम र उद्देश्ययुक्त छ । कापालिकहरूले शिवले ब्रह्माको शिर छेदन गरेको नक्कल गर्न खोज्दै कहिलेकाहीँ मानिसको शिर काट्न खोजेको घटना पनि सुनिन्छ र त्यस्तै 'सङ्कटदिग्विजय' काव्यमा आचार्य शङ्करलाई घटेको यस्तै दुर्घटनाको उल्लेख छ (पाण्डे, १९७८ : १७४) । यसरी शिवको कापालिक रूप नै भैरव मूर्तिहरूमा देखिन्छ । पाँच शिर र चारवटा हात भएको यो भैरव मूर्तिको ल.चौ. ४१ x २६ छ । अधिकांश मूर्तिको अग्रभाग मात्रै कुँदिएको हुन्छ, यो भैरव मूर्तिमा भने फलकको पृष्ठभागमा पनि शिवको पञ्चमुख प्रस्टसँग कुँदिएको छ । यो मूर्तिको त्रिनेत्र, पुट्ट बाहिर उठेको पेट, मुण्डमालाबाट नै प्रस्टसँग शिवको रौद्र रूप भनेर तोक्न सकिन्छ । दायाँतर्फको अगाडिको हात खण्डित छ, माथिल्लो हातमा परशु छ भने बायाँतर्फको अगाडिको हात वरदमुद्रामा र माथिल्लोमा खण्डित कपाल राखिएको छ । भैरवको दायाँ गोडा आसनबाट तल झारेको र बायाँ गोडा आधा पलेँटी कसेर फक्रेको कमलको फूलमाथि राखिएको छ । यस्तो आसनलाई अर्धपर्यङ्क आसन भनिन्छ । भैरवको दायाँ गोडा नन्दीको ढाडको पछिल्लो भागमा हल्कासँग टेकेको देखाउन कलाकार सफल भएका छन् । नन्दीको मुख खण्डित भए पनि गलामा लगाएको माला भने प्रस्ट छ ।

भैरवको यस मूर्तिमा शिरमा श्रीपेच, दुवै कानमा नागकुण्डल, घाँटीमा नेकलेस, रुद्राक्षमाला र सर्पको जनै, गोडामा सर्पको कल्ली र नाडीमा सर्पकै चुरा कुँदिएको छ । पञ्चमुखी भैरवले वस्त्रको नाममा फुर्का झारेको लगौँटी मात्र लगाएका छन् । सम्पूर्ण मूर्तिफलकलाई ढाक्ने गरेर सबभन्दा बाहिरी खण्डमा अग्निज्वाला र त्यसभन्दा भित्र मानिसको खप्परको आकृति कुँदिएको छ । मूर्तिफलकको बायाँतर्फको भाग अलिकति खण्डित छ, ढुङ्गा फुस्रो र पालिस नलगाएको छ । ढुङ्गा, प्रस्तरकै आधारमा यो मूर्तिको समय दसौँ शताब्दी भन्न सकिन्छ ।

## महाङ्काल भनिएको भैरव मूर्ति

लम्बाइचौडाइ २७" x २९" नाप भएको यो मूर्ति पूर्ण रूपले शिवको रौद्र रूप भैरवको हो । यो मूर्तिफलकको सबैभन्दा माथिल्लो भागमा तोरण छ । तोरणको ठीक तल बीचमा चारवटा शिर र दशवटा हात भएका भैरवले दुवै खुट्टा फटचाएर दुई बेग्लाबेग्लै बेताललाई कुल्चिएर उभिएका छन् । मूर्तिफलकको माथिल्लो भागमा अग्निज्वाला र तल्लो भागमा फक्रिएको ठूलो कमलको फूल कुँदिएको छ, जुन फूलमाथि नै आसन बनाएर भैरव उभिएका छन् । फलकको मध्यभागबाहेक दायाँबायाँ पनि दुईवटा साना कमलका फूल आसनीको रूपमा प्रयोग गरेर चारवटा हात भएका दुई जना स्त्रीशक्तिहरूलाई पनि आयुधसहित कुँदिएको छ ।

मुण्डमाला, नागमाला, घाँटीमा लगाएका कण्ठहार र मूर्तिको बीचको शिर कुँद्न कलाकारले विशेष मिहिनेत गरेको देखिन्छ । बीचको शिरको मुख भित्र खोपेर खोक्रो देखाउन कलाकार सफल भएका छन् । बाटुला आकारका तीनवटा आँखा र कानमा बनाइएका सर्पकुण्डल पनि ज्यादै प्रस्ट र राम्रा छन् । दसवटा हातमा लिएका आयुधमध्ये अधिकांश खण्डित छन् । दायाँ हातका खड्ग र डमरु एवं बायाँ हातका ढाल र त्रिशूल भने प्रस्ट छन् । भैरवले वस्त्रको रूपमा हड्डीको जालीदार जामाको प्रयोग गरेका छन्, जुन निकै कलात्मक छ । भैरवको मुख्य मूर्तिभन्दा माथि कुँदिएको तोरणमा चित्रण गरिएका एक जोडी नाग, एक जोडी मकर, एक जोडी पक्षी सारै नै आकर्षक र कलात्मक छन् । राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित यो प्रस्तरको भैरव मूर्तिको महत्त्वपूर्ण स्थान छ ।

## धातुका भैरव मूर्तिहरू

राष्ट्रिय सङ्ग्रहालयमा ढुङ्गाका बाहेक धातुका सुन्दर, उत्कृष्ट मूर्तिहरू पनि प्रदर्शित छन् ।

## धातुकला

धातुकलाबारे कुरो उठाउँदा यसको प्रविधि र जलप लगाउने तरिकाबारे पनि जानकारी हासिल गर्नुपर्दछ । नेपालमा पाता पिटेर र मैन पगाल्ने विधि अपनाएर धातुका मूर्तिहरू बनाइन्छन्, जसमध्ये अधिकांश मूर्तिहरू मैन पगाल्ने विधि (Lost Wax Process) अनुसार नै कुँदिएका छन् ।

## मैन पगाल्ने विधि

यस विधिमा कलाकारले सबैभन्दा सुरुमा आफूले बनाउन लागेको मूर्तिको स्वरूप मैनमा बनाउँछन् । मैनबाट तयार भएको त्यो मूर्तिलाई पला (अर्थात् मूल नमुना) भन्दछन् । मूर्तिकारलाई एकै किसिमका मूर्तिहरू धेरै बनाउनु छ भने त्यही पला बाटै साँचो (थासा) झिक्दछन् । यस्तो साँचो मैन वा माटोबाट तयार गरिन्छ । खोक्रो र खँदिलो दुवै प्रकारले यस्ता मूर्ति निर्माण गर्न सकिन्छ । आकारमा साना वा ठूला दुवै प्रकारका मूर्तिहरूको प्रभामण्डल, गरगहना, मूर्ति, वा हातखुट्टा, शिर आदि छुट्टाछुट्टै ढालेर पछि जोड्ने प्रचलन पनि छ । सत्यमोहन जोशीले 'धातुका मूर्तिको

विकासक्रम' नामक पुस्तकमा मैन पगाल्ने विधिमा प्रयोग गरिने विभिन्न ज्यावलहरूको नेवारी नाम पनि दिनुभएको छ । मैनबाट तयार भएको ढाँचालाई गोबर र माटोले लिप्ने, पहिलो काम समाप्त भएपछि त्यसलाई फेरि गिचा भन्ने माटो र भूस मिश्रित माटोले फेरि लेपन गर्ने काम हुन्छ । त्यसपछि यो माटोको डल्लोजस्तो मात्रै देखिन्छ । माटोको यस डल्लो मूर्तिलाई आगोमा सेकाई पाको गरिन्छ । त्यसपछि पहिले मुख टालिएको प्वाल खोलिन्छ र त्यसभित्र रहेको मैन सबै बाहिर निकालिन्छ । माटोको डल्लोभित्र तयार भएको साँचो (साय) तयार भएपछि सायलाई पाक मिलाएर साद्ग: (एक किसिमको तापक्रम मिलाइराखेको चुलो अथवा सानो भट्टी) मा पोल्ने काम हुन्छ । उता, यसै सायभित्र खन्याउने धातुलाई मोचा (एक किसिमको माना, पाथी आकारको माटोको भाँडो) मा राखी अर्को चुलोमा आँच दिई चार घण्टासम्म राखिन्छ । यसरी तापक्रम मिलाएर पगालिएको धातु सानो प्वालबाट खन्याइन्छ र सायलाई खासी (ठूलो फराकिलो भाँडो) भित्रको पानीमा डुबाइन्छ । सेलाएपछि माटाका डल्लाहरू फोडिन्छन् । यसपछि मूर्तिकारले त्यस्ता मूर्तिहरूलाई बोचा र सुमिला (सानासाना रेट्ने ज्यावलहरू) ले रेटेर सुन्दर बनाउने कार्य गर्दछन् । यसै क्रममा कर्ता (अर्को रेट्ने ज्यावल) को सहयोगले पनि मूर्ति सुन्दर पार्ने काम गरिन्छ (जोशी, २०३५: ५१-५२) । मूर्ति ढालेर निकालेपछि अन्तिम रूप प्रदान गर्न सुनको जलप लगाउने कार्य पनि सारै क्रमबद्ध रूपमा गरिन्छ ।

**जलप गर्ने विधि**

सुनमा पारो मिसाएर जलप लगाउने कार्य गरिन्छ । आगोमा पोलिएको सुनलाई पिट्दैपिट्दै पातलो पाताजस्तो बनाउनुपर्दछ । त्यो पातालाई सानो-सानो टुक्रा गरेर काट्नुपर्दछ । काटिएको टुक्रा पारो र बालुवा मिसाएको खलमा हालेर पिँध्नुपर्दछ । पानी हाल्दै पिँध्दै गरेर मसिनो लेस्याइलो मलमजस्तो सुन भएपछि बिस्तारै लेपन गर्नुपर्दछ । तामाको ज्यावलले सफा गरिएको मूर्तिमा सुन लेपन गरेपछि कपास वा नाइलनको ब्रसले घोट्नुपर्दछ । अन्तिम रूप दिन र मूर्ति टल्काउन जनावरको सिङबाट बनेको ज्यावल (सिलायकू) को सहायताले मूर्ति सुनजस्तै टल्कन्छ । यसरी धातुको मूर्ति बनाउने र लेपन गर्ने कार्य समाप्त हुन्छ ।

**सत्रौं शताब्दीको भैरव मूर्ति**

एक शिर, छवटा हात भएको भैरवको यो मूर्ति राष्ट्रिय सङ्ग्रहालय धातुकक्षको आकर्षक केन्द्रका रूपमा रहेको छ । खड्ग, पात्र, ढाल लिएको र अगाडिका दुई हात बिन्दुमुद्रामा रहेको भैरवका दुवै खुट्टा दुई बेतालमा टेकेर उभिएका छन् । भैरवको शिरमा लगाइएको मुकुटमा नाग र मनुष्यखप्पर सारै राम्रोसँग कुँदिएका छन् । दायाँ कानमा कुण्डल छैन, बायाँतर्फ ठूलो ढुङ्ग्री छ । गलामा सर्पहार, नाडीमा सर्पको चुरा, पाउमा सर्पकै कल्ली र गलामा सर्पकै माला लगाएको यो भैरव मूर्तिले छातीसम्म ढाक्ने गरेर माथिको वस्त्र र कम्मरभन्दा तल जालीदार जामा लगाएको छ । भैरव मूर्तिको ठीक बीचमा धातुको सानो ढुङ्गे धारा आकृतिको

धातुको धारा पनि कुँदिएको छ । बेतालभन्दा तल्लो खण्डमा फक्रिएको कमलको आसन बनाइएको छ । मूर्तिको लम्बाइचौडाइ २६"x १६" छ भने बाहिरपट्टि बनाएको तोरणको लम्बाइचौडाइ ५०"x ३३" छ । छत्र, छेपुले नाग समातेको, मकर आदि सारै कलात्मक ढङ्गले कुँदिएको छ । राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित धातुको यो भव्य मूर्तिले त्यस कक्षको रौनक बढाएको छ ।

**सिंहमुखकामभैरव**

चौधौँ शताब्दीको सिंहमुखकामभैरवको मूर्ति सधैँ नै चर्चामा आउने मूर्ति हो । सम्पूर्ण फलक अग्निज्वालाले ढाकिएको यो भैरवका सोह्र जोडी हातमा लिएका आयुध सारै प्रस्ट र राम्रा छन् । ढाल, त्रिशूल, डमरु, जपमाला, कपालपात्र, सर्प, मुसा, परशु, पाश, सारै मिहिनेत गरेर बनाइएका छन् । सिंहको शिर भएको यो भैरवको मूर्ति उन्मत्त रूपमा कुँदिएको छ ।

**उन्नाइसौँ शताब्दीको धातुको भैरव मूर्ति**

राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित धातुको एउटा उन्नाइसौँ शताब्दीको शक्तिसहितको मूर्ति पनि उल्लेखनीय छ । छवटा हात भएको यो भैरवले विविध आयुध लिएको छ । खड्ग, त्रिशूल, कपालपात्र, ढाल र नरमुण्ड लिएका एवं बिन्दुमुद्रामा रहेका ती आयुधहरूले मूर्तिको आकर्षण बढाएका छन् ।

**विघ्नान्तकभैरव**

उन्नाइसौँ शताब्दीको सानो, तर सुन्दर विघ्नान्तकभैरवको मूर्ति पनि राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित छ । एक शिर र आठवटा हात भएको यो भैरवको अग्रभागमा गणेश र मुसा पनि कुँदिएका छन् । सानो भए पनि छुट्टै कलाकारिताले गर्दा यो मूर्ति विशिष्ट छ ।

**काठका भैरवहरू**

राष्ट्रिय सङ्ग्रहालयमा प्रदर्शित भैरवका मूर्तिहरूमध्ये काठका मूर्ति सबैभन्दा धेरै छन् । संरक्षणको दृष्टिले काठका कलाकृतिहरू सबैभन्दा नाजुक हुन्छन् । ढुङ्गा, पाको माटो र धातुभन्दा पनि छोटो आयु काठको हुन्छ । सुलभ तरिकाले प्राप्त र सस्तो भएकाले पनि कलाकार काठको कलाकृतितर्फ आकर्षित भएको देखिन्छ । नेपालमा पनि प्राचीन कालदेखि नै काष्ठकला वास्तुकला र विविध कलामा प्रचुर मात्रामा प्रयोग भएको सजिलै अनुमान गर्न सकिन्छ । नेपाली काष्ठकलाबारे चर्चा उठ्दा अनुसन्धानकर्ताहरू कौटिल्यको समयसम्म (तेस्रो शताब्दी इ.पू.) पुगेका छन् । त्यस अर्थशास्त्रमा नेपाली कम्मलको कुरो उठाइएको छ, जुन कम्मल बुन्न पक्कै काठको तानको प्रयोग गरिएको थियो ।

लिच्छविकालका विभिन्न शासकहरूले निर्माण गरेका दरबारहरूको उल्लेख विभिन्न स्रोतका आधारमा थाहा पाउन सकिन्छ । ललितपुरको सुन्धारामा रहेको अभिलेख (संवत् ३४ इ. ६१०) बाट त्यस बेलाको काष्ठकलाबारे केही अनुमान गर्न सकिन्छ । माटिङ्ग्रामस्थित देवमन्दिरलाई न्याउरीमुसाहरूले मुसा मार्नका लागि

त्यसको ढोका, झ्यालहरूको गारो, काठ आदिका स्थानस्थानमा खनेर प्वालहरू पारेबाट जीर्ण भएको, राम्रोसँग जीर्णोद्धार गरेर त्यो पछिसम्म असल अवस्थामा रहिरहोस् भनी पाञ्चालीलाई खेत सुम्पेको कुरा प्रस्तुत शिलालेखमा वर्णन गरिएको छ (जोशी, २०३० : ३०३-४ र वज्राचार्य, २०३० : ३३९)। यो अभिलेखको आधारमा माटिङ्ग्रामस्थित मन्दिरमा प्रयोग भएको काठबारे सङ्केत पाइन्छ। यसभन्दा अगाडि नै विशालनगर टुँडालदेवी मन्दिरको एउटा शिलालेखको प्रसङ्ग उठाउनु ठीक लाग्दछ। 'संवत् ३९७ ज्येष्ठमासे शुक्लदिव २' लेखिएको यो अभिलेखमा संवत्, महिना र तिथिको मात्र उल्लेख गरिएको छ। संवत् प्रस्टसँग कुँदिएको यो मानदेवको पालाको अभिलेख हो भन्ने प्रस्ट हुन्छ। यहाँ यो अभिलेखको कुरो उठाइनुपरेको कारण भने अर्कै छ। नोलीले यस अभिलेखको प्रतिलिपिसँग एक देवीको काष्ठचित्रको पनि प्रतिलिपि छ भनेका छन्। अभिलेखको सम्बन्ध चित्रसँग छ भन्ने देखाइएको छ। त्यो काष्ठचित्र हाल त्यहाँ नभएकाले यस विषयमा विश्लेषण गर्न गाह्रो छ (वज्राचार्य, २०३० : ४८–४९)।

भीमार्जुनदेव र विष्णुगुप्तको थानकोटको शिलालेखमा करको सन्दर्भमा सिंकरको उल्लेख छ। कर आधा माफी गरिदिएको प्रसङ्गमा जसले कार्षापण बुझाउनुपर्दथ्यो, त्यसले ८ पण तिरे पुग्दथ्यो। सोह्र पणको एक कार्षापण हुन्थ्यो (वज्राचार्य, २०३० : ४३५-३७)। वज्राचार्यका अनुसार सिं संस्कृत भाषाको शब्द होइन। किराती, नेवारी, तामाङ, आदि भाषामा यो शब्द अद्यापि प्रचलित छ। यसको अर्थ दाउरा, काठ भन्ने हो। विद्वान्हरूले दैनिक उपयोगको वस्तु काठमा लगाइएको करभन्दा काठको कलात्मक वस्तुमा लगाइएको करको रूपमा सिंकरलाई व्याख्या गरेका छन्। त्यसैले लिच्छविकालभन्दा अघि किरातकालदेखि नै सिंकरको प्रचलन रहेको देखिन्छ। यो काठमा लगाइएको करबारे जोशीले पनि उल्लेख गरेका छन् (जोशी, २०३० : ३९६-३९८)।

नेपाली काष्ठकलाको सन्दर्भमा भारतीय विद्वान् अमित रायले पनि मुक्तकण्ठले प्रशंसा गरेका छन्। नेपाली कलाकारको विशेषतामा धार्मिक र लौकिक दुवै जीवनसँग सरोकार राख्ने वास्तुकलामा सारै सुन्दर र सजीव काष्ठकलाको प्रचुर मात्रामा प्रयोग हो (राय, द आर्ट अफ नेपाल, मिति छैन : ५२)।

### गणेश र चामुण्डासहितको भैरव

राष्ट्रिय सङ्ग्रहालयको काष्ठकला प्रदर्शित कोठामा ऐनाभित्र सुरक्षित यो गणेश र चामुण्डासहितको भैरव कलाका दृष्टिले मात्रै होइन दर्शनका दृष्टिबाट पनि उत्कृष्ट छ। एउटा शिर र दशवटा हात कुँदिएको यो मूर्तिफलकमा हातमा खड्ग, बन्चरो, डमरु, ढाल सारै सुन्दर ढङ्गले कुँदिएको छ। आगोको ज्वालाको आकारमा कुँदिएको मूर्तिफलकको सबैभन्दा बाहिर अग्निज्वाला, त्योभन्दा भित्र मनुष्य खप्पर र बीचको भागमा भैरवको चित्र कुँदिएको छ। खुट्टा फट्याएर उभिएका भैरवको टाङमुनि हात र खुट्टा टेकेर बसेका बेतालको मूर्ति छ। अन्य

केही मूर्तिमा जस्तो भैरवले टेकेर नबसेर यसमा घोडा चढेको जस्तै देखिएको छ । भैरव उभिएको कमलको फूलको माथिल्लो खण्डमा नरमुण्ड पनि कुँदिएको छ । गणेश र चामुण्डा उभिएका आसन भने छुट्टाछुट्टै कमलको फूलका बनाइएका छन् । चार-चारवटा हात भएका गणेश र चामुण्डाका मूर्ति साना भए पनि सुन्दर र आकर्षक छन् । ३१" x २३" नाप भएको यो काठको सुन्दर मूर्तिमा रङ खुइलिसकेको छ, तर जति बाँकी छ त्यसबाट यसको सुरुको सुन्दरता अनुमान गर्न सकिन्छ । शक्ति र गणेशसहित कुँदिएको यो दुर्लभ भैरवको मूर्तिको दायाँतर्फको भाग भाँच्चिएकाले संरक्षणको आवश्यकता छ ।

**शक्ति (कुमारी) युक्त चण्डभैरव**

अठारौँ शताब्दीको यो भैरवको मूर्तिमा अठारवटै आयुधयुक्त हातहरू छन् । सात शिर भएको यो भैरवको मूर्तिकी शक्तिलाई पनि सारै प्रभावकारी ढङ्गले कुँदिएको छ । ३५" x २०" नापको यो मूर्तिफलकको रङरोगन सारै नै आकर्षक ढङ्गले लगाइएको छ । भैरवका दुई पाउमध्ये एउटा जनावर (कुकुर) र अर्को बेतालमा टेकेर उभिएका छन् । देवीको मूर्ति भैरवको मूर्तिभन्दा केही सानो छ । सम्पूर्ण मूर्तिफलक ठूलो फक्रेको कमलको फूलमाथि छ । सम्पूर्ण मूर्तिफलकको बीचबाट ठीक माथि छत्र बनाइएकाले फलक आकर्षक देखिन्छ ।

**मिति कुँदिएको भैरव**

ने.सं. ८४१ (इ.सन्. १७२०) को ठूलो भैरव मूर्ति काष्ठकलाको दृष्टिबाट उत्कृष्ट मूर्ति हो । बेतालका दुवै हातमाथि आसन गरेर उभिएका भैरवका डरलाग्दा आँखा छन् । सम्पूर्ण शरीर एउटै काठमा कुँदिएको भए पनि पाखुराभन्दा तल्लो भागमा भने छुट्टै काठको टुक्रा जोडिएको छ । हातमा विविध आयुधहरू खड्ग, डमरु, त्रिशूल, ढाल र नरमुण्ड प्रस्ट चिनिने अवस्थामा छन् । सम्पूर्ण फलकमा कीराले प्वाल पारेको प्रस्टै देखिन्छ । मूर्तिको संरक्षणको आवश्यकता छ ।

**अठारौँ शताब्दीको भैरव**

आठवटा हात भएको यो काठको भैरवका तीनवटा हात सग्ला र अरू खण्डित छन् । भैरवका दायाँबायाँ चार-चारवटा हात भएका विविध आयुध लिएका रक्षकहरू पनि सारै मिल्दो ढङ्गले कुँदिएका छन् । भैरव उभिएका बेतालले भने दुवै हातखुट्टा टेकेका छन् ।

फक्रिएको दोहोरो कमलको फूलमाथि सम्पूर्ण मूर्तिफलक कुँदिएको छ । भैरवका विभिन्न अङ्गमा सर्पको कुण्डल, हार, बाजु, चुरा, कल्ली सारै नै आकर्षक ढङ्गले कुँदिएका छन् । मूर्तिको पृष्ठभागमा हात्तीको छाला प्रस्टसँग देखाउन बनाइएको शिर ज्यादै नै प्रभावकारी छ । यो फलकको सबैभन्दा माथिल्लो भागमा सारै कलात्मक तोरण कुँदिएको छ । तोरणको ठीक बीचमा छवटा हात भएको गरुडको सुन्दर मूर्ति कुँदिएको छ । गरुडको सबैभन्दा अगाडिको हात अञ्जलिमुद्रामा छ भने अन्य दुई हात अभयमुद्रामा र बाँकी दुई हातले मनुष्य आकृतिमा कुँदिएका नाग र

नागिनीका एकएक हात समातेका छन् । नाग र नागिनीका शिरमाथि पाँच-पाँचवटा नागफणा आकर्षक ढङ्गले कुँदिएका छन् । नेपालमा लिच्छविकालदेखिका मूर्ति अध्ययन गर्दा के देखिन्छ भने गरुडको अनुहार चराको जस्तै हुबहु बनाउने अथवा मनुष्य आकृतिमा बनाउने । यो भैरवको मूर्ति तोरणमा भने चराकै आकृति कुँदिएको छ । नागनागिनीभन्दा तल्लो खण्डमा दुवैतर्फ हातमा माला लिएका विद्याधर पनि कुँदिएका छन् । विद्याधरभन्दा तल गोही कुँदिएको छ, जुन दायाँतर्फ खण्डित छ । फलकमा मूर्ति कुँदिसकेपछि नचाहिने काठ खुर्किएर फालिएको छ, जसले गर्दा मूर्ति हावादारी र आकर्षक देखिन्छ । अन्य भैरवको मूर्तिको दाँजोमा यो मूर्तिमा सौम्यपन बढी देखिन्छ । यो भैरवको मूर्तिको आँखीभौं छरिएको र डरलाग्दो छैन । संक्षिप्तमा भन्नुपर्दा यो काष्ठकलाको सारै सुन्दर भैरव मूर्ति हो ।

**भित्तामा झुन्डचाइएको मखुन्डो रूपको भैरव**

अठारौं शताब्दीको काठको मखुन्डो रूपको शिर मात्रै कुँदिएको भैरव भित्तामा झुन्डचाइएको छ । आगोको ज्वालाजस्तो कपाल, पाँच खण्ड भएको मुकुट सारै नै सुन्दर छन् । शिरको मुकुटमा नाग र मानव खप्पर, कान र घाँटीमा नागकै गहना सारै सुहाउँदो ढङ्गले कुँदिएका छन् । त्रिनेत्र कुँदिएको यो भैरवको जुँगा, आँखीभौं, आगोको ज्वालासरि माथितिर गएको कपाल निकै प्रभावकारी छन् । मखुन्डोको रूपमा रहेको यो भैरवको कण्ठहार र त्यसमाथि नागको माला पनि मिल्दो ढङ्गले तयार गरिएको छ ।

**मृत्तिकाकला**

ढुङ्गा, काठ र धातुबाहेक माटोका विविध कलाकृतिहरू पनि राष्ट्रिय सङ्ग्रहालयमा सङ्कलित र प्रदर्शित छन् । कलाको इतिहासमा सबैभन्दा प्राचीन कलाकृति नै माटोबाट निर्मित छन् । नेपालको तराई क्षेत्र (तिलौराकोट, बन्जराही, पैसिया) मा प्राप्त विभिन्न आकारका मूर्तिहरूको समय इ.पू. दोस्रो शताब्दीसम्म तोकिएको छ । नेपालको हिमाली क्षेत्र, तराई क्षेत्र र काठमाडौं उपत्यका सबैतिर नै माटोको मूर्ति बनाउने कलाले विकास गरेको देखिन्छ । धूमवाराही र हाँडीगाउँमा उत्खनन गर्दा भेटिएका विभिन्न मूर्तिहरूको आधारमा नेपालमा कलाकारले सर्वप्रथम माटो नै रोजेको प्रस्ट हुन्छ । माटोका ३ प्रकारका मूर्तिहरू प्राप्त छन् । (१) कालो माटो, (२) भट्टीमा पोलिएको र (३) मूर्तिको भित्र फलाम वा काठको ढाँचा राखेर बनाइएको । नेपालमा माटोका मूर्तिबाहेक माटोको मन्दिर, मन्दिरका तोरण र झ्याल पनि निर्माण गरेको प्राप्त भएका छन् । पाटनको महाबौद्ध मन्दिर, भक्तपुरको गणेश देगुक्षेको झ्याल र तोरणहरू उदाहरणको रूपमा देखाउन सकिन्छ । माटोको मूर्तिभित्र फलाम वा काठको घोचो राखेर बनेका मूर्तिहरूको भित्री बनोटसमेतको चित्र एम. स्लुसरले आफ्नो एउटा लेखमा वर्णन गरेकी छन् (M.S. 1996 : 22-33) । उनको त्यो लेखको आधारमा विदेशमा प्रदर्शनमा रहेका विभिन्न माटोका मूर्तिहरूबारे धेरै कुरा विस्तृत रूपमा थाहा पाउन सकिन्छ ।

## माटोको बवनभैरव

लम्बाइ २६" र गोलाइ १३०" भएको मखुन्डोको पृष्ठभागमा सानो घैँटो भएको यो बवनभैरवको मूर्ति पनि वर्णनयोग्य छ। झट्ट हेर्दा घ्याम्पोको रूपमा रहेको यो माटोको मूर्तिको धार्मिक र सामाजिक दुवै महत्त्व छ। उन्नाइसौँ शताब्दीमा बनेको यो मूर्तिको कलापक्ष पनि प्रशंसनीय छ। ठूलो गोलोगोलो त्रिनेत्र, लामो कान, फुकेको नाक, खोलेको मुखमा दाँत र बङ्गारा, झ्वाम्म फैलिएको आँखीभौं, मनुष्यको शिर र नागको फणाले सुशोभित मुकुटले गर्दा यो मूर्ति आकर्षक देखिन्छ।

काठमाडौं उपत्यकामा भैरवको मूर्तिपछाडि घ्याम्पोमा जाँड, रक्सी भरेर विशेष उत्सवमा नली वा पाइपद्वारा सर्वसाधारणलाई समेत खुवाउने चलन रहेको कुरा विभिन्न जात्रा र विशेष गरेर इन्द्रजात्रामा प्रस्ट रूपमा देखिन्छ। त्यस्तै जात्राको स्मरण यो बवनभैरवको मूर्तिले गराउँछ।

## पाटनको सङ्ग्रहालयका भैरव मूर्तिहरू

सुन्दर कलाकृतिको सहरको नामले प्रसिद्धि पाएको ललितपुर (पाटन) साँच्चै नै राम्रो छ। मल्लकालीन प्राचीन दरबारलाई जीर्णोद्धार गरेर पाटन सङ्ग्रहालय खोलिएको छ। अस्ट्रिया सरकारको सहयोगमा संरक्षण गरिएको यो पाटन दरबारले चोला नै फेरेको छ। २०५५ सालमा उद्घाटन भएको यो सुन्दर सङ्ग्रहालय कलाकृति सङ्कलन र प्रदर्शन दुवैमा नमुनाको रूपमा छ।

मध्यकालमा चौकोट दरबारको नामले चिनिने पाटनको यो राजदरबार विभिन्न मल्लराजाहरूको समयमा खण्ड थपिने र जीर्णोद्धार गरिने कार्य पार गर्दै आज यो रूपमा आएको छ। पाटन दरबारको पुरानो र गौरवमय इतिहास छ। विदेशी विद्वान् मेरी स्लुसरले पाटन दरबारको वास्तुकलाको प्रशंसा गर्दै यसको इतिहास आदरणीय रहेको बताएकी छन् (स्लुसर, १९९८ : १९९)। पाटन दरबारबारे विभिन्न विद्वान्हरूले मुक्तकण्ठले प्रशंसा गरेका छन्। 'स्वर्गको एक टुक्रा', 'सुन्दर कलाकृतिको सहर' आदि विशेषणले सिँगारिएको यो सहरको प्रशंसा ल्यान्डनले पनि यसरी गरेका छन् - 'पाटनको दरबारक्षेत्र शायद विभिन्न मन्दिर र देवताहरूको सारै सुन्दर थलो हो। यस थलोलाई पूर्वका मानवको गौरवको कृति मान्न सकिन्छ। यति सानो ठाउँमा यस्ता सुन्दर वास्तुकलाको तालमेल गर्नु पूर्वीय कलाको प्रशंसनीय कार्य हो' (Landon, 1928 : 208)।

## पाटन, सङ्ग्रहायलमा झुन्ड्याइएको ढुङ्गाको भैरव शिर

काठमाडौंमा भैरवका शिर मात्रै र पूर्ण शरीर दुवै प्रकारका मूर्तिहरू प्राप्त छन्। पाटन सङ्ग्रहालयमा प्रस्तरको भैरवको शिर प्रदर्शन गरिएको छ। तीनवटा गोलागोला आँखा, फुकेको नाक, आगोको ज्वालाजस्तै माथितिर गएको कपाल, कपाल बाँध्न नागकै रिबन, कानमा नागकुण्डल आदि अरू भैरवमा देखिने विशेषता यसमा पनि देखिएका छन्। काठमाडौंमा काठ र धातुका भैरव मूर्तिहरूको दाँजोमा प्रस्तरका मूर्तिहरू कम छन्। त्यसले सत्रौं, अठारौं शताब्दीको यो भैरव शिरको

छुट्टै महत्त्व छ । इन्द्रजात्राको अवसरमा प्रदर्शन गर्न कुँदिएका मूर्तिहरू काठमाडौँमा थुप्रै छन् ।

### पाटन सङ्ग्रहालयको तोरणसहितको भैरव

यस सङ्ग्रहालयमा दसवटा हात भएको तोरणसहितको सारै सुन्दर भैरवको ढुङ्गाको मूर्ति प्रदर्शन गरिएको छ । यो मूर्तिको बनोट र प्रस्तरको स्तर हेर्दा सत्रौँ शताब्दीमा बनेको देखिन्छ । भैरवको यो मूर्तिमा हातहरू सबै नै खण्डित भएकाले आयुधबारे केही भन्न सकिँदैन, तर खड्ग, ढाल र खट्वाङ्ग भने प्रस्ट छन् । भैरवको मूल शिरमाथि एउटा सानो आकारको अर्को शिर पनि कुँदिएको छ । अरू भैरवको मूर्तिमा जस्तै यसमा पनि कानमा सर्पको कुण्डल, छातीमा सर्पकै कण्ठहार, सर्पकै हार, सर्पकै चुरा र कल्ली बनाइएको छ । सामान्यत: भैरवको छातीभन्दा माथि नाङ्गो र तल जालीदार जामा लगाइएको हुन्छ । यो मूर्तिमा पनि त्यस्तै छ । सम्पूर्ण मूर्तिफलक अग्निज्वालाले ढाकिएको छ । मूर्तिफलकको सबैभन्दा तल दुई जना साना आकारका बेताल छन् । ती साना बेतालभन्दा माथि भैरवले दुवै खुट्टाले कुल्चिएका दुई मझौलाखाले राक्षस छन् । तर ती दुवै राक्षसको शिर छैन । भैरवको ठीक तल रहेको शिर नभएको राक्षसले आफ्नो कम्मरमा भएको तरबार झिक्न खोजेको सारै प्रभावकारी ढङ्गले दर्साइएको छ । भैरवका दायाँबायाँ दुइटा बेग्लाबेग्लै कमलको आसनी बनाएर त्यसमा सिंहिनी र बघिनी नाच्न लागेका छन् । बघिनी पनि कुँदिएकाले यो बढी आकर्षक देखिएको छ । यो मूर्तिफलकको सबभन्दा बाहिरी खण्डमा बनाइएको तोरण यो मूर्तिको अर्को आकर्षक पक्ष हो । यो तोरणको बीच भागमा पनि पखेटा फिँजाएको गरुडले दुवै नङ्ग्राले मनुष्याकृतिमा प्रस्तुत गरिएका नाग र नागिनीलाई समातेको छ । अधिकांश तोरण कुँद्दा बीचमा आधा अनुहारको छेपु वा गरुड कुँद्ने चलन छ । गरुडले सर्प समातेको दृश्यले भने महाभारतमा भएको कद्रु र विनताका छोराहरू (नागहरू र गरुड) को सम्झना गराउँछ । महाभारतको आदिपर्वमा गरुड र नागको दुस्मनीको कथा प्रस्तुत छ । कश्यप ऋषिकी पत्नी विनताबाट पक्षीराज गरुड र अर्की पत्नी कद्रुबाट नागहरूको जन्म भएको थियो । एकपल्ट सूर्यको घोडाको पुच्छरको रङबारे विनता र कद्रुको बाजी पऱ्यो । विनताले पुच्छर सेतो छ भनिन्, उता कद्रुले भने कालो भनेर ढिपी गरिन् । हार्नेले दासी हुने सर्तमा बाजी ठोके । सूर्यको घोडाको पुच्छर सेतो भएको हुँदा आफ्नी आमाको आज्ञाअनुसार कालो बनाउन केही नागहरू आकाशतिर गए भने वासुकि आदि नागले छलकपटको सहारा लिन नमानेपछि आफ्नै आमाद्वारा यज्ञमा होमिएर प्राण त्याग्न पर्ने सराप पनि पाए । जेहोस् बाजीमा विनताको हार भयो । गरुडले आफ्नी आमालाई दासत्वबाट मुक्त गर्न नागहरूको सर्तअनुसार स्वर्गबाट अमृत हरण गरेर ल्याए । गरुडले ल्याएको अमृतघडा नदीको किनारमा कुशमाथि राख्नेबित्तिकै इन्द्रले स्वर्गमै लिएर गए । अमृत खान नपाएको झोकमा नागहरू गरुडसँग रिसाए भने गरुड पनि आफ्नी आमालाई झूटो बाजीद्वारा दासी बनाउन प्रयत्न गरेकाले नागहरूसँग

क्रोधित भए । त्यसैले गरुडले नाग (सर्प) देख्नेबित्तिकै नङ्ग्राले समातिहाल्छन् (महाभारत, आदिपर्व: १६/२०) । नागवंश भएजस्तै गरुड पनि एउटा जाति भएको र दुवैको दुस्मनी भएको सङ्केत हाम्रा तोरणबाट अनुमान गर्न सकिन्छ । गरुड र नागको दुस्मनी देखाउन मूर्तिकला, चित्रकलामा गरुडले आफ्नो खुट्टाको नङ्ग्राले नाग च्यापेको वा चुच्चाले समातेको देखाइन्छ (पौड्याल, २०५७ : ४८) ।

त्यसैले पाटनको तोरणसहितको यो भैरव मूर्तिले पनि महाभारतको आदि पर्वमा वर्णित त्यो कथाको सम्झना गराउँछ ।

पाटन सङ्ग्रहालयमा मूर्तिफलकबाहेक भैरवको शक्तिसहितको टुँडाल पनि प्रदर्शन गरिएको छ । पाटन सङ्ग्रहालयमा प्रदर्शित शक्तिसहितको यो भैरवको टुँडाल बेग्लैखालको कलाकृतिले गर्दा चर्चित छ । टुँडालको सबैभन्दा तल्लो खण्डमा ठूलो नाग (शेष) ले तानेको रथमा ब्रह्मा, विष्णु र इन्द्र पनि देखाइएको छ । यो भैरवको टुँडालले धार्मिक सहिष्णुताको झलक प्रदान गरेको छ ।

**भक्तपुर, लालबैठकको भैरव**

शक्तिसहित भैरवको एउटा सुन्दर प्रस्तरको मूर्ति भक्तपुरको सङ्ग्रहालयको लालबैठकमा प्रदर्शन गरिएको छ । शिव र विष्णु दुवै देवका आयुधहरू यो भैरव मूर्तिमा कुँदिएकाले 'भैरवरूप विष्णु' नामकरण गरिएको छ । मालतीचोकमा स्थापना गरिएको यो शक्तिसहितको भैरव मूर्ति २०४८ सालमा मात्रै लालबैठकमा ल्याएर प्रदर्शन गरिएको हो ।

यो मूर्तिफलकको सबैभन्दा तल्लो खण्डमा पहाड, अग्नि, पानीमा माछा, कछुवा, सर्प, गोही, शङ्ख र बनेलको आधा शरीर डुबाएर पौडी खेल्दै गरेको दृश्य दर्साइएको छ । पानीभन्दा माथि फक्रेको कमलको फूलको आसनीमा शक्तिसहितको भैरव कुँदिएको छ । भैरवका पाँचवटा शिरमध्ये बीचको तुलनामा दायाँबायाँ, माथि र सबैभन्दा माथि क्रमश: सानो आकारको कुँदिएको छ । अनुपात मिलाएर कुँदिएको यो भैरवको मुख्य शिरमा चन्द्रमा र अन्य सहायक शिरमा भने सर्प र मनुष्यको खप्पर देखाइएको छ । तीनवटा गोला-गोला आँखा, छरिएको आँखीभौँ, आँ गरेर बाएको मुखबाट निस्केको सानो जिब्रो सबै वस्तु नै सारै स्वाभाविक ढङ्गले कुँदिएको छ । कानमा सर्पको कुण्डल, नाडीमा सर्पकै चुरा र गोडामा सर्पकै कल्ली, नरमुण्डमाला, पुष्पमाला र घाँटीमा नेकलेस पनि कलात्मक ढङ्गले कुँदिएको छ ।

भैरवका हातमा विविध आयुधमा शङ्ख, चक्र, खट्वाङ्ग, बन्चरो, डमरु, कमल, गट्टा, गदा, पद्म, कपालपात्र, जपमाला छन् भने एउटा हात वरदमुद्रामा र अर्कोले हात्तीको छाला समातेको छ । भैरवको नाइटोभन्दा तल हड्डीको जालीदार वस्त्र प्रयोग गरिएको छ । फणाको रूपमा बनाइएका सातवटा नागमध्ये बीचको नागको शिरमा मुकुट पनि आकर्षक ढङ्गले कुँदिएको छ ।

आठवटा हात र चारवटा शिर भएकी देवीले कम्मरभन्दा तल हड्डीको जामा र सुरुवाल लगाएकी छन् भने माथिल्लो भागमा वस्त्रको प्रयोग छैन ।

आठवटा हातका खट्वाङ्ग, बन्चरो, डमरु, कमलगट्टा (वीज), कपालपात्र, जपमाला, अंकुश आदि विविध आयुधहरू सुन्दर ढङ्गले कुँदिएका छन् । मूर्तिफलकको सबभन्दा बाहिर ज्वालावलिको एक लहर, त्यसभन्दा भित्र फूल र पातको अर्को छेउ सारै मिलाएर कुँदिएका छन् ।

देवीका विभिन्न अङ्गमा प्रयोग भएका गहनाहरूको बुट्टा पनि सारै मेहनत गरेर बनाइएको छ । लम्बाइचौडाइ ६० x ४७ सेन्टिमिटर र गोलाइ १६० सेन्टिमिटर भएको यो मूर्ति भक्तपुरमा भएका भैरवका सुन्दर मूर्तिहरूमध्ये एक हो ।

**विदेशको अज्ञात व्यक्तिको सङ्ग्रहमा भएको भैरव मूर्ति**

धातुको पाता पिटेर बनाइएको एउटा आकर्षक मूर्तिको चित्र पी.पालले प्रकाशित गरेका छन् । पुस्तकका चित्रमा तीनवटा शिर मात्र देखिन्छ । पालले चारवटाको वर्णन गरेका छन् । छवटा हात, दुईवटा खुट्टा, सर्पको जनै, सर्पकै चुरा, व्याघ्रचर्मको वस्त्र लगाएका भैरवले मुख आँ गरेकाले डरलाग्दो भाव देखाउन कलाकार सफल भएका छन् । ठाडोठाडो कपाल, निधारमाथि तीनवटा खप्पर, ठूलो पेट, हाडको वस्त्र आदि सबै अन्य भैरव मूर्तिमा भएका विशेषता नै हुन् । भैरवको हातमा कमलको फूल देखाउनु भने यो मूर्तिको नौलो पन हो ।

१६. १/२ इन्च अग्लो धातुको भैरवको मूर्तिको समय पी.पालले अठारौँ शताब्दी तोकेका छन्, जुन बनोटको ढङ्गबाट उपयुक्त नै लाग्दछ ।

**लस एन्जल्स काउन्टी सङ्ग्रहालयको शक्तिसहितको भैरव**

इ.स. १७८४ को मिति र अक्षर पनि कुँदिएको धातुको शक्तिसहितको भैरवको मूर्ति लस एन्जल्स काउन्टी म्युजियम अफ आर्टमा प्रदर्शन गरिएको छ । पाँचवटा शिर भएको यो भैरवको ठाडोठाडो कपालमा चन्द्रमा, सर्प र नरखप्पर दर्साइएको छ । यो मूर्तिफलकको कमलपादपीठको बीचमा पनि ठूलो आकारको भैरवशिर मात्रै बनाइएको छ । काठमाडौँमा भैरवको शिर मात्रै पूजा गर्ने व्यापक चलन छ, त्यसैको प्रतिनिधित्व यो मूर्तिमा भैरवशिरले गरेको पाइन्छ । १५.३/४ इन्च अग्लाइ भएको यो भैरव मूर्तिकी शक्तिलाई भने अलि सानो आकारमा बनाइएको छ । अठारवटा हातमा विविध आयुध लिएका भैरवका दुवै पाउ भने घोप्टो परेर घिस्रिन लागेका दुई मानवाकृति (अपस्मार पुरुष) माथि टेकिएका छन् । भैरवको अरू मूर्तिमा जस्तै यसमा पनि नरमुण्डमाला, सर्पको माला, सर्पकुण्डल, सर्पको बाजु कुँदिएका छन् । सिंहमाथि नृत्यमुद्रामा उभिएकी भैरवकी शक्तिले पनि खप्परकै माला पहिरिएकी छन् । मिति भएको मूर्ति भएकाले यो उल्लेखनीय छ ।

# अध्याय : नौ
# निष्कर्ष

सनातन (हिन्दू) धर्मको प्राचीनता र व्यापकताबारे विभिन्न स्वदेशी र विदेशी विद्वान्हरूले थुप्रै ग्रन्थ, लेख रचना गरेर प्रकाशित गरेका छन् । ती सबैको अभिव्यक्ति त यो सानो पुस्तकमा प्रस्तुत गर्न सकिँदैन, तर सबैले एकै स्वरले वर्णन गरेका महादेवको परोपकारी कार्य भने औँल्याउन सकिन्छ । समुद्रमन्थनबाट प्राप्त अमूल्य रत्न र विविध औषधिसँगसँगै विश्वलाई नै नष्ट पार्ने कालकूट विष पनि निस्किएपछि त्यो विषबाट विश्वको रक्षा गर्न प्रवर (सर्वश्रेष्ठ), सर्वात्मा (सबैको आत्मा), वीजवाहन (जीवको संस्काररूपी वीज वहन गर्ने), अभिवा: (नमस्कार गर्न योग्य) भएका शिवले जसरी तत्पर भएर यो परोपकारी कार्य गरे त्यसको प्रशंसा शिवभक्तले मात्रै हैन, जुनसुकै धर्मावलम्बीहरूले पनि गरेका छन् । त्यस्ता वन्दनीय शिवका हजारौँ नाम, नामअनुसारका काम र उनले विभिन्न परिस्थितिमा लिएका अवतारको शिवपुराण, महाभारत र रामायणमा पनि उल्लेख छ ।

सत्ययुगका विख्यात ऋषि तण्डीद्वारा हजार नामले स्तुति र प्रार्थना गरिएका शिवको संहारस्वरूपमध्ये उमामहेश्वर र भैरवका मूर्तिहरूबारे चर्चा यो अनुसन्धानात्मक पुस्तकमा परेको छ । हिन्दू धर्ममा ब्रह्मा स्रष्टा, विष्णु पालनकर्ता र महेश्वर (शिव) संहारकारी देवताको रूपमा प्रतिस्थापित छन्, तर पनि शिवभक्तहरू शिवलाई संहारकर्ता मात्रै नभनेर जगत्को उत्पत्तिको कारण पनि मान्दछन् । त्यसैले महाभारतमा ऋषि तुण्डीले शिवको प्रार्थना, स्तुति यसरी गरेका छन्- साङ्ख्यशास्त्रका विद्वान् पर, प्रधान, पुरुष, अधिष्ठाता र ईश्वर भनेर जसको गुणगान गरिन्छ; योगीजन जसको चिन्तनमा लागिरहन्छन्, विद्वान् पुरुष जसलाई जगत्को उत्पत्ति र विनाशको कारण सम्झन्छन्; देवता, असुर र मुनिमध्ये श्रेष्ठ, उनै अजन्मा, अनादि, अनन्त, अनघ र अत्यन्त सुखी, प्रभावशाली ईश्वर महादेवजीको शरण पर्दछु ।

**यं पठन्ति सदा सांख्याश्चिन्तयन्ति च योगिनः ।**
**परं प्रधानं पुरुषमधिष्ठातारमीश्वरम् ॥४॥**
**उत्पतौ च विनाशे च कारणं यं विदुर्बुधाः**
**देवासुरमुनीनां च परं यस्मान्न विद्यते ॥ ५ ॥**

**अजं तमहमीशानमनादिनिधनं प्रभुम्**
**अत्यन्तसुखिनं देवमनघं शरणं व्रजे ॥ ६ ॥**
(महाभारत, अनुशासन पर्वअन्तर्गत दानधर्म उपपर्व)

वैदिककालमा रुद्रको नामले परिचित शिव बिस्तारैबिस्तारै विनाशकारी देवताबाट कल्याणकारी र देवताका पनि देव महादेवका नामले चिनिन थाले र परिवार समालेर शान्त भावमा पुकारिन थाले । यसरी एउटै देवताको नाम, रूप र कार्यमा पनि क्रमिक विकास र परिवर्तन भएको त भोलेबाबा शिवको मात्रै हो ।

विभिन्न वेद र पुराणहरूमा वर्णन गरिएका शिवको स्वरूप नै मूर्ति र चित्रमा दर्साइएको छ । शैव दर्शन र शैव मान्यताहरूको झलक नै शिवका सौम्य, रौद्र, कल्याणकारी र नटराज मूर्तिमा देख्न पाइन्छ ।

शिवको भैरवरूपको जन्मबारे पुराणहरूमा बेग्लाबेग्लै कथा पाइन्छ । विभिन्न धार्मिक ग्रन्थहरूमध्ये पुराणबारे पद्मपुराणमा यसरी वर्णन गरिएको छ– 'ब्रह्माले समस्त शास्त्रभन्दा पहिला पुराणको स्मरण गरे । यो संसारमा सर्वश्रेष्ठ ज्ञानको उत्पादक र प्रचारक हो ।' सृष्टि, प्रलय, राजवंश, मन्वन्तर, वैशानुचरित, पालन, कर्म र वासनाको वर्णन, भगवान्का पृथक्पृथक् कीर्तन आदि विषयमा पुराणमा वर्णन पाइन्छ । शिवपुराणको शतरुद्रसंहितामा सद्योजात, वामदेव, तत्पुरुष, अघोर र ईशान नामक पाँच अवतारको वर्णनका साथसाथै अष्टमूर्तिहरू शर्व, भव, रुद्र, उग्र, भीम, पशुपति, ईशान, महादेवको उल्लेख गरिएको छ । रुद्रसंहितामा नन्दीश्वरले भैरवावतारको रूप लिएको वर्णन गरिएको छ । त्यहाँ शिवपुराणमा वर्णन गरिएअनुसार मार्गशीर्षमासको कृष्णाष्टमीका दिनमा कालभैरवको उपवास गरेर जो रातमा जागा बस्दछ, त्यो समस्त पापबाट मुक्त हुन्छ । प्राणीहरूले लाखौं जन्ममा गरेको पाप कालभैरवको दर्शनमात्रले पनि मोचन हुने कुराको उल्लेख शिवपुराणमा छ । शिवपुराणमा त यतिसम्म भनिएको छ कि जो मानिस वाराणसीमा बसेर कालभैरवको भजन गर्दैन, उसको पाप शुक्लपक्षको चन्द्रमा जस्तै वृद्धि भएर जान्छ (संक्षिप्त शिवपुराण, सं. २०५२ : ३७८-९) । यसरी भैरवावतारको महिमाको उल्लेख शिवपुराणमा छ ।

विभिन्न अध्ययन, अनुसन्धान गर्दा के प्रस्ट हुन्छ भने भैरव भन्ने शब्द प्राचीन भए पनि शिवको भैरव रूपको पूजा गर्ने परम्परा भने ज्यादै पुरानो छैन । उत्तर र मध्यभारतका साथै विशेष गरेर मुम्बई र काशीमा भैरवको पूजा प्रचलित छ । नेपालमा पनि भैरवको उल्लेख लिच्छविकालको शिलालेखमा आएको छ । डा. रेग्मीले पशुपति मन्दिरकै आँगनमा भएको लिच्छविकालीन खण्डित अभिलेखमा 'महाभैरव' को नाम उल्लेख भएको चर्चा गरेका छन् । आठौं शताब्दीको अनुमानित त्यो शिलालेखबाट शैव तान्त्रिक वा कापालिक परम्परामा शिवलाई भैरवको रूपमा मान्यता दिएको र भैरवको मूर्ति मन्दिर थापेर सो अभिलेख थापिएको देखिन्छ (रेग्मी, २०४७ :७) ।

साँगाको शिलालेखमा अंशुवर्माले ग्रामवासीहरूलाई कुशलमङ्गल सोधेर तिनीहरूको दु:खलाई महसुस गर्दै तिनीहरूले करको रूपमा सरकारलाई बुझाउँदै आएका विभिन्न वस्तुहरू अब बुझाउनु नपर्ने निगाह भएको उल्लेख गरिएको छ । यस शिलालेखमा शिवको रौद्र रूपको प्रार्थना यसरी गरिएको छ :

१. *कर्णालिङ्गाररौद्रश्वस दहिपवनव्यस्तपर्यस्त (के) शं*

२. *प्रत्य ग्रच्छेदतापा (न्वि) तरुधिर शिरोमालभा*... (।)

३. *उच्चैर्मुक्ताट्टहासम्परिविगलद सृङ्नागचर्मोत्तरी (यं)*

४. *पायात्तद्रू पमैशं हिमगिरितनयाभीतभीतेक्षितं व* :... (।।)

पशुपति, छत्रचण्डेश्वर अभिलेखबाट पनि शिवको रौद्र स्वरूप (मुण्डशृङ्खलिक) को पूजाआराधना गरिने कुरा थाहा पाइन्छ । आचार्य भगवत्प्रनर्द्दनप्राणकौशिकद्वारा स्थापित छत्रचण्डेश्वरको अभिलेखबाट श्री जिष्णुगुप्तको विजयराज्यमा भगवान् छत्रचण्डेश्वर र .... कग्रामस्थित धारा टुटफुट भएमा मरम्मतका लागि मुण्डशृङ्खलिक पाशुपत सम्प्रदायका आचार्यहरूको सङ्घलाई खेत प्रदान गरेको उल्लेख छ ।

भारतका विभिन्न ठाउँमा शैव धर्मका हाँगाबिँगाहरू फैलिएका थिए । नेपालमा पनि पाँचौं शताब्दीदेखि नै शैव धर्मका उपसम्प्रदायहरू प्रचलनमा आइसकेका थिए । कापालिक सम्प्रदाय, कालामुख सम्प्रदाय मान्ने अनुयायीहरूले शिवको भैरवस्वरूपको पूजाआराधना गर्ने गर्दछन् । यसबाट पनि रहस्यमय पूजा, अनुष्ठानहरू गर्ने शैव धर्मका अनुयायीहरूको रूपमा भैरवको प्रसिद्धि थियो । पुरातात्त्विक प्रमाणका आधारमा शिवको उग्रस्वरूप भैरवको पूजा लिच्छविकाल र अझ त्योभन्दा अघिदेखि नै भएको पाइन्छ ।

लिच्छविकालमा भैरवस्वरूपको पूजाआराधना गर्ने चलन भए पनि व्यापक रूपमा भने थिएन । मल्लकालमा भने भैरवको स्वरूप मन्दिर, टुँडाल, तोरण, मन्दिरको कुना आदि विभिन्न स्थानमा देखिन थाल्यो । काठमाडौं उपत्यकाका अधिकांश प्रसिद्ध भैरवस्थानहरूमा भैरवको घाँटीसम्मको शिर र दुई हात मात्रै कुँदिएको पाइन्छ । मन्दिरका टुँडालहरूमा भने शक्तिसहितको भैरव मूर्ति कुँदिएको छ । पाटन, कुम्भेश्वर मन्दिर र मङ्गलबजारको भीमसेन मन्दिरको शक्तिसहित भैरवका टुँडालहरू उच्च कलाका लागि पनि प्रसिद्ध छन् । पाटन, भीमसेन मन्दिरको टुँडालमा त भैरवको नामसँगै दाताको नाम पनि भएकाले इतिहास र कलाको क्षेत्रमा एउटा नयाँ आयाम नै थपिएको छ ।

नेपाली कलाकौशलका विभिन्न वस्तुमा भैरवको आकृति कुँदिएबाट यस सम्प्रदायका प्राचीनता र व्यापकताबारे सहजै अनुमान गर्न सकिन्छ । मन्दिर र विहारको ढोकामाथि राखिने तोरणमा कुँदिएको शिरलाई भैरव मान्ने विद्वान् पनि छन् । जोन के. लकले तोरणमा कुँदिने गरुड र भैरवको उल्लेख गरेका छन् । उनले तोरणमा कुँदिएका गरुड हिन्दू धर्मको प्रभावस्वरूप र भैरव बौद्ध धर्मको प्रभाव भनेर वर्णन गरेका छन्, तर त्यो साँचो लाग्दैन । मुखमात्रै कुँदिएका भैरवका मूर्ति

उपत्यकाका थुप्रै हिन्दु मन्दिरहरूमा छन् । स्वयं जोन के. लकले पनि आफ्नो कुरा आफैं काटेर भक्तपुर, सूर्यविनायक मन्दिरको तोरणमा कुँदिएको आकाशभैरवको उल्लेख गरेका छन् ।

कापालिकहरूले शिवको जुन रूपको पूजा गर्दथे त्यो रूप नै भैरवको रूप हो । कापालिक रूपका भैरवको ध्यान उनकी शक्ति भैरवी वा कराला चामुण्डासँगै गर्ने परम्परा थियो । आ.जी भण्डारकले उपासकहरू आफू पनि मानिसका खप्परका माला लगाउँथे र बडा सिद्धि प्राप्त भएका हुन्थे भनेर उल्लेख गरेका छन् (भण्डारक, १९६५ : १२८) । डा. रेग्मीले लिच्छविकालका अभिलेखका आधारमा अंशुवर्माकी रानीले पनि वनकाली भेगमै कुनै देवताको मूर्ति स्थापना गर्दा भैरवी या देवीको मूर्ति थापिसकेको हुन सक्छ भन्ने तर्क प्रस्तुत गर्नुभएको छ (रेग्मी, २०४७ : ८) । डा. रेग्मीको यो तर्क उपयुक्त नै लाग्दछ ।

पासुपतमतका संस्थापक नकुलीशलाई समेत भैरव भनेर सम्बोधन गरिएको छ । डा. रेग्मीले वाचस्पत्यम् ग्रन्थबाट यससम्बन्धी श्लोक उद्धृत गरेर यो विषयलाई अझ प्रस्ट पार्नुभएको छ :

**'नकुलीश : कालिपीठस्थे भैरवभेदे ।**
**नकुलीश : कालिपीठे दक्षपादांगुली मता ।'**

लिच्छविकालमा सामान्य चर्चा गरिएका भैरवको स्थापना मल्लकाल र शाहकालमा अझ व्यापक भएको देखिन्छ। भैरवका मूर्ति र भव्य मन्दिरहरूको स्थापना मल्लकालमा थुप्रै भएका छन् । इन्द्रजात्राको अवसरमा काठमाडौंका विभिन्न टोलबाट भैरवको मखुन्डो प्रदर्शन गर्ने र जात्रा गर्ने व्यापक प्रचलन छ । भैरवका ती मूर्ति र मखुण्डो काठ, माटो, ढुङ्गा र धातुबाट निर्मित छन् । जसमध्ये प्रमुख भैरव मूर्तिहरूको नाम यहाँ उल्लेख गरिन्छ- १. धातुको श्वेतभैरव, हनुमानढोका २.धातुकै भैरव, वटुटोल ३. माटोको भैरव, काष्ठमण्डप ४. काठको भैरव, नरदेवी ५. काठको भैरव, न्ह्यौखाटोल ६. काठको भैरव, मखनटोल ७. काठको भैरव, गणबहाल ८. काठको भैरव, द्वाकाबहाल ९. काठको भैरव, चिंकमुगल १०. काठको भैरव, बागबजार ११. काठको भैरव, केलटोल १२. काठको भैरव, नःघलटोल १३. काठको भैरव, झोछेँ १४. काठको भैरव, नक्साल १५. काठको पूरा शरीर बनाइएको जैसिदेवलको भैरव १६. काठकै पूरा शरीर बनाइएको नखा परवक्षी, कोहिटीको भैरव १७. प्रस्तरको भैरव मूर्ति, स्वयम्भू १८. प्रस्तरकै भैरव मूर्ति, किलागल १९. काठको शक्तिसहितको भैरव मूर्ति २०. आकाशभैरव, इन्द्रचोक आदि । जात्राको अवसरमा एक हप्तासम्म प्रदर्शन गरिने यी भैरवका मूर्तिबाहेक विशेष जात्राको कारणले पचलिभैरव, कलश र ठूलो भित्तिचित्रको रूपमा पूजित टीकाभैरव, एउटै प्रस्तरमा कुँदिएको कालो रङको डरलाग्दो अनुहार भएको कालभैरव, भक्तपुर दरबारक्षेत्रको राजा भूपतीन्द्र मल्लले स्थापना गरेको संवत् ८२७ शुक्ल अक्षयतृतीयाको भैरव मूर्ति, भक्तपुर ,सदाशिव चोकमा रहेका सत्रवटा काष्ठभैरव र एक प्रस्तरभैरव पनि उल्लेखनीय छन् ।

रूपमण्डनमा भीषण देवताहरूको प्रतिमा स्थापना गर्ने नियम तोकिएको छ । जसअनुसार :

**भैरवः शस्यते लोके प्रत्यायतन संस्थितः ।**

**न मूलायतन कार्यो भैरवस्तु भयङ्करः**

**नरसिंहो वराहो वा तथाऽन्ये ऽ पि भयङ्कराः।**

भैरव प्रत्यायतनमा स्थिर भएर नै लोकको कल्याण गर्दछन् । भैरवको मूर्ति मूलायतनमा स्थित गर्नु हुँदैन । भैरवको आकृति भयङ्कर हुन्छ, त्यसैले नरसिंह, वराह र यस्तै प्रकारका अनय देवता पनि भयङ्कर हुन्छन् (रूपमण्डन,२०२१ : ११३) ।

भैरव मूर्ति एउटा यस्तो प्रकारको शिवको उग्र मूर्ति हो, जसको कुनै एउटा निश्चित कथा छैन भनेर जे.एन्. बनर्जीले पनि स्वीकार गरेका छन् । मध्यकालको सुरुको खिचिङको एउटा भैरव मूर्ति, मध्यकालको अन्तिम समयको आशुतोष सङ्ग्रहालयको भैरव मूर्ति र कुकुर वाहन भएको वटुकभैरव मूर्तिको संक्षिप्त चर्चा र चित्र पनि बनर्जीले छपाएका छन् (बनर्जी, १९८५ : ४८१-६२) । टी.एन्.गोपीनाथ रावले शिवका मूर्तिहरूको वर्गीकरण गर्दा संहार मूर्तिअन्तर्गत (क) कामान्तक मूर्ति (ख) गजासुरसंहार मूर्ति (ग) कालारि मूर्ति (घ) त्रिपुरान्तक मूर्ति (ङ) सर्भेष मूर्ति (च) ब्रह्मशिरच्छेद मूर्ति (६) भैरव, वटुकभैरव, सभर्नाकर्षणभैरव, चौसठ्ठी भैरव आदि विभिन्न उपशीर्षकअन्तर्गत व्याख्या गरेका छन् ।

भैरवको प्रतिमा र चित्रहरू अध्ययन गर्दा एउटा विशेषता के देखिन्छ भने शिरमा सधैँ चन्द्रमा हुन्छन् । शिवको सोमसिद्धान्त सम्प्रदायको प्रभाव प्रस्ट रूपमा भैरवको यस्तो मूर्तिले देखाउँछ । चन्द्रशेखर मूर्तिमा शिवको जटामा चन्द्रमा अनिवार्य रूपले बनाइन्छ । डा.रेग्मीले पनि यो कुरालाई स्वीकार गर्दै उपत्यकाका भैरव मूर्तिहरूका शिरमा चन्द्रमा बनाइएका हुन्छन्, जुन सोमसिद्धान्त सम्प्रदायको प्रभावको सङ्केत हो भनेका छन् (रेग्मी,२०३० : ४७-८) ।

काठमाडौँ उपत्यकामा मल्लकालका भैरवका थुप्रै मूर्ति छन् । पाटनको तुषाहिटी (सुन्दरी चोक) मा मात्रै दस-बाह्रवटा भैरवका विभिन्न रूपका मूर्तिहरू छन् । शुक्रसागर श्रेष्ठले प्राचीन नेपाल नामक पत्रिकामा पाटनको सुन्दरीचोकका भैरवहरूको नाम यसरी दिएका छन्- (क) उन्मत्तभैरव (ख) असिताङ्गभैरव र शक्ति ब्रंह्मायणी (ग) रूरूभैरव र शक्ति माहेश्वरी (घ) तण्डभैरव र शक्ति कौमारी (ङ) क्रोधभैरव र शक्ति वैष्णवी (च) वटुकभैरव (छ) दशवक्त्रभैरव (ज) एकाशयभैरव (ञ) नरसिंहभैरव (श्रेष्ठ, जुन १९९६ : ८-९ २०)। ने.सं.७६७ (इ.सं.१६४७) मा निर्माण भएको यो सुन्दरीचोकमा भैरव मूर्तिको प्रचुरता देख्दा मल्लकालमा यस सम्प्रदायको व्यापकताबारे प्रस्ट थाहा हुन्छ ।

वज्राचार्यले मूर्तिमा विशुद्धिवादको चर्चा राम्ररी गरेका छन् । तान्त्रिकहरूको दृष्टिमा शिव रौद्र र बीभत्समा प्रतिबिम्बित भएर मूर्तिकारको हातबाट निस्कँदा एक भयानक डरलाग्दा भैरवका रूपमा खडा भए, जुन भैरव अत्यन्त लोकप्रिय

भएर अनेक रूपमा खडा भएका छन् । यस प्रकार शिव विशुद्धिवादको प्रवाहमा बग्दा तिनले अनेक अलौकिक रूप धारण गरे (वज्राचार्य, नो.डे. : ११०) ।

मूर्तिहरूको वर्णन गर्दा तालमानको कुरो उठाउनुपर्दछ । रूपमण्डनमा पनि विस्तृत ढङ्गले यसको उल्लेख गरिएको छ । तालमानेन मूर्तय: शीर्षकअन्तर्गत एक भागमा कीर्तिमुख, दुई भागमा पक्षी, तीन भागमा हात्ती, चार तालमा किन्नर र घोडा, पाँच तालमा बसेका देवता, वामन, गणको प्रतिमाको मान छ ताल तथा वृष र मुनष्यको प्रतिमा सात तालमा बनाउनुपर्ने वर्णन छ । रूपमण्डनमै अन्य विभिन्न मूर्ति निर्माण गर्ने नियम पनि सङ्कलित छन्, जसअनुसार पार्वतीदेवी आठ तालमा तथा अन्य सबै देवता नौ तालमा बनाउनुपर्दछ । दश तालमा भने राम, बलि, रुद्र तथा निजको प्रतिमा बनाउनुपर्दछ । यस्तै गरेर स्कन्द, हनुमान, भूत र चण्डिका एघार तालमा र बाह्र तालमा बेताल र तेह्र तालमा राक्षसको प्रतिमा बनाउनुपर्दछ । यस्तै चौध तालमा दैत्य, पन्ध्र तालमा भृगु तथा सोह्र तालमा क्रूर देवताको प्रतिमा बनाउनुपर्दछ (रूपमण्डन, २०११:११५-१६) । यस्तै गरेर मनवज्रले पनि तालको सूची आफ्नो पुस्तक 'नेपालको मध्यकालीन कला' मा दिनुभएको छ (वज्राचार्य, नो.डे : ३११-१२) ।

विद्वान् यदुवंशीले शैव मत नामक ग्रन्थमा सारै राम्रोसँग शिवका रौद्र रूप, सौम्य रूप र भैरवका बारेमा चर्चा गर्नुभएको छ । वैदिक रुद्रको उग्र रूप बिस्तारै सौम्य रूपमा परिणत हुँदै गए पनि पूर्ण रूपमा लुप्त भने भएको थिएन, त्यसैले वेदोत्तर कालमा जब त्रिमूर्तिको कल्पना गरियो, तब शिवलाई पूर्ण रूपमा संहारकारी बनाइयो । उग्र रूपमा शिवलाई क्रूर, भयावह र महानाशकारी देवता मानिएको छ । यस रूपलाई चण्ड, भैरव, महाकाल, इत्यादि उपाधि दिइएको छ । यदुवंशीले एघारौँ शताब्दीमा लेखिएको कृष्ण मिश्रको 'प्रबोधचन्द्रोदय' नाटक प्रसङ्ग ल्याएर विभिन्न धार्मिक मत र सम्प्रदायका पाखण्डी अनुयायीलाई व्यङ्ग्य गरिएको कुराको उल्लेख गरेका छन् । उनको नाटकको एउटा पात्र कापालिकको चित्रण सारै विस्तृतसँग गरिएको छ । भैरव रूपमा शिवको पूजाआराधना गर्दा नरबलिको पनि उल्लेख छ । भक्तहरूले शिवलाई भैरव रूपमा पूजा गर्ने र नरबलिको छिन्नमस्तकबाट निस्किएको रगत नै पूजाको रूपमा चढाउने विधानको पनि चर्चा त्यहाँ परेको छ (यदुवंशी, १९९५ : ९५-१५७) ।

भैरव भैरोको रूपमा गाउँ र सहर सर्वत्र पूजित छन् । गढवालको लोकसाहित्यमा मत्स्येन्द्रनाथ, गोरखनाथ र कौल सम्प्रदायका देवतालाई भैरवको रूपमा लिइन्छ । यस्तै पञ्चमुखी शिवको दक्षिण अघोर मूर्ति भैरवको रूप मानिन्छ र त्यहाँ विशेष पूजामा बलि चढाउने प्रथा पनि छ ।

एउटै देवताका विविध वाहनसहितका मूर्ति र चित्रहरूमध्ये भैरवका नै सबभन्दा बढी मात्र प्राप्त छन् । संहारकारी देवता शिवको उग्र रूप नै भैरव हो । विविध जनावर र पक्षीहरू वाहन भएको भैरवको टाउको नै कुकुरको पनि हुन्छ

भनेर जोन गारेटले A Classical Dictionary of India मा वर्णन गरेका छन् । नेपालमा भने कुकुरको टाउको नै बनाइएको भैरवको मूर्ति भने प्राप्त छैन । घोडाको शिर भएको चित्र भने छ । नेपालका विभिन्न स्थानमा प्राप्त भैरवका मूर्तिसँगै जोडिएका प्रसङ्ग पनि चाखलाग्दा छन् । पाटनको लगनखेलस्थित तथाकथित अशोक स्तूपको पूर्वतिर वटुकभैरवको मन्दिर छ । प्रचलित विश्वासअनुसार कुनै बेला भैरवले बिरालाको रूप लिएर बच्चाहरूलाई तर्साउने र खानेसमेत गर्दथे । त्यसैले त्यो भैरवस्थाननजिकैको बस्तीबाट मानिसहरू बसाइ सरेर मङ्गलबजार भेगमा गए । त्यसैले पाटनको त्यो क्षेत्रलाई 'अतिया दे' अर्थात् बिरालोले उजाड पारेको देश पनि भनिन्छ । हरिराम जोशीले बिरालाको आकृतिको मूर्ति मन्दिरको मूल ढोकाको दायाँतर्फ रहेबाट यो किंवदन्ती पुष्टि हुने कुरा व्यक्त गर्नुभएको छ (जोशी, भैरु पूजा, अप्रकाशित लेख) । यस्तै कीर्तिपुरको बाघभैरव मन्दिरमा स्थापना गरिएको बाघरूपी भैरवका बारेमा पनि विभिन्न किंवदन्ती सुन्न पाइन्छ । गोठाला केटाकेटीहरूले एउटी केटीलाई मात्रै नखेलाएर एक्लै पारेको बेलामा तान्त्रिकले नौ वर्षकी ती कन्या केटीलाई प्राणप्रतिष्ठा गर्ने विधान सिकाएपछि त्यहीअनुरूप खेल्दाखेल्दै बनाएको माटोको बाघमा तिनले प्राणप्रतिष्ठा गरेको किंवदन्ती प्रचलित छ । अनुसन्धानका क्रममा विभिन्न किंवदन्तीहरूको पनि ठूलो भूमिका हुने भएकाले त्यस्ता लोककथाले पनि यहाँ स्थान पाएका छन् ।

भक्तपुर चित्रसङ्ग्रहालयमा अठारौँ शताब्दीका शक्तिसहितका विभिन्न वाहन भएका भैरवका सुन्दर चित्रहरू पनि प्रदर्शित छन् ।

एकदेखि तेह्रवटा शिर भएका भैरवका आकर्षक चित्रहरूमा विभिन्न वाहनहरू देखाइएका छन् । कुकुर, बनेल, मृग, परेवा, सुगा, सारस, हाँस, बाघ, घोड़ा वाहन बनाएर विभिन्न भैरवका भयावह अनुहार देखाउन कलाकार सफल भएका छन् । एउटा भैरवको त घोडाकै शिर राखिएको पनि छ । अठारौँ शताब्दीका यी भैरवका चित्रहरूबाट पनि धेरै नयाँ तथ्यहरू जान्न सकिन्छ । यी चित्र र मूर्तिहरू प्रतिमाविज्ञानका ग्रन्थमा उल्लेख भएअनुरूप नै निर्मित छन् । विष्णुधर्मोत्तरमा भैरवको मूर्ति निर्माण गर्दा पालन गर्नुपर्ने नियम यस्तो बताइएको छ- भैरवको मूर्तिमा पेट पुट्ट बाहिर निस्केको, गोलो र पहेँलो आँखा, मुखबाट दाह्रा निस्किएको, नरमुण्डको माला लगाएको र सर्पको आभूषण लगाएको हुनुपर्दछ । भैरवको शरीरको रङ पानी भएको बादलजस्तै हुन्छ र उनले गजचर्म (हात्तीको छाला) ओढेका हुन्छन् । सबै हातमा विविध आयुध कुँदिएका हुन्छन् । नङ तीखो हुन्छ र छेउमै बसेकी पार्वतीलाई सर्पले तर्साउन लागेको देखाइन्छ ।

**लम्बोदरं तथा कुर्याद्वृत्तपिङ्गल लोचनम् ।**
**द्रष्टाकरालवदनं फुल्लनासापुटं तथा ॥**
**कपालमालिनं रौद्र सर्वतः सर्पभूषणम् ।**
**व्यालेन त्रायसन्तं च देवी पर्वतनन्दिनीम् ॥**

**सजालम्बुदसङ्काशं गजचर्मोत्तरच्छदम् ।**
**बाहुभिर्बहुभिर्व्याप्तं सर्वायुधविभूषणैः ॥**
**बृहत्सालप्रतीकाशैस्तथा तीक्ष्णनखैः शुभैः ।**
**साचीकृतमिदं रूपं भैरवस्य प्रकीर्तितम् ॥**
(वि.ध.पु. ५९ : १-४)

विभिन्न मूर्तिहरू र चित्रहरूबाहेक मन्दिरका टुँडालहरूमा पनि भैरवका एकल र शक्तिसहितका मूर्तिहरू कुँदिएका छन् । पाटन सङ्ग्रहालयमा प्रदर्शित विभिन्न टुँडालहरूमध्ये शक्तिसहितको भैरवको आकृति कुँदिएको एउटा टुँडाल विशिष्ट कलाकृतिले गर्दा चर्चामा छ । योगीको रूपमा मान्यता पाएका शिवलाई शक्तिसहित विभिन्न अवतारमा दर्साउनु शैव दर्शनको एउटा विशिष्ट गुण हो । परमेश्वरी शिवा र परमेश्वर शिवको यथार्थ स्वरूपबारे शिवपुराणमा यस्तो वर्णन छ- जसरी चन्द्रमा र उनको चाँदनीमा केही फरक छैन, त्यस्तै शिव र शिवामा केही अन्तर सम्झनु हुँदैन । जसरी चन्द्रिकाबिना चन्द्रमा शोभित हुँदैन, त्यस्तै शिव पनि शक्तिबिना सुशोभित हुँदैनन् । सूर्यदिव प्रभाबिना र प्रभा सूर्यदेवबिना रहँदैनन्, त्यस्तै शक्ति र शत्तिमान्को सधैं एक-अर्काको अपेक्षा हुन्छ । शिवबिना शक्ति र शक्तिबिना शिव रहन सक्तैनन् ।

**चन्द्रो न खलुभात्येष यथाचन्द्रिकया विना ।**
**नभाति विद्यमानो ऽपि तथा शक्त्या विना शिवः ॥**
**प्रभया हि विना यद्वम्भानुरेष न विद्यते ।**
**प्रभात भानुना तेन सुतरां तदुपाश्रया ॥**
**एवं परस्परापेक्षा शक्तिशक्तिमती स्थिता ।**
**न शिवेन विना शक्तिर्न शक्त्या च विना शिवः ॥**
(शि.पु.वा.स.उ.ख. ४, १०, १२)

प्रसिद्ध स्वयम्भू स्तूपको उत्तरपश्चिमपट्टि रहेको हलचोकमा स्थापित भैरवपीठको एउटा छुट्टै महत्त्व छ । खुला देवस्थानमा गणेश, शिव, पार्वती र वनदेवी पनि शिलाकै रूपमा स्थापित छन् । शयन रूपमा रहेको शिलाको पृष्ठभागमा खोपा र खोपामाथि तोरण कुँदिएको छ । राजपुतवार पुजारी रहने व्यवस्था भएको यो हलचोक भैरवको बाह्रवर्षे नाचका साथै प्रत्येक वर्ष विभिन्न पर्वमा नाच निकाल्ने प्रथा कायमै छ । इन्द्रजात्रामा आठ दिनसम्म, घोडेजात्रामा र दसैंको नवमीमा पनि हलचोकभैरवको नाच निकाल्ने प्रथा कायम छ । भैरवस्थानमा पञ्चबलि दिने प्रथा छ र पूजा गर्दा पञ्चमकार विधिबाट गरिन्छ । विभिन्न भाकल गर्ने र भाकल पूरा भएका भक्तजनले पनि रक्सी, समय्बजी, हाँसको फूल, माछा, मासु र रोटी अर्पण गरेर पूजा गर्दछन् । भैरवको पीठ रहेको ठाउँभन्दा केही अग्लो स्थानमा भैरवका मखुन्डा, वस्त्रहरू दराजमा राखिन्छ । वि.सं.२०३४ सालमा त्यहाँ घरमै राखिएको भैरवको मुकुट चोरिएको थियो । हाल भैरवका २८ वर्षीय पूजारी राजपुतवार मन्दिरको आयस्ता कम

भएकाले दैनिक खर्च चलाउन पनि गाह्रो भएको बताउँछन् । तीन मुरी धान आउने खेतबाटै पर्वपर्वमा गर्नुपर्ने धार्मिक कार्य सम्पन्न गर्नुपर्दछ ।

भैरव, चण्डी र कुमारी तीन जना मुख्य पात्र रहने हलचोकभैरवको नाच हेर्न ठूलो घुइँचो लाग्दछ । बाह्र वर्षमा निस्कने भैरवनाचमा भने पार्वती, गङ्गा, आकाशदेवी, वाराही, दक्षिणकाली, महादेवी आदि पात्रहरू पनि समावेश हुन्छन् । मुख्य पात्र भैरवको मखुन्डो (ख्वापा) को र वस्त्रको रङ गाढा नीलो हुन्छ भने चण्डी र कुमारीका राता कान, घाँटी, नाडी र कम्मरमा चाँदीका विभिन्न गहना पनि लगाइएका यी विभिन्न पात्रहरूमा देवता चढ्ने विश्वास गरिन्छ । देवता चढेको बेलामा बाटोमा भेटिएका हाँस, कुखुरा, बोका समातेर भैरवले रगत पिउन सक्तछन् ।

काठमाडौँ उपत्यकाबाहेक नेपालका अन्य क्षेत्रबाट पनि यस पीठमा भैरवलाई भाकल गर्न र भाकल पूर्ण भएपछि पूजा गर्न मानिसहरू आउने गर्दछन् । ताहाचल निवासी महेन्द्रविलास वज्राचार्य (४५ वर्ष) ले आफ्नी आमासँगै यस भैरवपीठमा आफ्ना ७५ वर्षीय बाबुको बिग्रँदो स्वास्थ्य छिट्टै सप्रने आशामा पूजा गर्न आएको कुरा बताए ।

भैरवका विविध मूर्तिका क्रममा हलचोकको आकार नभएको भैरवपीठको जति महत्त्व छ त्यति नै पाटनको कुम्भेश्वरस्थानमा रहेको पूर्ण कदको काठको उन्मत्तभैरवको पनि छ । करिब ६ फिट अग्लो, कालो रङले पोतिएको काठको उन्मत्त भैरवको यो मूर्तिमा पनि विभिन्न कपालपात्र, खट्वाङ्ग, नरमुण्ड, खड्ग, डमरु लिएका हात देखाइएको छ भने दुई हात बिन्दुमुद्रामा छन् । भुइँमा सुतेको अवस्थामा बेताल पनि काठको नै कुँदिएको छ । काठको उन्मत्तभैरव स्थापना गरिएको गर्भगृहमै गणेश, कुमार र देवीका सानासाना मूर्ति पनि स्थापना गरिएका छन् । भैरवको मूर्ति स्थापना गरिएको मन्दिरको बाहिरी पेटीमा मल्लकालीन शिलालेख, प्रस्तरका भक्तभक्तिनीका मूर्ति पनि छन् । उन्मत्तभैरव स्थापना गरिएको मूल ढोकामा राखिएको तोरणमा ६ वटा हात भएका भैरव, गणेश र शक्ति पनि कुँदिएका छन् । काठमाडौँ उपत्यकामा निर्माण गरिएका मन्दिर र विहारहरूमा ढोकामाथि स्थापित अर्धचन्द्राकार तोरणमा गरुडले दुवै खुट्टाका नङ्ग्राले नागनागिनी च्यापेको दृश्य व्यापक रूपमा देखाइन्छ । यो तोरणमा पनि दर्साइएको छ । पूर्ण कदको काठको कालो भैरव मूर्तिलाई पनि विभिन्न भाकल पूर्ण गर्न पूजा गर्ने चलन छ ।

काठमाडौँ उपत्यकामा सादा ढुङ्गा मात्रै स्थापना गरेर भैरवको रूपमा पूजा गर्ने प्रचलन, शिर मात्रै दर्साएर कीर्तिमुख रूपमा र सम्पूर्ण शरीर कुँदेर उन्मत्त रूपमा भैरवको पूजाका साथसाथै मन्दिरको भित्तामा पनि ठूला आकारका भैरवहरू कुँद्ने चलन छ । मन्दिरको भित्ताका बाहिरी पाटामा कुँदिएका भैरव चित्रमा पशुपति, जयवागीश्वरी मन्दिरका चित्र, बनेपाको चण्डेश्वरी मन्दिरको भैरव चित्र र लेलेको टीकाभैरवको मुहार मात्रै कुँदिएका चित्र पर्दछन् । जयवागीश्वरी मन्दिरको भित्तामा कोरिएको चित्र बाह्रबाह्र वर्षमा पुन: बनाउने र रङरोगन गर्ने प्रचलन छ । २०५८

सालको माघमा भैरवको चित्र कोर्ने र रङ लगाउने कार्य गरिएको थियो । आठवटा शिर भएको नरमुण्डमाला र दुई हात बिन्दुमुद्रामा दर्साइएको छ । जयवागीश्वरी मन्दिरमा हाल पूजारीको रूपमा कार्य गर्ने श्रीकृष्ण कर्माचार्य (४८वर्ष) का अनुसार मूल गर्भगृहमा स्थापना गरिएकी देवी सरस्वती, भैरव र आदि गणेशको नित्यपूजा गर्ने क्रममै भैरवको पनि बिहान र बेलुका पूजाआरती सम्पन्न गरिन्छ । यो मन्दिरमा पूजा गर्ने पूजारीको एक-एक महिनाको पालो तोकिएको हुन्छ र त्यो महिनाभर नै मन्दिरको चौघेरामा निर्माण गरिएको पाटीमै बस्नुपर्दछ । अधिकांश भैरवको चित्रमा कोरिने त्रिनेत्र, सर्पकुण्डल, सर्पहार, मुण्डमाला नै यो चित्रमा पनि छन् । भैरवको चित्रबाहेक पृष्ठभूमिमा सप्तलोक पानी र जमिनले छुटाएर देखाइएको छ । धार्मिक सहिष्णुताको राम्रो उदाहरण यो मन्दिरको चित्र र मूल ढोकामा पनि देख्न सकिन्छ । भैरवको चित्र पृष्ठभूमिमा सानो चैत्य र शिवलिङ्ग दुवै बनाइएका छन् । यो चित्रमा बाहेक जगवागीश्वरीको मन्दिरको मूल ढोका जाने सिँढीमा राखिएको ढुङ्गामा बौद्ध धर्मको प्रतीक चक्र र दुवैतर्फ मृग कुँदिएका छन् । त्यसैले यो मन्दिरको वातावरणलाई धार्मिक सहिष्णुताको प्रतीकका रूपमा पनि लिन सकिन्छ । यसरी उपत्यकामा भएका विभिन्न मूर्ति र चित्रकलाको नेपाली समाजमा छुट्टै महत्त्व छ ।

मानिसभन्दा मूर्तिहरू धेरै र घरभन्दा मन्दिरहरू धेरै भएको ठाउँ काठमाडौं उपत्यका हो । यहाँका गल्ली, धारा, पाटी, पौवा जतातते मूर्ति नै मूर्ति भेटिन्छन् । मूर्ति पनि बेग्लाबेग्लै सम्प्रदाय र धार्मिक कथा सँगालेका दुवैथरी छन् । नेपालमा प्रथम प्रामाणिक राजा मानदेवले सं. ३८९ (इ. ४६७) मा स्थापना गरेका तिलगङ्गा र लाजिम्पाटका दुईवटा त्रिविक्रम वामनका मूर्तिफलकमा एउटा सिङ्गै कथावस्तुलाई आकर्षक ढङ्गबाट मिलाएर कुँदिएको छ । यसरी नै शिवको पारिवारिक जीवन दर्साउने मूर्ति उमामहेश्वरफलकहरू लिच्छविकाल र त्यसपछि पनि प्रशस्त बने । पूर्वलिच्छविकालदेखि नै नेपाली कलाकारले मन पराएको विषयवस्तु उमामहेश्वरफलक हो । विभिन्न माध्यममा उमामहेश्वरका मूर्ति काठमाडौंमा थुप्रै बने । नेपाली कलाकारले कहिल्यै पनि विभिन्न आकारका उमामहेश्वर मूर्ति बनाउन थकाइको अनुभव गरेनन् । त्यसैले पूर्वलिच्छविकालदेखि शाहकालसम्म बनेका उमामहेश्वरका आकर्षक मूर्तिहरू थुप्रै छन् ।

शैव सम्प्रदायमा शिवलाई अमूर्त र मूर्त दुवै रूपमा देखाउने चलन छ । शिवलिङ्ग स्थापना गरेर पूजा गर्ने प्रचलन ज्यादै नै व्यापक छ । प्रशिद्ध तीर्थस्थलहरूमा शिवको लिङ्ग नै पूजा गरिन्छ । शिवलिङ्गजस्तै शिवलाई परिवारसँगसँगै देखाउने मूर्ति उमामहेश्वर पनि नेपाल र भारत दुवै स्थानमा निकै व्यापक देखिन्छन् । यस्ता प्रकारका मूर्तिहरूमा शिवलाई कैलास पर्वतमा एउटै वा पृथक् आसनमा पार्वतीसँगै बसेको देखाइन्छ । शिव र पार्वतीको शृङ्गारिक भाव दर्साउन उमामहेश्वरका केही फलकहरूमा शिवको काखमा पार्वतीलाई बसाएर शिवले अँगालो मारेको वा स्तन स्पर्श गरेको पनि देखाइन्छ ।

पशुपति अरुणधारा, रामचन्द्र मन्दिर (विष्णु मन्दिर) पूर्वको उमामहेश्वर, नवालीटोलको उमामहेश्वर, साँखु दुगहिटीको उमामहेश्वर, पाटन कुम्भेश्वर र गहिटीको उमामहेश्वर आदि उदाहरणको रूपमा देखाउने मूर्तिहरू हुन् । यी मूर्तिहरूमध्ये केही चोरी भइसकेको र केही फेला परेर प्रहरीको संरक्षकत्वमा रहेकाले अध्ययन र अनुसन्धान गर्न पुस्तकमा प्रकाशित फोटो र ती संरक्षित ठाउँमा अध्ययन गर्नुपर्दछ ।

नेपालका उमामहेश्वर मूर्तिहरूको कुरा गर्दा छिमेकी राष्ट्र भारतमा बनाइएका उमामहेश्वर मूर्तिको पनि सम्झना गर्नुपर्दछ । आफूले भारतका विभिन्न ठाउँमा गरेका भ्रमण र पुस्तकको अध्ययनबाट एउटा कुरा प्रस्ट हुन्छ, त्यो हो– उमामहेश्वरको मूर्ति निर्माण गर्ने कुरा नेपालमा भन्दा भारतमा पछि भएको हो । विशाल भारत राज्यमा बनाइएका विभिन्न प्रकारका उमामहेश्वरका मूर्तिहरू नेपालको भन्दा पछिको भएको कुरा कलापारखी लैनसिंह बाङ्देलले पनि स्वीकार गरेका छन् । नेपालमा पाइने प्राचीन उमामहेश्वरका मूर्तिलाई झन्डै इसाको दोस्रो शताब्दीसम्म लैजान सकिन्छ । उता भारतमा प्राप्त पुराना उमामहेश्वरका मूर्तिहरूमा कुनै पनि चारौँ शताब्दीभन्दा अघिका होलान् जस्तो देखिँदैन । काठमाडौँ उपत्यकामा प्राप्त उमामहेश्वर मूर्तिफलकलाई बनोट शैलीको आधारमा पहिलो, दोस्रो, तेस्रो चौथो र पाँचौँ भनेर क्रमिकरूपमा अध्ययन गर्न सकिन्छ । पहिलो अर्थात् सबैभन्दा प्राचीन उमामहेश्वर मूर्तिमा पतिपत्नीको रूपमा उमा र महेश्वर मात्रै दर्साइएका छन् । उदाहरणको रूपमा पाटन चामुण्डा, सिकुबही, अरुणधारा, पशुपति, सखोना र चाँगु छिन्नमस्ताका उमामहेश्वरलाई औँल्याउन सकिन्छ । त्यस्तै कुमार र तीन जना मात्रै गणहरूको उपस्थिति देखाइएको पशुपति राममन्दिरको पूर्वतर्फको शिवमन्दिरको प्राङ्गणको उमामहेश्वर, कुम्भेश्वरको बगैँचा र भैरव मन्दिरको बाहिरी कुनामा स्थापित मूर्ति आदि पर्दछन् । त्यस्तै गणहरूका सङ्ख्यामा वृद्धि, गङ्गाको उपस्थिति भएका उमामहेश्वरफलकहरू कुम्भेश्वर धारा, पाटन पुरातत्त्व बगैँचा आदि स्थानमा छन् । चौथो क्रममा छत्र, विद्याधर, परी, शिवलिङ्ग आदि कुँदिएका र आसनी तल दैनिक प्रयोगका सामान राखिएका उमामहेश्वरफलक घैँबु, हाँडीगाउँ आदि स्थानमा पनि प्राप्त भएका छन् ।

प्रतिमाविज्ञानका विभिन्न पुस्तकमा उल्लेख भएका नियमभित्र रहेर नै नेपाली कलाकारले उमामहेश्वरका मूर्ति बनाएको देखिन्छ ।

नेपाली प्रस्तरकलामा उमामहेश्वर मूर्तिफलकको महत्त्वपूर्ण स्थान छ । उमामहेश्वर मूर्तिको उल्लेख नभएमा कलाको इतिहास र विकासबारेमा अध्ययन नै अपूरो हुन्छ । प्राचीन मूर्तिसँग दाँज्दा उन्नाइसौँ र बीसौँ शताब्दीका नेपाली मूर्तिकलाको स्तर क्रमशः खस्कँदै गएको प्रस्ट हुन्छ । पश्चिमी राष्ट्रमा पूर्वीय कलाप्रतिको बढ्दो आकर्षणका साथसाथै नेपालीहरूमा पनि कलाप्रतिको बढ्दो अभिरुचिले गर्दा कला संवर्धनसँग सम्बन्धित हाम्रा केही निकायहरूले त्यसतर्फ ध्यान दिएका छन् ।

नेपाली कलाकारले प्रोत्साहन पाएर काम गर्न पाएमा केही वर्षभित्र नै नेपाली मूर्तिकलाको उन्नत अवस्था हुन्छ ।

हर्षचरितमा शिव र विष्णु भैरव र नरसिंहको रूपमा अवतरित भएको उल्लेख छ ।

**हरइव कृतभैरवाकार :**

**हरिरिव प्रकटितनरसिंहरूप : ।**

(हर्षचरित १८७)

विष्णुका सबै अवतारको उद्देश्य नै दानवलाई दण्ड दिनु हो । शिवको भैरव अवतारको उदेश्य भने ब्रह्मालाई दण्ड दिनु देखिन्छ । सृष्टिकर्ता भएर पनि झूटो बोल्ने, घमण्ड गर्ने र अपशब्द बोल्ने भनेर शिवको भैरव स्वरूपले ब्रह्माको एउटा शिर छेदन गरेको वर्णन् पुराणमा छ । हिन्दू धर्मका ग्रन्थहरूमा देवताहरूको वर्णन जुन ढङ्गले गरिएको छ, त्योभन्दा पृथक् वर्णन शिवको पाइन्छ । सुगन्धित लेप शरीरमा घस्ने, बहुमूल्य गहना लगाउने, सुन्दर वस्त्र धारण गर्ने देवताहरूभन्दा विपरीत चरित्रका शिवले शरीरमा खरानी घस्ने, विष ओकल्ने, सर्प गहनाको रूपमा लगाउने र वस्त्रको रूपमा बाघ र हात्तीको छाला धारण गर्ने वर्णन शिवपुराणमा छ । समुद्रमन्थनपछि थुप्रै बहुमूल्य वस्तुहरू बाहिर आए । सर्तअनुरूप देवगण र दानवहरूले विभिन्न बहुमूल्य वस्तुहरू बाँडफाँड गरे । समुद्रमन्थनबाट अमृत र कालकूट विष दुवै निस्किए । अमृत देवताहरूले आफ्नो वशमा राखे । कालकूट विष निस्किएर पृथ्वीलाई ढाक्दै गएपछि मानिसहरूमा हाहाकार मच्चियो । मानवकल्याणका लागि शिवले कदम बढाए र कालकूट विष पान गरे । शिवको योगको शक्तिले गर्दा विष घाँटीभन्दा तल जान सकेन । विषको प्रभावले नीलो घाँटी भएका नीलकण्ठले परोपकारी कार्यमा चालेको कदमको पुराणहरूमा विस्तृत वर्णन आउँछ । शिवले वैवाहिक जीवन यापन गर्ने निर्णय पनि देवताहरूको कल्याणका लागि नै गरेका थिए । उमामहेश्वरफलकमा शिवको कल्याणकारी पक्ष नै प्रस्तुत गरिएको छ ।

लिच्छविकालका अभिलेखबाट पनि भैरव सम्प्रदायको प्राचीनताबारे केही कुरा थाहा पाइन्छ । पशुपतिको भग्न अभिलेखमा 'महाभैरव' शब्द आएको छ । अक्षर बिग्रेकाले अन्य कुरा थाहा पाइँदैन, तर शैव धर्मसम्बन्धी अभिलेख भएको र भैरवबारे केही बताएको भने प्रस्ट छ । नेपालको प्राचीन अभिलेखमा प्रकाशित छ, ' ... लोकोक्ष्र ... ह विगद्धराग ... कविक ... महाभैरव (जोशी, २०३०, पृ. ६२०-२१) ।

यस्तै मिति भएको गोरखा, गोरखनाथ गुफाको अभिलेखमा पनि भट्टारक वज्रभैरवको कारणपूजा आदिका लागि रकम छुटचाई व्यवस्था बाँधेको कुरा परेको छ । परमभट्टारक महाराजाधिराज श्री शिवदेवले संवत् १८८ मा राख्न लगाएको त्यस अभिलेख कैलासकूट राजप्रासादबाट जारी गरिएको छ । गोरखा राज्य काठमाडौं राज्यबाटै शासित देखिन्छ । अभिलेखको आधारमा कारणपूजा गर्दा बाजा बजाउने

चलन रहेको कुरा पनि थाहा पाइन्छ । हरिराम जोशीले यस अभिलेखमा प्रयोग भएको शब्द 'वज्रभैरवभट्टारक' बारे पनि मिल्दो तर्क प्रस्तुत गर्नुभएको छ । यसमा वर्णित वज्रभैरवलाई वज्रयानका देवताको रूपमा मान्नेहरू पनि छन् । तर वज्रभैरवले बौद्ध धर्मतिर मात्र इङ्गित गरेको छ भन्न सकिँदैन । किनभने रुद्रयामल ग्रन्थअनुसार चतुषष्ठी भैरवमध्ये एकको नाम वज्रहस्त रहेको छ, जसले वज्रभैरवको शैव धर्मसित घनिष्टतम सम्बन्ध रहेको कुरातिर निर्दिष्ट गर्दछ । प्रस्तुत अभिलेखको शिरोभागमा साँढेको आकृति अङ्कित गरिएबाट पनि उक्त तथ्यको पुष्टि हुन्छ (जोशी, २०३० : पृ. ५४१) । यी विभिन्न प्रमाणका आधारमा लिच्छविकालदेखि नै नेपालमा भैरवको पूजा गर्ने प्रचलन रहेको पाइन्छ ।

गढवालको लोकगीतको आधारमा मत्स्येन्द्रनाथ, गोरखनाथ, र अन्य नाथ सम्प्रदायका देवता सबै नै भैरव हुन् भन्ने बुझिन्छ ।

रच्छा करी वटुकनाथ भैरों,
चौडिया नारसिंह, ढौढिया नारसिंह, चौरंगी नारसिंह ।
प्रथम सुमिरौ नादबुद् भैरों द्वितीय सुमिरो ब्रह्मा भैरों ।
तृतीय सुमिरौ मच्छिंदर नाथ भैरों ...
तव मैं सुमिरौ कालि पुत्र कलुवा वीर ।

श्री गोरषनाथ वीर भैराउँ बाबा, जिनने गोरष पंजा, गोरष ध्यान गोरष की पिंडी औतार लिया ।

# शब्दावली

**त्रिशूल** : शिवका आयुधमध्ये प्रमुख आयुधमा त्रिशूल पर्दछ । देवताहरूको गहना आयुध र वाहनको साङ्केतिक अर्थ र सम्बन्ध प्रस्टसँग देख्न सकिन्छ । त्यस्तै शिवले हातमा त्रिशूल धारण गरेबाट पनि यो कुरा बुझ्न मद्दत हुन्छ । सृष्टि, पालन र प्रलयको स्वरूप त्रिशूलले झल्काउँछ । त्यसैले ब्रह्मा, विष्णु र महेश्वरको साङ्केतिक स्वरूप नै त्रिशूल हो भन्न सकिन्छ । तीनवटा धारिला चुच्चा भएको अस्त्रलाई त्रिशूल भनिन्छ । भैरव र शिवको मुख्य अस्त्र नै त्रिशूल हो । शिवबाहेक देवी, गणेशले पनि त्रिशूल धारण गर्दछन् ।

भारत र नेपालमा बनाइएका शिवका प्राचीन चित्र र मूर्तिहरूमा शिवको प्रधान शस्त्रको रूपमा त्रिशूल देखाइएको छ । थरीथरीका त्रिशूल छन् ।

कालकूट विष पान गरेपछि शिवलाई डाह, छटपटी भयो । शीतल ठाउँको खोजी गर्दै शिव गोसाइँकुण्डको पहाडमा पुगे । त्रिशूलले तीनवटा प्वाल पारेर जल बगेपछि त्यहाँ नै शिवले विश्राम गरेका वर्णन पुराणहरूमा छन् । शिवको त्रिशूलद्वारा निस्किएको जलधारा भएकाले गोसाइँकुण्ड उद्गम भई निस्केर बग्ने नदीलाई त्रिशूली भनिन्छ ।

**डमरु** : समातिने माझ भाग झीनो भएको, दुईपट्टि फराक मुखमा छालाले मोरेको र दुई तुनामा झुन्डिएका गेडाले बजाइने, माटा, काठ वा धातुले बनेको बाजा भनेर नेपाली बृहत्कोषमा डमरुको वर्णन गरिएको छ । शैव दर्शनमा डमरु र त्यसबाट निस्कने आवाजको ठूलो महत्त्व छ । वाद्ययन्त्रको रूपमा मात्रै डमरुलाई नलिएर ब्रह्माण्डको सृष्टिमा यसको महत्त्वपूर्ण भूमिका देखाइएको छ ।

शिवका विभिन्न मूर्तिमा डमरु बनाइने नियम प्रतिमाविज्ञानका पुस्तकमा बताइएका छन्, जसमध्ये नटराज स्वरूपमा डमरुको प्रस्तुतिको विशेष महत्त्व छ । भौतिक संसारको सृष्टि नै डमरुको स्वरबाट भएको मानिन्छ । दुई त्रिकोणको मिलनबाट बनाइएको डमरुले स्त्री र पुरुषको एकाकारबाट नै सृष्टि हुने ध्रुवसत्य कुराको समेत सङ्केत दिएको छ ।

त्रिशूलको लामो लट्ठीमै डमरुलाई एकाकार रूपमा देखाइन्छ । शिव मन्दिरको गजुरमा त्रिशूल र डमरु पनि राख्ने चलन छ । शिव र उनका विभिन्न रूपका मूर्तिको हातमा डमरु बनाइन्छ ।

**खट्वाङ्ग** : उग्र स्वरूपका देवदेवीको हातमा पाखुरा वा नलीहाडबाट बनेको एउटा आयुध राखिएको हुन्छ, जसलाई खट्वाङ्ग भनिन्छ । खुट्टाको घुँडाभन्दा तलको लामो हड्डीलाई नलीहाड भनिन्छ । त्यसैको माथिल्लो भागमा नरखप्परको आकृति बनाएर उग्र देवदेवीले हातमा आयुधको रूपमा धारण गर्ने नियम प्रतिमाविज्ञानका पुस्तकमा पाइन्छ । चामुण्डा, महिषमर्दिनी, भैरव आदि उग्र स्वरूपको मूर्तिको हातमा (कपालपात्र) मानिसको शिरको कचौराजस्तो गहिरो हाड, संहार स्वरूपका देवदेवताले हातमा धारण गर्न खट्वाङ्ग बनाइन्छ ।

**खेतक** : ढालको मुख्य काम तरबारद्वारा गरिएका आक्रमण रोक्नु हो । खराब तत्त्व र त्यसको प्रभाव रोक्ने भनेर साङ्केतिक अर्थमा पनि ढाल देवदेवीको मूर्ति र चित्रमा बनाइन्छ ।

**भूतमाला (वैजयन्तीमाला)** : पाँच प्रकारका बहुमूल्य रत्नद्वारा बनाइएको मालालाई भूतमाला भनिन्छ । विष्णुको मन पर्ने मालामा यो पर्दछ । हीरा, मोती, माणिक, नीलो ढुङ्गा आदि बहुमूल्य रत्नद्वारा बनाइन्छ ।

**बाहुबल्य** : पाखुरामा लगाउने सर्पको गहना । अधिकांश शिवको मूर्ति र भैरवको मूर्तिमा पाखुरामा बाहुबल्य लगाएको देखाइन्छ ।

**केयूर** : पाखुरामा लगाउने गहना । अधिकांश देवदेवीको पाखुरामा लगाउने गहनालाई केयूर भनिन्छ ।

**दर्पण** : रति, पार्वती, गङ्गा, जमुना आदि देवीहरूको हातमा दर्पण राखिएको हुन्छ । शिवसँग ऐनाको सम्बन्ध बेग्लै तरिकाले दर्साइएको छ । सम्पूर्ण ब्रह्माण्ड नै शिवको छाया भएको साङ्केतिक अर्थ ऐनाले दिन्छ ।

**पत्रकुण्डल** : कपडा वा कागज, गोलो पारी बेरेर कानको प्वालमा छिराएर लगाउने गहनालाई पत्रकुण्डल भनिन्छ । फूलको पत्रको आकारको कुण्डल ।

**रत्नकुण्डल (मनिकर्निका)** :शिवको सौम्य मूर्तिमा रत्नकुण्डल लगाइन्छ । उमाको कानमा पनि रत्नकुण्डल देखाइन्छ ।

**सिंहकुण्डल** : सिंहको टाउको आकारको कुण्डल बनाएर कानमा लगाउनेलाई सिंहकुण्डल भनिन्छ । प्राय : सहायक देवताले सिंहकुण्डल लगाउने चलन छ ।

**पद्मकुण्डल (पद्मपत्र)** : कमलको फूलको आकारको कुण्डललाई पद्मकुण्डल भनिन्छ ।

**मकरकुण्डल** : हात्तीको सुँढको आकारको कुण्डल, हाँत्तीको सुँढ र माछाको शरीर भएको पनि हुन्छ ।

**सर्प (नाग) कुण्डल** : सर्पको आकारको कुण्डल पनि कानमा लगाइन्छ । शिव, भैरव र नागनागिनी आदिको कानमा सर्पकुण्डल बनाउने चलन छ ।

**सर्पकुचबन्ध** : स्त्रीहरूको छाती ढाक्न लगाइने वस्त्रलाई कुचबन्ध भनिन्छ । त्यस्तै नागिनीहरूले कम्मरभन्दा माथि सर्पकुचबन्ध वस्त्र लगाउँछन्, जसमा सर्पको आकार दिइएको हुन्छ ।

**इष्टलिङ्ग** : वीर शैवले घाँटीमा धारण गर्ने सानो लिङ्ग ।

**इष्टप्रदमुद्रा** : वरदमुद्राको अर्को नाम ।

**कपालमाला** : भरखरै काटिएको कपालसहितको मानिसको टाउकाको माला/शिवको संहाररूपको मूर्ति । चामुण्डा, दुर्गा, कालीको मूर्तिमा कपालमाला देखाइन्छ ।

**रुद्रभाग** : शिवलिङ्गको सबैभन्दा माथिल्लो भाग, सधैँ जलधारा बगाउनुपर्ने, पूजा पाउने भाग ।

**ब्रह्मभाग** : शिवलिङ्गको सबैभन्दा तल्लो भाग प्राय: देखिँदैन ।

**विष्णुभाग** : शिवलिङ्गको रुद्रभागभन्दा तल्लो भाग ।

**ब्रह्मसूत्र** : लिङ्गमा बनाइएको लामोलामो धार धर्सो ।

**करण्डमुकुट**: माथि सानो र क्रमिक रूपमा तल ठूलो हुँदै आएको हल्काखाले मुकुट/स्कन्द, आयुधपुरुषहरूको शिरमा देखाइन्छ ।

**कपर्द** : लामो कपाल ठाडो बनाएर कपालमाथि गरिने ढाँचा नै कपर्द हो । शिव, रुद्र, पुषन आदिको शिरमा कपालको यो ढाँचा पाइन्छ ।

**ज्वालाकेश** : आगोको ज्वाला ठाडोठाडो भएर माथितिर गएको जस्तै कपाल गएको देखाउने, शिव, भैरव, अग्निको मूर्तिमा यस्तो देखाइन्छ ।

**मेखला** : कम्मरमा पेटीजस्तै गरेर हिन्दू देवीहरूले लगाउने कन्दनी । परम्पराअनुसार आठवटा पत्र वा धागो हुनुपर्दछ । मेखला लगाएर दीर्घ आयु हुनेछ र खराब दृष्टिबाट बच्ने विश्वास गरिन्छ ।

**उत्तरीय** : गलबन्दीजस्तै कपडा घाँटीमा बेरेर अगाडिपट्टि झार्ने । विष्णु र ब्रह्माको चित्र र मूर्तिमा उत्तरीय देखाइन्छ ।

**रुद्राक्ष** : रुद्रको आँसुबाट उम्रेको रूखको पवित्र फल । एक मुखदेखि बाह्र मुखसम्मको रुद्राक्ष धारण गर्न सकिने नियम पुराणहरूमा पाइन्छ । एकमुखे रुद्राक्षको विशेष महत्त्व छ । शिवले रुद्राक्षको माला धारण गर्दछन् । शिवमन्त्रको जप रुद्राक्षको मालाले गर्नुपर्दछ ।

**गजचर्म** : शिव र भैरवको मूर्तिमा गजचर्म ओढेको देखाइन्छ । पौराणिक कथनअनुसार शिवले महिषासुरको छोरा गजासुरलाई मारेर छाला काटेर ओढे । काठमाडौँ उपत्यकाका अधिकांश भैरव मूर्तिमा शिरसहितको गजचर्म देखाइन्छ ।

**व्याघ्रचर्म** : शिवले बाघको छाला आसनीको रूपमा ओछ्याएको र कम्मरमा लगाएको देखाइन्छ । शिवले आफूलाई बाघको रूपमा छल गर्न आएको राक्षसलाई मारेर छाला धारण गरेको वर्णन शिवपुराणमा छ ।

**लिङ्ग** : साधारण चिह्न वा लक्षण । देवचिह्नको अर्थमा लिङ्ग शब्द शिवजीको लिङ्गका लागि नै प्रयोग हुन्छ ।

**अजिन** : जनावरको छाला । भैरव, चामुण्डा, दुर्गा, हयग्रीव आदिले लगाउने ।

**आयशूल** : शैव परिवारका देवताहरूले हातमा लिने आयुध ।

**आयुधपुरुष** : आयुधलाई मानवस्वरूप देखाइनु । त्रिशूल, अङ्कुश, पाश, शूल, वज्र, गदा, चक्र, पद्म आदि ।

**विल्वफल** : शिव र लक्ष्मीको हातमा रहने बेलफल ।

# परिशिष्ट 'क'

**तालमानेन मूर्तयः**

ग्रासवक्त्रमेकभागे द्वौ पक्षी कुञ्जरास्त्रयः ।
किन्नराश्वाश्चतुस्तालाः पञ्चाशितसुरावृषः[पञ्चासीनसुरावृषः] ॥१९॥
शूकरो वामनाश्चापि षट्तालो गणनायकः ।
सप्तभागाः प्रकर्तव्या वृषशूकरमानकाः [मानवाः] ॥२०॥
अष्टांशा पार्वती देवी सर्वे देवा नवांशकाः ।
दशतालो भवेद्रामो बलिरुर्ध्वो [रुद्रो] जिनस्तथा ॥२१॥
ताला एकादशस्कन्दो हनुमान् भूतचण्डिका ।
ताला द्वादश वेताला राक्षसाश्च त्रयोदश ॥२२॥
दैत्याश्चतुर्दशांशाः स्युर्भृगुरूपा ततोऽधिका [रूपं ततोऽधिकम्] ।
कालांशाः [कलांशाः] क्रूरदेवाः स्युरत ऊर्ध्वं न कारयेत् ॥२३॥

**षट्तालस्य**

मुखं तालद्वयं तस्य जठरं तत्समं भवेत् ।
गुह्यं वेदाङ्गुलम् ऊरू सप्त जङ्घा च तत्समा ॥२४॥
गुणाङ्गुलं भवेज्जानु पादः कार्यो गुणाङ्गुलः ॥
रसतालमिति प्रोक्तं सप्ततालमथोच्यते ॥२५॥

**सप्ततालस्य**

वक्त्रं तालप्रमाणं स्यात् कन्धरावङ्गुलत्रयम् ।
सार्द्धसप्ताङ्गुलं वक्षो मध्यां नवभिरङ्गुलैः ॥२६॥
सार्धसप्तनाभिमध्ये[मेढ्रं] ऊरूरष्टदशाङ्गुले [ऊरूअष्टादशाङ्गुलौ] ।
पादोत्सेधत्रिमात्रञ्च मनुजाः सप्ततालके ॥२७॥

**अष्टतालस्य**

अष्टतालेमुखं कुर्यात् तालं द्वादशमात्रकम्
ग्रीवास्य त्र्यङ्गुला कार्या हृदयं तु नवाङ्गुलम् ॥२८॥

मध्यं द्वादशमात्रं च नाभिमेढ्रे नवाङ्गुले
ऊरु [ऊरुः] स्यादेकविंशत्या जानु चैव गुणाङ्गुलम् ॥२९॥
जङ्घा तथैकविंशत्या पादमूलं गुणाङ्गुलम् ।

**नवतालस्य**

प्रतिमामुखमानेन नव भागान् प्रकल्पयेत् ॥३०॥
वेदङ्गुला भवेद् ग्रीवा भागेन हृदयं त्वधः ॥
नाभिर्भागेन मेढ्रे च भागमेकं प्रकल्पयेत् ॥३१॥
चतुर्विंशतिमात्रोरुर्जानु प्रोक्तं युगाङ्गुलम् ।
द्विभागेन समा जङ्घा पादस्तु चतुरङ्गुल : ॥३२॥
मुखस्यापि त्रिभागेण ललाटं नासिका हनु : ।
विस्तरे स्तनगर्भे तु द्वादशाङ्गुलमीरितम् ॥३३॥
तद्वाह्ये वेदवेदांशे कक्षे एकान्तरे ततः ।
सप्तसप्ताङ्गुलौ बाहू दैर्घ्ये च षोडशाङ्गुल : [ङ्गुलौ] ॥३४॥
करोऽष्टादशमात्रः स्याद् विस्तारो
रेणुनाङ्गुल : [विस्तारो ऽ ग्रेगुणङ्गुलः]
दैर्घ्ये सूर्याङ्गुलः पाणिर्विस्तारे पञ्चमात्रकः ॥३५॥
मध्यमन्वङ्गुलं व्यासे कटी प्रोक्ता जिनाङ्गुला ।
मूलएकादशोरु स्याज्जङ्घा प्रान्ते युगाङ्गुला ॥३६॥
चतुर्दशाङ्गुलः पाद स्ततोर्द्धे च युगाङ्गुला : [स्तदूर्ध्वे च युगाङ्गुलः] ।
कक्ष स्कन्धस्तदूर्ध्वे तु कर्तव्यश्चाष्ट मातृका : [मात्रकः] ॥३७॥
ग्रीवा त्वष्टाङ्गुला व्यासे पादः प्रोक्त : षडङ्गुल : ॥
षट्सप्ताष्ट नवांशान्तामुद्देशाश्च [नवांशाना] प्रदर्शिताः ॥३८॥
ज्ञेयो मानविभागश्च [गस्य] विस्तरः पूर्वशास्त्रतः ॥३९॥

(रूपमण्डन, प्रथम अध्याय १९-३९)

## परिशिष्ट 'ख'

# तालको तालिका

| दस तालको आङ्गिक अनुपात | आठ तालको आङ्गिक अनुपात | सात तालको आङ्गिक अनुपात | छ तालको सेनापतिको आङ्गिक अनुपात |
|---|---|---|---|
| शिर - ४ यव<br>मुख -१२ यव | ३ यव<br>१२ यव | ३ यव<br>१२ यव | २ यव<br>१२ यव |
| ग्रीबा - ४ यव | ३ यव | ३ यव | २ यव |
| देह - २६ यव | २२ यव | १९ यव | १६ यव |
| नितम्ब - ४ यव | १ यव | १ यव | १ यव |
| कटि - ४ यव | ३ यव | २ यव | २ यव |
| उरु - २६ यव | २२ यव | १९ यव | १६ यव |
| जानु - ५ यव | ३ यव | ३ यव | २ यव |
| जंघा - २६ यव | २२ यव | १९ यव | १६ यव |
| गुल्फ - ३ यव | १ यव | १ यव | १ यव |
| पार्ष्णि - ५ यव | ३ यव | २ यव | २ यव |
| बाहु - १८ यव | १४ यव | १२ यव | १० यव |
| प्रबाहु - १८ यव | १६ यव | १४ यव | १२ यव |
| करपल्लव-१२ यव | २२ यव | १० यव | ८ यव |

(मनवज्र वज्राचार्य, नेपालको मध्यकालीन कला : पृ. ३११)

# तालको तालिका

| छ तालको आङ्गिक अनुपात | पाँच तालको आङ्गिक अनुपात | चार तालको आङ्गिक अनुपात | तीन तालको आङ्गिक अनुपात |
|---|---|---|---|
| शिर - ३ यव | ३ यव | १ यव | २ यव |
| मुख -१२ यव | १२ यव | १० यव | ९ यव |
| ग्रीबा - ३ यव | ३ यव | १ यव | १ यव |
| देह - २१ यव | १२ यव | १२ यव | १२ यव |
| नितम्ब | | १ यव | |
| कटि - | | | |
| उरु - १३ यव | १२ यव | ९ यव | ४ यव |
| जानु - ३ यव | २ यव | १ यव | १ यव |
| जंघा - १३ यव | ११ यव | ९ यव | ४ यव |
| गुल्फ - १ यव | २ यव | १ यव | १ यव |
| करपल्लव | | ७ यव | |
| पार्ष्णि - ३ यव | ३ यव | २ यव | २ यव |
| बाहु | | ६ यव | |
| प्रबाहु | | ८ यव | |

(क्रियासङ्ग्रहबाट)

## परिशिष्ट 'ग'

# कीर्तिपुर बाघभैरवस्थानको ताम्रपत्र

१. सम्वत् ८११ माघ शुक्ल त्रयोदशि आदि-

२. त्यबार कुन्हु कुणबाहर न्हक्ने गुहया क-

३. र वनि कोटबारण दोहरपा लुभ्याल लुंध्व-

४. ज साहासन श्री ३ व्याघ्र भैलवप्रीतिन जुरो ॥

(धनवज्र वज्राचार्य, मध्यकालका अभिलेख)

## परिशिष्ट 'घ'

# कीर्तिपुर बाघभैरव मन्दिरको ढोकाको अभिलेख

१.

ॐ श्रेयोऽस्तु ॥ सम्वत् ८१४ माघ कृष्ण

२.

मासे कृष्णपक्षे षष्ठम्यायान्तिथौ

३.

स्वातिनक्षत्रे वृद्धियोगे सोमवास-

४.

ले, श्व कुन्हु क्वाठनायक विश्व

५.

नाथ भारोन श्रीश्रीश्री व्याघ्रेश्वर

६.

भट्टारिकासके सुवर्ण तोलन ख-

७.

सिंझ्याल गुंग्वाक दोहोरपा जुरो

८.

स्वजेष्ठ पुत्र रघुनाथ एतेसन

कल्याण होस् ने.सं. ८१४ (वि.सं. १७५०) माघकृष्ण षष्ठी, सोमबार स्वातिनक्षेत्र, वृद्धियोग, यस दिन क्वाठनायक विश्वनाथ भारोले, श्री ३ व्याघ्रेश्वर भट्टारकलाई सुनको तोरण, खापा, झ्याल, गुग्वांक चढाए। यसमा आफ्ना जेठा छोरा रघुनाथ पनि सम्मिलित थिए।

(धनवज्र, मध्यकालका अभिलेख)

## परिशिष्ट 'ङ'

# हनुमानढोका श्वेतभैरवको घाँटीमा कुँदिएको स्वर्णलेख

स्वस्ति श्रीसम्वत् १८५२ साल भाद्रशुक्लपक्षे द्वादश्यां तिथौ शुक्रवासरे धनिष्ठानक्षत्रे धृतियोगे एतस्मिन्दिने श्रीभैरवमूर्तिनिर्माणपूर्वक प्रतिष्ठा विहिता श्रीरणवहादुरभट्टारकेनेति श्रीशाके १७१७ शुभम् ।

(गौतमवज्र वज्राचार्य, हनुमानढोका राजदरबार)

# परिशिष्ट 'च'
# त्रिरत्नसौन्दर्यगाथा

सुन्दरानन्द वाणाले त्रिरत्नसौन्दर्यगाथामा श्री ५ रणबहादुर शाहले श्वेतभैरव मूर्ति स्थापना गर्नको हेतु प्रस्टयाएका छन् '............. श्री रणबहादुर साहबाट स्वाराट्तुष्टचै भन्नु इन्द्रयात्राको शोभा बढाउननिमित्त मत्स्य मांस मदिरा मुद्रा मैथुन मकार पंचका आलो रगत षान्या भयंकर रूप पनि नहुन्या सौम्य रूप पनि नहुन्या एस्ता मध्यम रूपका सुवर्णका शरभमुखनामा भैरवका निर्माण गर्दा भया. आफ्ना अमल्विषेका मज्जा मेय बोसो रगत आन्द्रा मासु इत्यादी षान्या प्राणीका जीउमा दु:ख दिन्या डाकिनी शाकिनी भूतिनी पिशाचीहरूका मूर्ति गर्नानिमित्त योगमूर्ति भयाका शरभमुख भैरव स्थापित गर्दा भया ।

(गौतमवज्र वज्राचार्य, हनुमानढोका राजदरबार)

## परिशिष्ट 'छ'

# शङ्खमूल सिकुबहीको उमामहेश्वर मूर्तिको अभिलेख

१. ॐ बहिर्देशाद्दक्षिणस्यां राजपुत्रवज्ररथनाम्नो.........
२. आसीत्तद्गोत्रजेनैकेन याश्च वाग्वत्या मणिमत्याश्च सन्धिदेशे ।
३. मातरः स्थापिता आसन् मृन्मयास्ता : कालक्रमेण चिरन्तनतयातिविशीर्ण्ण-भग्नपतितपाणिपादा जादा इत्थम्भूताश्चता अवलोक्य ....
४. नेन चा पाश्चात्परमधार्मिकेन वभ्रूवर्म्मनाम्नासामेक मातृणाम्प्र.......
५. फलोपभुक्तये दिवन्नीतवां (स) तदधुना तद्भ्रातुष्पुत्रस्य नित्यधर्माभिरतचेतस्कस्य परमभागवतस्य देशवर्म्मनाम्नो मात्रा पतिव्रतया...... ।
६. धर्म्मिष्ठया देशभट्टारिकया तस्वैव कालगतस्य वभ्रूवर्म्मणः स्वर्ग्गानन्त्याय मातापित्रोर्भर्तुश्र्चात्मनश्च पुण्याभिवृद्धये पुनरन्यथा
७. देव्यो मातरस्ताः शैल्यः कारिता इति संवद्वर्षशत ४९५ ।

## परिशिष्ट 'ज'

# श्री गणेशका बाहृ नाम

१. प्रथमं वक्रतुण्डं च एकदन्तं द्वितीयकम्
तृतीयं कृष्णपिंगाक्षं गजवक्त्रं चतुर्थकम्।
लम्बोदरं पञ्चमं च षष्ठं विकटमेव च
सप्तमं विघ्नराजेन्द्र धुम्रवर्णं तथाष्टमम्।
नवमं भालचन्द्रं च दशमं तु विनायकम्
एकादशं गणपतिं द्वादशं तु गजाननम्।
द्वादशैतानि नामानि त्रिसंध्यं य: पठेन्नर:
न च विघ्नभयं तस्य सर्वसिद्धिकरं परम्।

## परिशिष्ट 'ञ'

# गुणकामदेवको सं. १०७ (इ.सं. ९८६)को घैंबु उमामहेश्वरको अभिलेख

नमश्श्रीललितेशाय सर्व्वज्ञ त्रिगुणात्मने
देवात्मजवरेशाय भुक्तिमुक्तिप्रदायिने
राज्ये श्रीगुणकामदेव्व नृपतेस्सप्तोत्तदेव्दे शते
माघे मासि च रोहिणी बुधदि (ने) ....
श्रीमाणिग्वलके सुरालय कृतम्तस्छीवर्रोपात्मनः
पित्रोर्वन्द गुरोश्व भक्त जगतां स्वर्गापवर्गाप्तये

## परिशिष्ट 'ञ'

# शिवका ४८ नामहरू

शम्भु, ईश, पशुपति, शिव, शूली, महेश्वर, ईश्वर, शर्व, ईशान, शङ्कर, चन्द्रशेखर, भूतेश, खण्डपरशु, गिरीश, गिरिश, मृड, मृत्युञ्जय, कृतिवासा, पिनाकि, प्रमथाधिप, उग्र, कपर्दि, श्रीकण्ठ, शितिकण्ठ, कपालभृत, वामदेव, महादेव, विरूपाक्ष, त्रिलोचन, कृशानुरेता, सर्वज्ञ, धूर्जटि, नीललोहित, हर, स्मरहर, भर्ग, त्र्यम्बक, त्रिपुरान्तक, गङ्गाधर, अन्धकरिपु, ऋतुध्वंसिन्, वृषध्वज, व्योमकेश, भव, भीम, स्थाणु, रुद्र, उमापति ।

## परिशिष्ट 'ट'

# ६४ भैरवका नामहरू, आयुध र रङ

मुख्यमुख्य आठ भैरव र तीनका आठआठ भैरव गरेर ६४ भैरवको स्वरूप, वाहन, आयुध, रङको वर्णन शैव धर्मसम्बन्धी विभिन्न पुस्तकहरूमा दिइएको छ।
यहाँ तालिका प्रस्तुत गरिएको छ :

| क्र.सं. | भैरवका नामहरू | आयुधहरू | रङ |
|---|---|---|---|
| १ | अमिताङ्ग<br>१. असिताङ्ग २. विशालाक्ष<br>३. मर्तण्ड ४. मोदकप्रिय<br>५. स्वच्छन्द ६.विघ्नसन्तुष्ट<br>७. सचराचर ८. खेछर | त्रिशूल, तरबार, डमरु र पाश | सुनौलो |
| २ | रूरू<br>१. रूरू २. क्रोधदमस्त्र<br>३. जटाधर ४. विश्वरूप<br>५. विरुपाक्ष ६. नानारूपधर<br>७. महाकाय ८. वज्रहस्त | अक्षमाला, अंकुश, वीणा र पुस्तक | सेतो |
| ३ | चण्ड<br>१. चण्ड २. प्रलयान्तक<br>३. भूमिकम्प ४. नीलकण्ठ<br>५. विष्णु ६. कूलपलका<br>७. मुण्डपाल ८. कामपाल | अग्नि, गदा, कुण्ड, शूल | नीलो |
| ४ | क्रोध<br>१. क्रोध २. पिङ्गलेक्षण<br>३. अभ्ररूप ४. धरापाल<br>५. कुटील ६. मन्त्रनायक<br>७. रुद्र ८. पितामह | तरबार, ढाल, बन्चरो, लामो तरबार | धूवाँ |

| ५ | उन्मत्त<br>१. उन्मत्त २. वटुकनायक<br>३. त्रिनेत्र ४. शङ्कर<br>५. भूत ६. वरद<br>७. पर्वत ८. त्रिपुरान्तक | कुण्ड, ढाल,<br>परिध (गदा),<br>भिन्दिपाल | सेतो |
|---|---|---|---|
| ६ | कपाल<br>१. कपाल २. शशिभूषण<br>३. हस्तीचर्माम्बरधर ४. योगीश<br>५. ब्रह्मराक्षस ६. सर्वज्ञ<br>७. सर्वदेवेश ८. सर्वभूत ऋदिस्थित | कुण्ड, ढाल,<br>परिघ,<br>भिन्दिपाल | सुनौलो, पहेँलो |
| ७ | भीषण<br>१. भीषण २. भयहार<br>३. सर्वज्ञ ४. कालाग्नि<br>५. महारौद्र ६. दक्षिण<br>७. मुखर ८. अस्थिर | कुण्ड, ढाल,<br>परिध,<br>भिन्दिपाल | रातो |
| ८ | संहार<br>१. संहार २. अतिरिक्ताङ्ग<br>३. कालाग्नि ४. प्रियङ्कर<br>५. घोरनाद ६. विशालाक्ष<br>७. योगीश ८. दक्षसंस्थित | कुन्ड, ढाल,<br>परिध,<br>भिन्दिपाल | बिजुलीजस्तो |

## परिशिष्ट 'ठ'

# इन्द्रजात्रामा देखाइने आनन्दभैरवको पादपीठको भुवनलक्ष्मीको अभिलेख

१. शुभ ॥ नेपाले युगलाक्षिमूर्त्तिमिलिते सम्वत्सरे भाद्रके द्वादश्यां रविवासरे श्रवणभे पक्षे सिते शोभने साम्वानन्दसुभैरवस्वकलिता मूर्त्ति मनोज्ञा तपा या लक्ष्मीर्भ्भुवनादिकासुतयुता धन्या सतीनां वरा ॥ सम्वत् ८२२ भाद्रपदमासे शुक्लपक्षे द्वादश्यां तिथौ श्रवणनक्षत्रे शोभनयोगे यथाकरणमुहूर्त्ते आदित्यवासरे सिंहराशिगते सवितरि मकर

२. राशिगते चन्द्रमसि थ्व कुन्हु श्री ३ आनन्दभैरव श्री ३ आनन्दभैरवी श्री ३ कुमार स्वह्म मूर्त्ति श्रीश्रीभुपलक्ष्मी देवीन स्वपुरुष भूपालेन्द्र मल्ल देव स्वर्लोक जुयाव श्रीजयभूपालेन्द्र मल्ल देवस श्रीश्रीभुपलक्ष्मी देवी श्रीश्री भास्करमल्ल देवस नामन थ्व स्वम्ह देव लुन दयक इन्द्रयात्रान बोययात प्रतिष्ठा याङाओ तया दिन ॥ शुभं भूयात् ॥

(गौतमवज्र वज्राचार्य, हनुमानढोका, राजदरबार)

# सन्दर्भग्रन्थ


**संस्कृत पुस्तक**

**ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शिवपुराण, महाभारत, रामायण, विष्णुधर्मोत्तर, रूपमण्डन, मत्स्यपुराण, गरुडपुराण ।**

**नेपाली पुस्तक**

अमात्य, साफल्य, **काठमाडौं नगरायण**, काठमाडौं, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, २०३५ ।

आचार्य, श्रीराम (सम्पा.), **शिवपुराण**, बरेली, संस्कृति संस्थान, १९९६ ।

कोइराला, कुलचन्द्र, **नेपालका आराध्यदेव भगवान् श्री पशुपतिनाथ**, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, २०५१ ।

कोइराला, कुलचन्द्र, **धर्म, संस्कृति र परम्परा**, कुलचन्द्र कोइरालाको स्मृति प्रतिष्ठान, २०५२ ।

उप्रेती, ठाकुरकृष्ण, **शिवसंहिता**, काठमाडौं, भवानी उप्रेती, २०५४ ।

खनाल, मोहनप्रसाद, **नेपाली कला**, ललितपुर, साझा प्रकाशन, २०५२ ।

गुप्त दाऊदयाल, **शिव महिमा**, दिल्ली, पुस्तक महल, १९९३ ।

जोशी, हरिराम, **हिन्दू देवीदेवता**, काठमाडौं, श्री ५ को सरकार सञ्चार मन्त्रालय, २०४० ।

जोशी, हरिराम, **नेपालको प्राचीन अभिलेख**, काठमाडौं, ने.रा.प्र.प्र., २०३० ।

टण्डन, गोविन्द, **पशुपति क्षेत्रको सांस्कृतिक अध्ययन**, काठमाडौं, ऋरेन्द्रशमशेर र मञ्जु राणा, २०५३ ।

पाण्डेय, राजवली, **हिन्दू धर्मकोश**, लखनऊ, उत्तरप्रदेश, हिन्दी संस्थान हिन्दी समिति, प्रयाग, १९७८ ।

पोद्दार, हनुमानप्रसाद (सम्पा.), **संक्षिप्त शिवपुराण**, गोरखपुर, गोविन्द भवन कार्यालय, २०५२ ।

पौडेल, नयनाथ (सम्पा.), **भाषावंशावली**, नेपाल राष्ट्रिय पुस्तकालय, वि.सं. २०२० ।

पौड्याल, वीणा, **नेपाली मूर्तिकला र चित्रकला**, काठमाडौं, नेपाली इतिहास, संस्कृति तथा पुरातत्त्व विभाग त्रि. वि., २०५७ ।

पौड्याल, वीणा, **सर्वेश्वर महादेव**, काठमाडौँ, ठाकुरनाथ स्मृति गुठी, २०६० ।

वज्राचार्य, मनवज्र, **नेपालको मध्यकालीन कला**, काठमाडौँ, सूचना तथा प्रसार मन्त्रालय, (नो.डे.) ।

वज्राचार्य, गौतमवज्र, **हनुमानढोका राजदरबार**, काठमाडौँ, नेपाल र एसियाली अध्ययन संस्थान, २०३३ ।

वज्राचार्य, धनवज्र, **लिच्छविकालका अभिलेख**, काठमाडौँ, ने.ए.अ.सं., २०३० ।

वज्राचार्य, धनवज्र, मल्ल, कमलप्रकाश, **गोपालराजवंशावली**, नेपाल रिसर्स सेन्टर, १९८५ ।

वज्राचार्य, धनवज्र, **मध्यकालका अभिलेख**, काठमाडौँ, ने.ए.अ. केन्द्र, २०५६ ।

वज्राचार्य, धनवज्र, श्रेष्ठ, टेकबहादुर, **शाहकालका अभिलेख**, काठमाडौँ, ने.ए.अ. केन्द्र, २०३७ ।

भट्टराय, चूडानाथ, **पशुपति प्रत्यभिज्ञा**, काठमाडौँ, नेपाल राजकीय प्रज्ञा-प्रतिष्ठान, २०३५ ।

भट्टराई, गोविन्दप्रसाद, **मूर्तिकला**, काठमाडौँ, इल्या, २०४१ ।

बाङ्देल, लैनसिंह, **प्राचीन नेपाली मूर्तिकलाको इतिहास**, काठमाडौँ, ने.रा.प्र.प्र., २०३९ ।

मानन्धर, जीतबहादुर, **श्री गणेशाय नमः**, काठमाडौँ, तारादेवी मानन्धर, २०५१ ।

मानन्धर, जीतबहादुर, **काभ्रेपलाञ्चोकका केही देवीदेवतारू**, काठमाडौँ, तारादेवी, २०५३ ।

मिश्र, इन्दूमती, **प्रतिमाविज्ञान**, मध्य प्रदेश, हिन्दी ग्रन्थ अकादमी, १९७२, द्वितीय १९८७ ।

यदुवंशी, **शैव मत**, पटना, विहार, राष्ट्रभाषा परिषद्, १९९५ ।

राजवंशी, शङ्करमान (सं.), **भक्तपुर-शिलालेख-सूची**, काठमाडौँ, श्री ५ को सरकार, पुरातत्त्व र संस्कृति विभाग, सं. २०२० ।

रेग्मी, जगदीशचन्द्र, **नेपालको धार्मिक इतिहास**, काठमाडौँ, नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान, २०३० ।

रेग्मी, जगदीशचन्द्र, **काठमाण्डू शहर भाग** (१), शिव उपाध्याय, २०३१ ।

शाक्य, कुमार, **काठमाडौँका भैरव मूर्तिहरू**, एम.ए. शोधपत्र, त्रि.वि. संस्कृति विभाग, कीर्तिपुर, २०४३ ।

श्रेष्ठ, निर्मला, **ज्ञानेश्वर सांस्कृतिक क्षेत्र र आनन्दभैरव**, एम.ए. शोधपत्र, त्रि.वि. संस्कृति विभाग, कीर्तिपुर ।

श्रेष्ठ, शुक्रसागर, **कीर्तिपुरको सांस्कृतिक र पुरातात्त्विक इतिहास**, काठमाडौँ, नेपाल र एसियाली अनुसन्धान केन्द्र, २०५७ ।

श्रीवास्तव, वृजभूषण, **प्राचीन भारतीय प्रतिमाविज्ञान एवं मूर्तिकला**, वाराणसी विश्वविद्यालय प्रकाशन, १९९० ई. ।

श्रीवास्तव, बलराम (सं.), **रूपमण्डन**, वाराणसी, मोतीलाल वनारसीदास, वि.सं.२०२१ ।
कृष्णदास, क्षेमराज (सं.), **श्रीविष्णुधर्मोत्तरपुराणम्**, दिल्ली, नाग पब्लिसर, १९९८ ।
मन्नालाल, अभिमन्यु, **अमरकोश**, चौखम्बा विद्याभवन, वाराणसी, १९९९ ई. ।

## अङ्ग्रेजी पुस्तक

Pal P., **Nepal where the Gods are Young**, The Asia Society, 1975.
Bangdel, L.S., **Stolen Images of Nepal**, Kathmandu, Royal Nepal Academy, Nepal, 1989.
Bhandarkar, R.G., **Vaishnavism, Saivism and Minor Religious Systems**, Baranasi, Indological Book House, 1965.
Banerjea, J.N., **The Development of Hindu Iconography**, Delhi, M.M Publishers, 1985.
Coomarswamy, A.K., **History of Indian and IndonesianArt**, New York, Dover Publication Ins.,1965.
Kramrisch, S., **The Árt of Nepal**, New York, Asia Society, 1964.
Kramrish, Stella, **The Presence of Siva**, Prinction University Press, 1981.
Bangdel Lain S., **Inventory of Stone Sculpture of the Kathmandu Valley**, The Royal Nepal Academy, 1983.
Rao, G.P., **The Elements of Hindu Iconography**, Vol II, Part II, Motilal Banarsidas, 1983.
Mani Vettam, **Puranic Encyclopedia**, Delhi. M.B.P., 1993.
Krishna Dev **Images of Nepal**, New Delhi, Archaeological Survey of India, 1984.
Tyagi I.C., **Shaivism in Ancient India**, Meerut, Meenakshi Prakashan, 1982.
Aiyyar, C.V.N., **Origin and Early History of Shaivism**, Madras, 1936.
Subramaniam, K.R., **Origin of Shaivism and its History in the Tamil Land**, Madras, 1929.
Marshall, J.H., **Mohanjodaro and the Indus Valley Civilization**, 3 Vols., Delhi, 1973.
Burkitt, M.C., **The Old Stone Age**, Delhi, Rupa and Co., 1977.

## पत्रपत्रिका

पौडयाल, वीणा, 'विष्णुको वराह मूर्ति', **आकृति**, वर्ष २, अङ्क ३, २०५८ ।
पौडयाल, वीणा, 'उमामहेश्वर मूर्तिफलकका मुख्य दुई गणहरू भृङ्गी र नन्दी', **प्रज्ञा** पूर्णाङ्क ८८, वर्ष २९, २०५५ ।
पौडयाल, वीणा, 'ऐतिहासिक नगर सिमरौनगढ र त्यहाँको उमामहेश्वर मूर्ति', **गरिमा**, वर्ष १६, अङ्क ८, साउन, २०५५ ।
रेग्मी, वेदनाथ, 'नेपालका भैरवहरू', **गरिमा**, वर्ष, ७, अङ्क ७, २०४६ ।
प्रजापति, सत्यनारायण, 'भैरव र भक्तपुर', **रोलम्बा**, भोलम २, १९९१ ।
मानन्धर जीतबहादुर, 'चण्डेश्वरीका भैरव', **नेपाली संस्कृति**, वर्ष ४, अङ्क ३,२०४५ ।

मुनकर्मी, लीलाभक्त, 'भक्तपुरका राजा जगत्प्रकाश मल्ल र उनका निर्माणकार्यहरूमा वसन्तपुरका दरबारको ऐतिहासिकता', **रोलम्बा**, भो.१२, नं. ४, १९९२ ।

अमात्य, साफल्य, 'हलचोकको भैरव नाच', **नेपाली संस्कृति**, वर्ष, २,२०४२ ।

अर्याल मुकुन्दराज, 'विष्णुधर्मोत्तरपुराण र मूर्तिविज्ञान' **रोलम्बा**, भो. २०, जनवरी-जुन २००० ।

Shrestha, Sukra Sagar, 'Tusa Hiti', **Ancient Nepal**, Number 139, June 1976.

जोशी, हरिराम, 'मर्ध्यकालीन अभिलेख', **प्राचीन नेपाल**, सङ्ख्या ५३-५६, भदौ-चैत्र २०३६ ।

जोशी, हरिराम, 'विरूपाक्ष', **प्राचीन नेपाल**, सङ्ख्या ९२-९७, फागुन २०४२ माघ २०४३ ।

आचार्य, मोहनप्रसाद, 'नेपालमा सूर्य मूर्ति र उपासना, **प्राचीन नेपाल**, सङ्ख्या १२८-१२९, फागुन २०४८–जेठ २०४९ ।

Slusser, Mary, 'Dry-Lacquer or clay? preliminary Notes on a Neglected Nepalese Sculptural medium,' **Contributions to Nepalese Studies**, Vol. 23, Number 1, Jan 1996.

# उमामहेश्वर तथा भैरवका तस्वीरहरू



उमामहेश्वर, लुभु, तल्लो लाक्षी



उमामहेश्वर, अरुणधारा, पशुपति



उमामहेश्वर, राष्ट्रिय सङ्ग्रहालय



उमामहेश्वर, राष्ट्रिय सङ्ग्रहालय, छाउनी



उमामहेश्वर, अमरकान्तेश्वर, पशुपति



उमामहेश्वर, भस्मेश्वर, पशुपति



उमामहेश्वर, घँबु, पाटन



उमामहेश्वर, कुम्भेश्वर धारा



उमामहेश्वर (मृत्युञ्जय), कुम्भेश्वर



कालभैरव, हनुमानढोका



श्वेतभैरव, हनुमानढोका



आकाशभैरव, इन्द्रचोक



आनन्दभैरव, ज्ञानेश्वर



गणेश र शक्तिसहित भैरव (राष्ट्रिय सङ्ग्रहालय छाउनी)



आनन्दभैरव, इन्द्रजात्रा प्रदर्शन गरिने



भैरव, भक्तपुर, वसन्तपुर दरबार



भैरव, चण्डेश्वरी मन्दिर, बनेपा



राष्ट्रिय सङ्ग्रहालयको भैरव



भैरव, सम्भर,
राष्ट्रिय सङ्ग्रहालय, छाउनी



भैरव, सुखवर-सम्भर,
राष्ट्रिय सङ्ग्रहालय, छाउनी



भैरव (शक्तिसहित),
राष्ट्रिय सङ्ग्रहालय, छाउनी



भैरव, भक्तपुर, सदाशिवचोक



भैरव, सदाशिवचोक, भक्तपुर



भैरव, सदाशिवचोक, भक्तपुर



भैरव, सदाशिवचोक, भक्तपुर



भैरव, सदाशिवचोक, भक्तपुर



भैरव, सदाशिवचोक, भक्तपुर



शक्तिसहित भैरव, राष्ट्रिय सङ्ग्रहालय, छाउनी



## डा. वीणा पौडयाल

**जन्म** : असोज २०१३, कुपण्डोल, ललितपुर

**शिक्षा** : विद्यावारिधि (शैव मूर्तिकला), हिन्दू विश्वविद्यालय, बनारस (सन् १९९१)

**पेसा** : प्राध्यापन

**प्रकाशित कृति**

- हिन्दू डेथ राइट्स (सन् १९९९)
- नेपाली मूर्तिकला र चित्रकला (सन् २०००)
- सर्वेश्वर महादेव (सन् २००४)

**अनुसन्धान**

- काठमाडौं उपत्यकाका शिवलिङ्गहरू, नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रिवि
- विशालनगर क्षेत्रको अध्ययन, नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रिवि
- काठमाडौं उपत्यकाका विष्णु विभव मूर्तिहरू, नेपाल र एसियाली अनुसन्धान केन्द्र, त्रिवि
- काठमाडौं उपत्यकाका शिवसंहार मूर्तिहरू, मा.सा.अ.सं., डीनको कार्यालय, त्रिवि

**विभूषण** : महेन्द्र विद्याभूषण 'क' श्रेणी

**संलग्नता** :

- महासचिव, नेपाल महिला विकास प्रतिष्ठान (WDFN)
- महासचिव, जयपृथ्वीबहादुर सिंह अनुसन्धान उद्यान (RAFHAJ)
- संस्थापक सदस्य, नेपाल संस्कृति प्राध्यापक समाज (CUTSON)
- संस्थापक सदस्य, ह्युम्यानिस्टिक क्लब, नेपाल (HCN)
- संस्थापक सदस्य, प्रतिष्ठान महासङ्घ, नेपाल
- सदस्य, विश्व हिन्दू महासङ्घ, नारीजागरण
- सदस्य, साउथ एसियन्स फर ह्युमन राइट्स (SAHR)

**सम्प्रति** : त्रिभुवन विश्वविद्यालय

**सम्पर्क** : काठमाडौं– १६, नयाँबजार, फोन : ४३५९५३५

ISBN 99933-2-343-8







**मुद्रक** : साझा प्रकाशनको छापाखाना, पुलचोक, ललितपुर, फोन ५५२१०२३, फ्याक्स : ५५४४२३६